# गोपालराजवंशावलीको

## ऐतिहासिक विवेचना

धनवज्र वज्राचार्य

## द्वितीय संस्करणका सन्दर्भमा

धनवज्र वज्राचार्य नेपालको प्रामाणिक इतिहास लेखनको एक चिरपरिचित नाम हो । यस केन्द्रसँग आबद्ध रही लामो अवधिसम्म उहाँले गर्नुभएका अनुसन्धान कार्यहरू केन्द्रको मात्र नभएर मुलुककै लागि अमूल्य निधि साबित भएका छन् । उहाँका धेरै महत्त्वपूर्ण कृतिहरूमध्ये प्रा.डा. कमलप्रकाश मल्लसँग मिलेर तयार पारेको गोपालराजवंशावली वि.सं. २०४१ मा प्रकाशित भएको हो । गोपालराजवंशावली: घटना र विवेचनानामक प्रस्तुत पुस्तक सामान्य पाठकदेखि विषयगत अनुसन्धाताहरूका लागि पनि उत्तिकै महत्त्वपूर्ण रहेको छ । यसको प्रथम प्रकाशन यस केन्द्रले वि.सं. २०६४ मा गरेको हो । थोरै सङ्ख्यामा छापिएको पुस्तकको खोजी पुस्तकविक्रेता, विद्यार्थी, शिक्षक एवं अनुसन्धाताहरूबाट बारम्बार भएकोले यसलाई पुनः प्रकाशन गरिएको हो । प्रथम संस्करणमा प्रकाशित पुस्तकको सामग्री एवं साजसज्जा जस्ताको तस्तै राखिएको छ । नेपालको इतिहासमा चाख राख्ने जो कोहीका लागि यो पुस्तक महत्त्वपूर्ण सामग्री हुने हामीले अपेक्षा राखेका छौँ ।

नेपालको इतिहासको अन्धकारयुगको रूपमा सम्झँदै आएको नेपालको मध्यकालिक इतिहास लेखनका सन्दर्भमा गोपालराजवंशावली एक महत्त्वपूर्ण दस्तावेजको रूपमा आएको छ । यसर्थ, पुस्तकको महत्त्व भनेकै वंशावलीमा आएका प्रसंगलाई व्याख्या गरी सबैको सामु सरल र सरस भाषामा प्रस्तुत गर्नु हो । यस दृष्टिले पनि यो पुस्तक सर्वग्राह्य भएको छ । धनवज्र वज्राचार्य आज हाम्रो माझ हुनुहुन्न । तर नेपालको ऐतिहासिक अनुसन्धानमा उहाँले दिएको योगदानलाई यस केन्द्रले मात्र होइन मुलुकले नै सदा सम्झिरहनेछ । साथै धनवज्र वज्राचार्यको यस पुस्तकको पाण्डुलिपि केन्द्रलाई उपलब्ध गराउनुभएकोमा प्रा. डा. कमलप्रकाश मल्लज्यूप्रति पनि हामी त्यत्तिकै आभार रहेको छौँ । दोस्रो संस्करणको प्रकाशनका सन्दर्भमा क्रियाशील रहने सह-प्रशासक सुश्री दामिनी वैद्य एवं टङ्कनलगायत फर्मेटिङ्गमा अहोरात्र खट्ने यस केन्द्रका सहायक प्रशासक श्रीगोविन्द थापालाई म केन्द्रको तर्फबाट धन्यवाद नदिइरहन सक्दिनँ ।

वि.सं. २०६६ कार्तिक १ गते

यज्ञप्रसाद अधिकारी (पीएच.डी)
प्राध्यापक एवं कार्यकारी निर्देशक

# प्रकाशकीय

नेपालसम्बन्धी विविध पक्षहरू–खासगरी इतिहास, भाषा, मानवशास्त्र, समाजशास्त्र, पुरातत्त्व, राजनीति आदि विषयहरूमा अध्ययन अनुसन्धान गराउने र अनुसन्धानबाट प्राप्त नतिजाहरू प्रकाशित गरी पाठकसामु प्रस्तुत गर्ने उद्देश्य लिई स्थापित यस केन्द्रले हालसम्ममा यी क्षेत्रहरूमा केही अनुसन्धानहरू गराइसकेका छन् । तीमध्ये करीब १५० वटा पुस्तकको रूपमा प्रकाशित पनि भइसकेका छन् । यही क्रममा यस पुस्तकको प्रकाशन गरिएको छ ।

यस पुस्तकको पाण्डुलिपि वि.सं. २०३६–३७ तिर नै यस केन्द्रमा बुझाइएको कुरा खुल्न आएको छ । तर के कति कारणले यो पुस्तक प्रकाशन भएन भन्दा पनि यसको महत्त्व अहिलेसम्म पनि उत्तिकै रहेको कुरामा विश्वास लिएको छु । नेपालको इतिहासमा महत्त्वपूर्ण योगदान दिने र हालसम्म प्राप्त वंशावलीहरूमध्ये सबैभन्दा पुरानो मानिएको संस्कृत भाषामा लेखिएको यस *गोपालराजवंशावली*को अंग्रेजी अनुवादमध्येको संस्करण २०४१ सालमा नै प्रकाशित भइसकेको छ । प्रस्तुत पुस्तक नेपाली भाषाका पाठकवर्गहरूका लागि निकै उपयोगी हुनेछ । दिवंगत धनवज्र वज्राचार्यज्यूले आफ्नै हस्ताक्षरमा पेश गर्नुभएको पाण्डुलिपिमा ज्यादै थोरै र साधारण केही शब्दहरूबाहेक जस्ताको तस्तै प्रकाशन गरिएको छ । उहाँले अध्ययन गर्नु भएदेखि हालसम्ममा यस विषयमा निकै अध्ययन अनुसन्धानहरू भइसकेका छन् तापनि तिनलाई यस पुस्तकमा समावेश गरिएको छैन । यस कुरालाई पाठकवर्गले मनन गर्नुहुने नै छ ।

धनवज्र वज्राचार्यले यस केन्द्रसँग आबद्ध रही नेपालको इतिहासमा निकै महत्त्वपूर्ण कुराको प्रकाशन गर्नुभएको छ । *लिच्छविकालका अभिलेख, मध्यकालका अभिलेख* तथा सह लेखनमा *शाहकालका अभिलेख, नुवाकोटको ऐतिहासिक रूपरेखा, गोरखाको ऐतिहासिक सर्वेक्षण, दोलखाको ऐतिहासिक रूपरेखा, टिष्टुङ्ग चित्लाङ भेगको ऐतिहासिक सामग्री* आदि जस्ता पुस्तकहरू उहाँका कृतिहरूमध्येका हुन् । नेपालको इतिहास अध्ययनको क्षेत्रमा उहाँको देन महत्त्वपूर्ण रहेको छ । वि.सं. २०५१ मा भएको उहाँको निधनले यस क्षेत्रमा अपूरणीय क्षति भएको छ ।

पुस्तक प्रकाशनको लागि प्रा. डा. कमलप्रकाश मल्लज्यूले आफूसँग रहेको पाण्डुलिपि उपलब्ध गराउनुभयो, पुस्तकको परिचय लेखिदिने आफ्नो इच्छा व्यक्त गरी सोही अनुरूप आफ्नो मुलुकबाट टाढा अमेरिकामा रहेर आफू निकै व्यस्त हुँदाहुँदै पनि पुस्तक परिचय लेखि उपलब्ध गराइदिनुभयो र त्यति मात्र नभई समयसमयमा आवश्यक सल्लाह सुझावसमेत दिनु

भयो यसका लागि उहाँप्रति हार्दिक कृतज्ञता ज्ञापन गर्दछु । पुस्तक प्रकाशनकै सिलसिलामा आ-आफ्नो ठाउँबाट आवश्यक सहयोग, सल्लाह तथा सुझाव दिनुहुने प्रा.डा. त्रिरत्न मानन्धर तथा प्रा. दिनेशराज पन्तज्यूहरूप्रति आभार व्यक्त गर्दछु । साथै यस केन्द्रका उप-प्रशासक दामिनी वैद्य, हे.अ. गोविन्द बहादुर थापा र कमल बानियाँलाई पनि धन्यवाद दिन चाहन्छु ।

वि.सं. २०६४

प्रा. निर्मलमान तुलाधर
कार्यकारी निर्देशक

# Introduction to the Historical Analysis of the *Gopālarājavaṃśāvalī*

This manuscript was submitted to CNAS in 1980- 81, by the late Mr Dhanavajra Vajrācārya as a part of his research project relating to the translation and interpretation of the ***Gopālarājavaṃśavalī***. For reasons none too clear to me, both the translation and the interpretation of the chronicle had remained unpublished until I saw the file tucked under the carpet in Dhanavajra's room. With the Executive Director, Kumar Khadga Bikram Shaha's permission I got the Nepali transcription and translation published by the Nepal Research Centre, together with my Introduction, English translation, Glossary, Chronological Tables, and Indexes of Place-names and Personal Names in 1984. Since Dhanavajra had spent more than a decade in reading and deciphering this difficult and unyielding manuscript, written in corrupt Sanskrit and medieval Newari, nearly like his morning recitation of the ***Nāmasaṃgīti***, I had requested him to write an introduction to the edition, particularly focusing on the nature of the text. However, to my utter dismay, he didn't agree to it. Nor did he take much interest in reading the proofs of the text of the Nepali translation, much less the Nepali indexes until the last minute when he heard that his hostile critics were going to write a destructive review of it! This had remained an unresolved mystery to me to the end of his life because I couldn't make out whether it was out of disdain or modesty. We had, however, agreed to leave the English translation and glossary as they are, giving the reader the benefit of doubt as my translation diverged from his at many a place. I had also made it a point to seek his opinion as well as feedback on my Preface and Introduction to the edition of the ***Gopālarājavaṃsāvalī***.

Dhanavajra studied Sanskrit language and literature, epigraphy and history at the *gurukula* founded by the late Pandit Nayarāj Pant in the early 1950s. The school initially had 21 inmates, of whom 8 managed to survive the regime just for a few years. How many actually graduated from this school is still a matter of controversy. Following bizarre regulations, such as not reading English at all, nor using a Western-style jacket, nor Roman alphabet, nor Julian calendar, it followed an "eight-year curriculum" based on rote learning of the "fundamental Sanskrit classics". These prescribed texts were the *Amarakoṣa*, the *Astādhyāyī*, the *Bhaṭṭīkāvya*, the *Raghuvaṃśa*, the *Harṣacarita*, the *Arthaśāstra*, and for those interested, Bhaskarācārya's *Siddhānta-śiromaṇī*. In all likelihood, Dhanavajra was sent to this school by his parents hoping that he would follow their family profession which was priesthood or āyurveda.

Although no student came to this *gurukula* to do history nor to study astronomy, because of the Guru's predilections, some of them developed

an interest in epigraphy and history as well. In the list of 100 books the students were recommended, circulated only recently, there is almost none on the social sciences nor any on historiography. Yet, no sooner than they had a little grounding in Sanskrit they set out on a mission of "amendments" to the dates and names given in the Nepali textbooks of history and other published material by the then established names. In the mid 1950s, a vocal campaign was launched by the denizens of this *gurukula*, attacking Principal Bhairav Bahadur Pradhan, Bal Chandra Sharma, Dilli Raman Regmi, Kaiser Bahadur K.C, and Surya Bikram Gyewali, above all—all trained in the Western- style Indian institutions. In this campaign of public defamation, Dhanavajra was, of course, in the forefront. They issued little booklets of corrections—in all 64 issued in about two decades, challenging publicly all the established names in Nepali history-writing to come to meet them for open public debate, for *"śāstrārtha"*. On a more sober vein, they contributed to the transliteration and edition of some 184 ancient, medieval and modern inscriptions; they also founded a Nepali-language quarterly, *Pūrṇimā*, devoted to historical research, now running to No 122.

In 1969, with nearly a u-turn in his career, Dhanavajra Vajrācārya resigned from the Editorial Board of the journal as well as from the association to join the mainstream of the academia in Nepal as an Instructor in Epigraphy in the Institute of Nepalology at Tribhuvan University. During its formative period, the Institute functioned as a nuclear cell which later on flowered as Centre for Nepal and Asian Studies. Since then, he gradually distanced himself from a number of their articles of faith, probably increasingly coming under the influence of the Western traditions in history taught in the university departments. Since its foundation, Dhanavajra Vajrācārya had worked consistently at CNAS as a most prolific and productive scholar, submitting annually a survey report, or a research report to this institution to consider for publication. The most acclaimed one of these is his compilation, edition and Nepali translation and commentary on the Licchavi inscriptions in Sanskrit (1973).

Among the contributions of Dhanavajra Vajrācārya to Nepali historiography, his transliteration, Nepali translation and interpretation of the ***Gopālarājavaṃśāvalī*** is a major one. Though harshly criticized by his detractors his work on this complex manuscript is a solid basis of our current understanding of it. This manuscript deals with the political history of the Nepal Valley during the early medieval period, between Nepāla-saṃvat 1-509, i.e., AD 879- 1389. The focus of his attention is the political chronology, the rise and fall of various families or "dynasties" based in different parts of the Valley. In a sense, it deals with the darkest phase of the "Dark Period", torn by the storm clouds of rampant medieval feudalism running amok all over the Valley, punctuated only by a series of outside invasions and raids of the Khaśiyās,

the Doyas and the Muslims. The narrative begins with the founding of a new epoch-era at the temple of Paśupati and ends with the consolidation of political power by shrewd Jayasthitirājamalla in the 1380s.

Like all historical writing, Dhanavajra Vajrācārya's too was a mixture of "hard core of facts, surrounded by a thick pulp of disputable interpretations," to repeat the words of H.E. Carr (*What is History?* London: 1962). In order to assess Dhanavajra Vajrācārya's contribution to the analysis and interpretation of the *Gopālarājavaṃsāvalī,* we have to, of necessity, go back to some undeclared articles of faith which he was schooled in. Pundit Nayarāj and his "nationalist" school believed that the kingdom of Nepal was "vast" during Golden/ Licchavi era and that it became fragmented with the founding of the Nepala-saṃvat in A.D. 879. Nepālamaṇḍala, the centre, as they understood it, became gradually weak, and as a result the unified kingdom became fragmented into fifty or more principalities or "*Viṣayas*". They believed that all these *viṣayas* were, therefore, "outside of the Kathmandu Valley". It was because the centre was "weak", separate kingdoms of the Khasas (ca. AD 1150-1500) in Western Nepal and the Tirhute Doyas (AD1097-1325) in Southern Nepal were founded—as if these regions had always or ever been densely inhabited, or ruled directly from the Mānagṛha or Kailāśakūṭa Bhavana in Harigaon, or later from Devapāṭan in the Nepal Valley.

If we follow the geographical distribution of about 200 extant Licchavi inscriptions their kingdom didn't extent beyond Gorkha or Nuwakot in the west, Dumjā in the east, Chapaligaon in the north, and Tistung-Palung in the south. However, Dhanavajra Vajrācārya believed that Nepala- maṇḍala was at least as big as modern Nepal– extending from the Mahākāli to the Mechi. The modern "nation-state" of Nepal came into existence with the restoration of the Naya Muluk to the Gorkhalis by the East India Company on November 10, 1860. He believed that during the palmy days of the Kingdom, there was a powerful monarchy ruling in Nepal, holding down all the rebellious feudatories from the east to the west, whipping them to meek obedience from a central location—not too different from the Nārāyanhiti Palace controlling all the 75 districts and 14 zones all apiece like a monolithic nation-state during the Panchayat rule. Such a vision could have been entertained only by a scholar unfamiliar with the nature of medieval feudal order in South Asia. In the first place, the very term *maṇḍala* is a part of the medieval "segmentary state," a political order in which rival feudatories entered into a working temporary consortium of friendship following periodic spells of enmity. This political intransigence, founded on the culture of military adventurism and opportunitism, is the essence of the so-called *maṇḍala*-theory (See, Burton Stein, "The Segmentary State: Interim Reflections," *Puruṣārtha* No 13, pp. 217-237; R.S. Sharma, *Early Medieval Indian Society: A Study in Feudalisation.* Calcutta: Orient Longman Ltd., 2001). As for the centre, there never was

one in medieval South Asia after Harṣavardhana's death in A.D. 647 or the invasion of the Hunas (See, Romila Thapar, *Early India: From the Origins to AD 1300.* London: 2002, especially pp. 440-489). Even during the heydays of the Licchavi "dynasty" there were the Guptas, the Varmans, the Senas and Palas, not to speak of overshadowing personages such as Ravigupta, Bhaumagupta, Jiṣṇugupta, Viṣṇugupta, Mahāraja-Mahāsāmanta Kramalila and, of course, Aṃśuvarman.

Dhanavajra Vajrācārya's faith in the "strong center" holds little water because such a center didn't exist at any time in the history of Nepal recorded by the ***Gopālarājavaṃsāvalī.*** Even in a petty state of Bhaktapur there were two "palaces'—the Yuthonimam (located probably in the western city or market- centre) and the Tripura, founded by ānandadeva in the 12th century. The properly crowned king of early medieval Nepal probably lived in Devepātan, in the Yendala Palace where all the Kings upto Sthitirajamalla used to be crowned. Even after the collapse of the Licchavi capital in Harigaon in great fires, floods or earthquakes, Devapātan continued to be the ritual capital. At that time, Patan was ruled by the hereditary feudals of Seven Families; Pharping by the Rābuttas claiming descent from the Solankis of Gujarat, and Kathmandu by the *Mahāpātras* or Thakuris descended from the Malla Varmans of Nuwakot who traded with Tibet. Sharing the throne between two brothers, between an uncle and nephew, between collaterals, and or between rival feudatory families, say of Banepa or Palanchowk, were the norm—the order of the day. These were so many forms of contemporary formulas of political compromise, devised according to power dynamics of a turbulent social order. More often than not, the king- makers, such as Rājaharṣa Malla Bhalloka of Kelāchem̩, Varapāla of Yethochem̩, Jaysiṃha Malla Varmana of Nhola Vihāra, Jayata Mulamī of Patan, or Jayasiṃharāma or Anekarāma Vardhhana of Banepā were far taller figures than the kings they installed on the throne of the kingdom.

Bhaktapur emerged as a center of political drama with the arrival in winter 1326 of the refugee party from Simarāvangaṛh, led by widowed Queen Devaladevī and Prince Jagatsiṃha Kuhmara, following the death of Harasiṃhadeva at Tinpātan in Dolakha. The party lived in Yuthonimam, the home of Rudramalla, Devaladevi's brother. This party swiftly moved in to fill in the power vacuum created by the death of Ari Malla , a protégée of Rudramalla, in a devastating earthquake in A.D. 1344 at the Devapātan palace. The throne of Nepal was vacant for three following years, until a compromise King was found in Rājamalla in A.D. 1347. Hardly two years had passed since his coronation at several places, when the Sultan of Bengal, Samsud- din Illyas ravaged the valley in November 1349, setting fire to Bhaktapur for a week, ravaging several shrines including Paśupati linga, Svayambhū caitya, and Pimbaha in Patan.

On this chaotic political theatre, there was evidently no central source of political authority as there were more king-makers than the king, and there obviously never was a standing army, but only hordes of periodic raiders. One has only to consult the place- name index to the *Gopālarājavaṃsāvalī*: the valley was nearly littered with forts, so much so that even the Buddhist monasteries, such as the Kvātha Bāhas in Paṭan or Kathmandu and the Itum Bāha in Kathmandu were more of forts than monasteries of celibate monks. The only occasion when weaponry was displayed was on the eve of Mahānavamī—the Lohābhisāra—when Sthitirājamalla distributed 1800 pieces of swords to his retinue for display at an "axe-procession," presumably to intimidate psychologically his potential rivals and contending elite!

For forty years until her death in A.D. 1366, Devaladevī was at the center of Bhaktapur political drama. Although we don't know who the parents of Sthitirājamalla were, he was a protégée of Devaladevī, brought to Bhaktapur as a dolāji for her granddaughter, īRājalladevī. At the age of eight, this princess, heir to the throne, was married to Sthirāajamalla in 1354. His rise to power had been insured and meteoric since. The *Gopālarājavaṃsāvalī* gets richer and thicker in detailing the exploits, be they social, cultural, and militariy-political, of the prince-consort until he banishes the legitimate King Arujunadeva to Banepa and finally imprisons him in Kvātha-cheṃ where he perishes on NS 502 Māgha Kṛṣṅa 5. Thereafter, the chronicler hails Sthitirājamalla as "an incarnation of Buddha" !

In this scenario, as Jayasthitirajamalla was a taller figure than other contenders for power, Dhanavajra Vajrācārya thought that he came from India! He interpreted the Newari word, *kovane* as the South, i.e., India. This is where history gets twisted by vagaries of interpretation. However, had Dhanavajra Vajrācārya read the text more carefully, *kovane*, actually means the southern part of Kathmandu, where he sent a caravan of presents on Karttika śukla Pratipadā, the Mha-puja, to his relatives. (See Malla, *A Dictionary of Classical Newari*, 2000, pp. 63, 66). The caravan is clearly termed as *Bādhāva*, a present for relatives. Why would an Indian prince send such a present to the Kelā-cheṃ at Yaṅgala, southern Kathmandu, which has been a home of the Mallas, and it still is.

By nature, Dhanavajra Vajrācārya was keenly interested in political history. So a change of dynasty mattered a great deal to him. His primary worry had always been, "Is the NEW King of the SAME Old Dynasty?' This question is, however, misleading if we limit the dynastic issues to surnames of the ruling kings—because nearly all the Kings of Nepal, including the present one is a Deva! How can a Hindu King be anything but a Deva? Unfortunately, not all the early medieval Mallas belonged to the single Dynasty, much less to the scion of pure blue blood though they all called themselves "Deva" or direct descendants of the Sun!. No matter whether they were the Devas or the Mallas, not even in

early medieval Nepal was there a single dynastic rule. One clue could have been their "*gotra* and *pravara*" but except for the later Mallas (who were Māṇḍavya gotra), we don't know of the others. Although the cult object of the later Mallas was Goddess Taleju, in the ***Gopālarājavaṃsāvalī*** the early Mallas had their family sanctuary in the (De)ghuṛi-cheṃ, or at Dha-cheṃ at Devapātan, where Jayadeva Malla was crowned in A.D. 1354, at Yeṃdala, Manaṃtuṃthi, Rājalaṃkhu, or Rājavāsa at Devapātan.

As political chronology of about three centuries NS 177-509 was so important for Dhanavajra Vajrācārya he limited himself to the dates of the ruling kings mentioned in the***Gopālarājavaṃsāvalī***, and he tried to verify these laboriously with the help of the colophons of contemporary manuscripts and inscriptions. Although he copiously used these sources he never *documented* them so that the sources of these inscriptions and manuscripts cannot be easily verified. We do not know *where* they are located or published. Nor do we know how many of these are new ones, unpublished by anyone before him in 1980. Probably, this is the weakest point in the methodology of Dhanavajra Vajrācārya in this manuscript. Only a few sub- headings in the Dhanavajra Vajrācārya manuscript draw the reader's attention to events other than the succession of kings. Otherwise, they are the dates of invasions of the Khasiyās, the intermittent invasions of the ḍoyas and the Muslim Invasion—the three apocalyptic events of early medieval Nepal valley. As in his earlier papers on King śivadeva, or on the Powerful Family of the Rāmavarddhanas of Banepā, or on the ḍoyas, Dhanavajra Vajrācārya never deviated from the text or texts before him. Rarely, if ever, he reflected on the context, the social and cultural context that produced the text.

However, the ***Gopālarājavaṃsāvalī*** is not merely a political history: it is a rich source of economic, social and, above all, cultural history to which Dhanavajra Vajrācārya gives scanty or no attention. There is hardly any thing in Dhanavajra Vajrācārya manuscript on the development of property rights in land, on the emerging caste structure, the evolution of coinage, the social structure and the administrative system, on trade and costs of living. For all of these themes, there are a plenty of material in the ***Gopālarājavaṃsāvalī***, particularly on monuments, buildings, temples, temple-donations and construction works of great artistic significance. Although he wrote a perceptive paper on śivadeva, Dhanavajra Vajrācārya thought that there was no evidence for the silver coinage of śivadeva "with an image of the Siṃha". Even an amateur like me have three pieces of the *dramma*, and their plates were published by Ramesh Kumar Dhungel in the *Economic History of Medieval Nepal*, a later CNAS publication!

Although the historical narrative of the ***Gopālarājavaṃsāvalī*** begins with the beginning of the Kali Yuga, it culminates in the political apotheosis of Jayasthitirājamalla, as if it were the purpose of all other

vicissitudes, legitimizing his capture of political power by banishing the legitimate king, Jayārjunadeva to Banepa and then imprisoning him in Kvāchem̱ where he perished. In 1372, mere ten years ago, Jayasthitirājamalla was only an uprāja--a secondary ruler of his prisoner. It is, therefore, not too difficult to guess who sponsored the compilation project; otherwise it won't have been so nakedly tendentious.

The chronicle can easily be excavated for relics of the social and cultural system preceding the formalization of the social, economic, and religious reforms uniformly attributed by the later 19th-century vernacular *Bhāṣā Vaṃśāvalīs* to Jayasthitirājamalla. Official titles such as *Mahātha, Upādhyāya, Jyotika, Sāyaju, Syeṣṭa*, as well as clan names such as *Pāla, Rābutta, Varddhana*, are not rare, nor are occupational titles such as *Māṃdhura*. However, we don't yet get a full-fledged *Jātimāla--a* full catalogue of 64 or 82 Newār castes in full in an hierarchy of pure and impure scale prepared on the inspiration of classical Hindu texts and the guidance of Pañca-Gauḍa and Pañca-Drāviḍa. The ***Gopālarājavaṃsāvalī*** was compiled at least six years earlier than the date of the Koṭī-Homa, held in February 1395, which formalized the social reform. Six months later, in August 1395, Jayasthitirājamalla passed away. However, the tradition must have some historical basis to persist so long and so firmly (See *Jayasthitimalla Paddhati, Newar Era, 515,* Hodgson Papers Vol 11, pp. 102- 189, the India Office Library).

Curiously enough, Dhanavajra Vajrācārya doesn't write anything about the text as such, its structure, its syntax or absence of it, its style and vocabulary. As I have extensively dealt with these topics in the facsimile edition of the ***Gopālarājavaṃsāvalī***, I do not wish to repeat them here. No doubt, some of the points I made in 1984 need rethinking and the glosses, in particular, deserve revisiting. The ***Gopālarājavaṃsāvalī*** consists of two distinct texts, though they are later copied as a single connected text consisting of 49 folios at the court of Jayasthitirājamalla: the first part is in corrupt Sanskrit, and stylistically, similar to king- lists or annals compiled from several different sources. The second part is in medieval or old Newari. It is in fact a *thyāsaphū*, a historical diary similar to the later 17th- 18th century ones published as *aitihāsika-ghatanāvalī*, containing notes focused on the court, the temples, the forts, and on society at large, probably a work of a court astrologer or scribe. Unfortunately, Dhanavajra Vajrācārya in his interpretation deals only with the second part. The first part is focused on the shrine of Paśupati, and it may very well have been copied as a temple chronicle as it lists all the 21 repousse or ornaments donated to the sacred temple by different generations of kings and courtiers. The second part, on the other hand, begins with the founding of four Vaiṣṅva sites, relating to the mythic and the historical beginnings of the Valley.

Dhanavajra Vajrācārya believed that the Nepāla-saṃvat was founded by King Rāghavadeva as Paśupatibhaṭṭāraka Saṃvat, not by śaṇkhadhara

śākhvā. However, in the abridged text he cites, we have only "a new epoch-era was founded at the Paśupatibhaṭṭāraka." It doesn't say "by Rāghavadeva" as such. The ***Gopālarājavaṃsāvalī*** ignores the event completely as its major context was Kathmandu, not Bhaktapur, where the ***Gopālarājavaṃsāvalī*** is compiled.

Dhanavajra Vajrācārya believed that all the *Viṣayas*—Mamgvara, Pannaga, Udayapur, Jilgodgama, Phanapingga, Gaṇḍī-gulma, Dhavalaśrotapura, Pañcāvatadeśa etc., are all "outside the valley as they are ruled by feudatories, not directly from the center." A *viṣaya* is only an administrative unit or division, it was used as such in all Indian epigraphy, no matter where it is located, near the capital or away from it. (See D C Sircar's *Indian Epigraphical Glossary*, (Delhi: 1965, pp. 194-195). It was in this sense that a Licchavi inscription (No. 144 in the Dhanavajra Vajrācārya's 1973 edition), the Nārāyaṇchaur Inscription of Jayadeva (ca A.D. 710) refers to a Vodda Viṣaya. Similarly, Gaṇḍī-gulma is not in Gulmi district, but near Oṃ-thau-co at Theco. Similarly, Maṃgvara, is certainly not in Magrāt, nor *Rāṇaka* is a Magar. *Rāṇaka*, according to Sircar is merely a feudal title, held by many in Indian inscriptions (See Sircar, *Glossary*, 1965).

We owe much to Dhanavajra Vajrācārya for our understanding of ancient and medieval Nepal. Liberal as he was in sharing his material, he had given this manuscript to Luciano Petech who made an extensive use of it in his revision of the *Medieval History of Nepal A.D. 750-1482* (Rome: IsMEO, 1984). Anyone who compares the revised edition with the 1958 edition can see how much of the book comes from the labours of Dhanavajra Vajrācārya.

Instilled as he was with nationalistic fervor, Dhanavajra Vajrācārya missed the nature of the context i.e., the society and the polity in transition that produced the text. He mistook medieval feudatories of the Valley for the sardārs of Pṛthvinārāyaṇa Shāh, and reading the ***Gopālarājavaṃsāvalī*** for yet another inspiring nationalist document, such as the so-called *Divyopadeśa*!

As Michael Witzel, Wales Professor of Sanskrit at Harvard, USA, has shown, in a recent paper "On Indian Historical Writing: The Role of the Vaṃśāvalīs," the ***Gopālarājavaṃsāvalī*** is of a great significance in the South Asian historiography traditions. (See the *Journal of the Japanese Association for South Asian Studies*, No 2 (1990), pp. 1-57). The publication of more than a dozen historical diaries and court registers as well as the texts such as the *Nepālavaṃśāvali* (Malla, *Contributions to Nepalese Studies*, Vol. XII No 2, April 1985, pp. 75-101) clearly refute the oft-repeated trite statement of Orientalists that we the South Asians "possess no history."

2007 Kamal P. Malla

# विषयसूची

## गोपालराजवंशावलीको ऐतिहासिक विवेचना

नेपालसंवत् प्रचलित भएदेखि अर्थात् वि.सं. ९३७ देखि नेपालको इतिहासमा 'मध्यकाल' सुरु भएको मानिएको छ । राजनैतिक दृष्टिले यो समयविभाजन त्यति मिल्दो देखिएको छैन । किनभने यसबेला राजकाजमा ठूलो परिवर्तन वा राजवंशपरिवर्तन आदि कुनै उल्लेखनीय घटना घटेको थिएन । तैपनि सांस्कृतिक दृष्टिले भने यो समयविभाजन केही मिल्दो नै देखिन आएको छ । यसकारण राघवदेवदेखिको गोपालवंशावलीको वर्णनलाई 'मध्यकाल' अन्तर्गत पारी यहाँ विवेचना गरिएको छ ।

**नेपालसंवत्को प्रचलन**

राघवदेवको प्रख्याति फैलिनामा प्रमुख कारण उनीद्वारा नयाँ संवत् (नेपालसंवत्) को प्रवर्तन हुनु हो । तर गोपालवंशावलीकारले राघवदेवको वर्णनका सिलसिलामा यस कुराको चर्चा नगर्नु आश्चर्यलाग्दो छ । पछिका वंशावलीमा भने यस कुराको उल्लेख गरिएको पाइन्छ । पछि लेखिएको गोपालवंशावलीको सङ्क्षिप्तप्रतिमा पनि यस कुराको उल्लेख गरिएको पाइन्छ । उदाहरणार्थ केशर पुस्तकालयमा रहेको संक्षिप्त गोपाल-वंशावलीलाई देखाउन सकिन्छ । त्यसमा "राजा श्रीराघवदेव वर्ष ६३ मास ६ ॥ श्रीपशुपतिभट्टारके सम्वत्सरप्रवृत्तिः कृता" भनी लेखिएको छ । यसका टिप्पणीमा 'सम्वत् दयकु' भनी नेवार भाषामा लेखी राघवदेवले संवत् चलाएको कुरा स्पष्ट पारिएको छ । राघवदेवले नयाँ संवत् चलाएको कुराको पुष्टि अरू स्रोतबाट पनि हुन्छ ।

मध्यकालमा नेपालमा असाध्यै प्रचलित यहीँ लेखिएको 'सुमतितन्त्र' नामक ज्यौतिषग्रन्थ नेपालमा प्रचलित संवत्हरूको निर्णयका लागि निकै उपयोगी रहेको छ । त्यसमा नेपालमा अघिदेखि प्रचलित संवत्हरूको सङ्क्षिप्त वर्णन पनि परेको छ । त्यस वर्णनमा "शकसंवत् ४९८ देखि चलेको संवत् ३०४ वर्षसम्म चल्यो; त्यसपछि अर्को संवत् (नेपालसंवत्) चल्यो" भन्ने भाव परेको छ । अभिलेख, हस्तलिखित ग्रन्थ आदि केलाई हेर्दा सुमतितन्त्रको उक्त भनाइको पुष्टि हुन्छ । अंशुवर्माको समयदेखि राष्ट्रिय स्तरमा प्रचलनमा आएको संवत्को उल्लेख ३०१ सम्म पाइएको छ । त्यसबेला राजा मानदेव थिए । मानदेवपछि राघवदेव गद्दीमा बसेको उल्लेख गोपालवंशावलीमा गरिएको छ । त्यसबेलादेखिका (संवत् ३०४ पछिका) अभिलेख, हस्तलिखित ग्रन्थ आदिमा सो पुरानो संवत् नै चल्दै गरेको पाइँदैन; त्यसबेलादेखि अर्कै नयाँ संवत्को प्रचलन भएको हामी पाउँछौं । यस नयाँ संवत्लाई पछि 'नेपालसंवत्' भन्ने नामकरण गरियो । उपर्युक्त

प्रसङ्गबाट नेपालसंवत्को प्रचलन राघवदेवका पालादेखि भएको हो भन्ने सङ्केत पाइन्छ ।

नेपालसंवत्को प्रचलन कुन उपलक्ष्यमा भयो होला भन्ने प्रश्न यहाँनिर उठ्नु स्वाभाविक छ । एक राजवंशको स्थान अर्को राजवंशले लिएपछि अर्थात् राजपरिवर्तन भएपछि यो संवत् प्रचलित भएको हुनुपर्छ भन्ने अनुमान पहिले केही इतिहासकारले गरेका थिए । तर प्राप्त सामग्रीहरू केलाई हेर्दा उक्त अनुमान मिल्दो देखिन आउँदैन । विचारार्थ गोपालराजवंशावलीको वर्णनतिर नै दृष्टि दिऔं । जतिखेर राजपरिवर्तन भएको हुन्छ; त्यतिखेर त्यस परिवर्तनको सङ्केत गोपालवंशावलीकारले गरेका पाइन्छन् । गोपाल, महिषपालराजाहरूको हातबाट शासनाधिकार किरात-राजाहरूको हातमा जाँदा त्यसको चर्चा गोपालवंशावलीमा गरिएको छ । किरातराजाहरूलाई जिती लिच्छविहरूले शासन गरेको स्पष्ट उल्लेख गोपालवंशावलीकारले गरेका छन् । बीचमा लिच्छविराजाको हातबाट शक्ति आभीर गुप्तहरूको हातमा जाँदा पनि यसको सङ्केत गोपालवंशावलीकारले गरेका छन् । तर मानदेवपछि राघवदेव राजा हुँदा राजवंशपरिवर्तनको कुनै सङ्केतसम्म पनि गोपालवंशावलीकारले गरेका छैनन् । यसबाट नेपालसंवत्को प्रचलन राजवंशपरिवर्तनसँग सम्बद्ध छ जस्तो देखिँदैन । बरु पछि नै लेखिएको भए तापनि केशरपुस्तकालयमा रहेको सङ्क्षिप्त गोपालवंशावलीमा उल्लिखित माथि उद्धृत कुरा सत्य हो जस्तो देखिन्छ । त्यसमा "श्रीपशुपतिभट्टारके सम्वत्सरप्रवृत्तिः कृता" भनी पशुपतिनाथलाई लक्ष्य गरेर अर्थात् नेपालका प्रमुख मान्यता प्राप्त देवता श्रीपशुपतिनाथको सम्मानार्थ राघवदेवले सो संवत् चलाएको उल्लेख गरिएको छ । यो कुरा बुझ्न लिच्छविकालदेखि विशेष गरेर अंशुवर्माका पालादेखि राष्ट्रिय स्तरमा पशुपतिनाथप्रति दर्साइएको सम्मानतिर दृष्टि दिनुपर्छ । आफ्नो प्रशस्तिमा 'पशुपतिभट्टारकपादानुध्यात' भनी लेखाई पशुपतिनाथप्रति अतिशय श्रद्धा प्रकट गर्ने पहिलो शासक अंशुवर्मा हुन् । यतिमात्र होइन; पशुपतिनाथप्रति राष्ट्रिय स्तरमा सम्मान व्यक्त गर्न अंशुवर्माले 'पशुपति' अङ्कित मुद्रा नै प्रचलनमा ल्याएका थिए । अनि उनीपछिका लिच्छविकालका अरू शासकहरूले पनि पशुपतिनाथप्रति सोही प्रकारको सम्मान दर्साउँदै गए तथा 'पशुपति' मुद्राहरू प्रचलनमा ल्याउने काम जारी राखे । समयसमयका विभिन्न लिपिअङ्कित 'पशुपति" मुद्राहरूले उक्त कुरा स्पष्ट पार्छन् । नरेन्द्रदेव, जयदेव (द्वितीय) आदि प्रसिद्ध कतिपय लिच्छविराजाहरूका नामअङ्कित पृथक् मुद्राहरू पाइएका छैनन् । तर उनीहरूका पालाका लिपि-अङ्कित 'पशुपति' मुद्राहरू भने प्रशस्त पाइन्छन् । पशुपतिनाथको मात्र होइन, पशुपतिनाथका वाहन 'वृष' को सम्मानमा समेत त्यसबेला तामाका साना

मुद्राहरू प्रचलनमा ल्याइएका थिए । यही परम्परामा राघवदेवले पशुपतिनाथको सम्मानमा नयाँ संवत् प्रचलन गरेको अनुमान हुन्छ ।

**राघवदेवहरूको वंश**

नेपालसंवत् प्रचलित भइसकेपछिका राजाहरू र यसभन्दा अगाडिका राजाहरू एकै शाखाका हुन्; यसबीच राजवंश परिवर्तन भएको कुनै सङ्केत पाईंदैन भन्ने कुराको चर्चा माथि गरिसकेको छ । यसोभए यी राघवदेव आदि राजाहरू कुन वंशका हुन् भन्ने समस्या इतिहासकारहरूको सामुन्ने खडा भएको छ । पछिका वंशावलीकारहरूले राघवदेव आदि राजाहरूलाई 'ठकुरी' वंशका भनी लेखेका पाइन्छन् । वंशावलीकारले लिच्छविकालका अंशुवर्मा आदिलाई पनि 'ठकुरी' वंशका भनी लेखेका छन् । पुराना अभिलेख, हस्तलिखित ग्रन्थ आदिमा ठकुरी शब्दको पयोग भएको पाईंदैन, ठकुरी शब्दको प्रचलन अलि पछिमात्र भएको हो । यसको तात्पर्य 'राजपुत्र' (रजपूत) कहलिएका एक थरी उच्च क्षत्रियहरूलाई पछि 'ठकुरी' भन्न थालियो भन्ने देखिन्छ । यसबाट 'ठकुरी' शब्द उच्चवंशका क्षत्रियलाई कहने साधारण शब्द हो; विशेष वंशवाचक शब्द होइन भन्ने सङ्केत पाइन्छ । यसकारण राघवदेवहरू कुन वंशका हुन् भन्ने कुरा विचारणीय नै रह्यो ।

नेपालसंवत्को सुरुका अभिलेखमा तात्कालिक राजाको वंशबारे कतै कुनै उल्लेख गरिएको पाईंदैन । अलिपछिका जनताले राखेका अभिलेखहरूमा भने यी राजाहरूको वर्णन गर्दा 'रघुवंशी', 'सूर्यवंशी' भनेरमात्र वर्णन गरिएको पाइन्छ । जस्तै राष्ट्रिय सङ्ग्रहालय, छाउनीमा रहेको ने.सं. २६२ को अभिलेखमा आनन्ददेवलाई 'श्रीरघुवंशमौक्तिकमणि' भनिएको छ । भक्तपुर तौमढीटोलको अभिलेखमा आनन्ददेवलाई 'सूर्यकुलप्रदीप' भनिएको छ । साँखु वज्रजोगिनीको ने.सं. २९३ को अभिलेखमा रुद्रदेवलाई 'रघुपति' भनिएको छ । तर यताबाट पनि अझै विशेष कुराको टुङ्गो लाग्दैन । शासनाधिकार हात लगाएका यावत् क्षत्रिय राजाहरू कि सूर्यवंशी कि चन्द्रवंशी कहलाउने चलन पुरानो हो । लिच्छविकालमा लिच्छविराजाहरू सूर्यवंशी कहलाएका थिए । अंशुवर्मा, जिष्णुगुप्तहरूचाहिँ चन्द्रवंशी कहलाएका थिए । जयदेव (द्वितीय)ले आफ्नो लिच्छविवंशको वर्णन गराउँदा सूर्यदेखि सुरु गर्न लगाएका छन् । सूर्यवंशमा भएका राजा रघुनामी ठहरिँदा सूर्यवंशीहरू रघुवंशी पनि कहलाएका छन् । उपत्यकाका मल्लराजाहरूका प्रशस्तिमा 'रघुवंशावतार', 'रविकुलतिलक' भन्ने उल्लेख गरिएको पाइन्छ । मध्यकालका सुरुका राजाहरू चन्द्रवंशी नकहलाई सूर्यवंशी कहलाएका हुनाले र लिच्छविराजा जयदेव (द्वितीय)पछि बीचमा राजवंश परिवर्तन भएको तात्कालिक उल्लेख नपाइने हुनाले यी राघवदेवहरू कहीँ उही पुरानै लिच्छविवंशकै सन्तान त होइनन् भन्ने प्रश्न उठाउन नसकिने होइन । तर

यस विषयमा कुनै निर्णयमा पुग्न यस दृष्टिले बढी खोजी हुनु आवश्यक छ ।

राघवदेवका पालाका अभिलेख, हस्तलिखित ग्रन्थ आदि अ ऐतिहासिक सामग्री पाइएका छैनन् । गोपालवंशावलीमा पनि राघवदेवका पालाको कुराको वर्णन परेको छैन । यसकारण यिनका पालाका ज्ञातव्य कुरा जान्न सकिएको छैन । तर नयाँ संवत्का प्रवर्तकका रूपमा राघवदेव देखिएका हुनाले त्यसबेला राजकाजमा स्थिरता रहेको, आर्थिक विकास, सांस्कतिक उन्नति केही भएको आभास पाइन्छ ।

**शङ्करदेव**

नेपालसंवत्को पहिलो शताब्दीको कुरा टिप्नमा गोपालावंशावलीकार अलि कमजोर देखिएका छन् । बरु अलि पछि नै लेखिएका भए पनि सङ्क्षिप्त गोपालवंशावली (परिशिष्टमा दिइएका केशरपुस्तकालय र गोरखाको वंशावली)मा यसताकाका कुरा मिलाई टिपिएका छन् । गोपालवंशावलीमा राघवदेवपछि जयदेव राजा भएको कुरा टिपिएको छ । तर उक्त सङ्क्षिप्त गोपालवंशावलीमा राघवदेवपछि शङ्करदेव राजा भएको कुरा लेखिएका छ । तात्कालिक हस्तलिखित ग्रन्थबाट पनि उक्त कुराको पुष्टि हुन्छ । पाटन महाबौद्धमा पाइएको ने.सं. ४० (वि.सं. ९७७) मा लेखिएको 'प्रज्ञापारमिता' नामक हस्तलिखित ग्रन्थमा तात्कालिक नेपालका राजाका रूपमा शङ्करदेवको चर्चा परेको छ । विचारार्थ उक्त ग्रन्थको पुष्पिकावाक्य यहाँ उद्धृत गरिन्छ ।

> "संवत् ४० भाद्रपद शुक्लदिवा पूर्णमास्याम् परमभट्टारक महाराजाधिराज परमेश्वर श्रीशङ्करदेवराज्ये श्रीललितब्रुमः श्रीमहावातीग्वलविहाराधिवासिना शाक्याभिक्षुन्याष्ठविरिनी अक्षयमत्या पाध्यायमातापितृपूर्वङ्गमेन सकलसत्त्वानामनुत्तर-ज्ञानफलाप्तये श्रीयंवलोत्तरटोलकाधिवासिना वार्त्तदिवाकरसिंहेन लिखित्वा इति"

[ने.सं ४० (वि.सं. ९७७) भाद्र शुक्ल पूर्णिमाका दिन, परमभट्टारक महाराजाधिराज परमेश्वर श्रीशङ्करदेवको राज्यमा, श्रीललितब्रुमा (ललितपुर) को श्रीमहावातीग्वल विहारमा बस्ने शाक्यभिक्षुणी थकालिनी अक्षयमतीले (यो लेखाएको हो ।) गुरु-आमा-बाबु आदि सारा प्राणीहरूलाई अनुत्तरज्ञानको फलप्राप्ति होस् भनी श्रीयंवलको उत्तरटोलमा बस्ने वार्त्र दिवाकरसिंहले यो सारेका हुन् ।]

अहिलेसम्म प्राप्त हस्तलिखित ग्रन्थ, अभिलेख आदि ऐतिहासिक सामग्रीमा नयाँ संवत् (नेपालसंवत्) प्रयोग गरिएको पहिलो प्रामाणिक सामग्री यही नै हो । यसबाट ने.सं. ४० (वि.सं. ९७७) मा नेपालमा राजा

शङ्करदेव राज्य गर्दै थिए भन्ने सिद्ध भएको छ । उनको प्रशस्ति यहाँ 'परमभट्टारक महाराजाधिराज परमेश्वर' दिइएको छ । नेपालसंवत्का सुरुका राजाहरूको प्रशास्ति पछिल्ला लिच्छविराजाहरूको जस्तै थियो भन्ने यताबाट थाहा पाइन्छ । मानदेवदेखि शिवदेव (प्रथम)सम्मका लिच्छविराजाहरूको प्रशस्तिमा गद्दीनसिन राजालाई बुझाउने पदवी 'भट्टारक महाराज' मात्र थियो । नेपालका शासकहरूमा सर्वप्रथम 'महाराजाधिराज' कहलाउने अंशुवर्मा थिए । सर्वप्रथम 'परमभट्टारक पदवी लिने लिच्छविराजा नरेन्द्रदेव थिए । 'परमेश्वर' पदवी लिने पहिला लिच्छवि राजाचाहिँ द्वितीय जयदेव थिए । यसपछिका गद्दीनसिन राजाहरूलाई बुझाउने मुख्य पदवी 'परमभट्टारक महाराजाधिराज परमेश्वर' नै रहन गएको थियो । जुन पछिसम्म कायम रह्यो ।

यस पुष्पिकावाक्यले शङ्करदेवको समयमा अर्थात् वि.सं. ९७७ तिर ललितपुर सहर बसिसकेको थियो; सो सहर अनेक टोलहरूमा विभक्त थियो; लिच्छविकालमा जस्तै यसबेलासम्म पनि भिक्षुणीहरूको अस्तित्व कायम थियो आदि अरू कुरा पनि प्रकाश पारेको छ । मुख्य गरी ने.सं. ४० मा शङ्करदेव नेपालमा राज्य गर्दै थिए भन्ने कुराको पुष्टि यसबाट प्रामाणिक रूपमा भएको छ । राघवदेवका उत्तराधिकारी शङ्करदेवका पालामा नयाँ संवत् (नेपालसंवत्) ४० पुगेको हुँदा यस संवत्का प्रवर्तक राघवदेव नै हुन् भन्ने सङ्केत पनि यताबाट पाइएको छ ।

**गुणकामदेव**

शङ्करदेवपछि जयदेव र विक्रमदेव राजा भएको कुरा गोपालवंशावलीमा उल्लिखित छ । तर यिनीहरूको पालाको हस्तलिखित ग्रन्थ वा अभिलेख आदि कुनै अरू ऐतिहासिक सामग्री पाइएको छैन । यसकारण यिनीहरूबारे अहिले केही भन्न सकिँदैन । यसपछि नरेन्द्रदेव अनि गुणकामदेवको चर्चा गोपालवंशावलीमा गरिएको छ । तर प्राप्त अभिलेख, हस्तलिखित ग्रन्थका आधारमा नरेन्द्रदेवभन्दा गुणकामदेव पहिले भएका हुन् भन्ने देखिएको छ । पाटन कुम्भेश्वरनजिकै घाँयबु भन्ने ठाउँमा गुणकामदेवका पालाको ने.सं. १०७ (वि.सं. १०४३) को अभिलेख पाइएको छ । शिवपरिवार (उमामहेश्वर)को पादपीठमा कुँदिएको त्यस अभिलेखबाट ने.सं. १०७ (वि.सं. १०४३) मा नेपालमा गुणकामदेव राजा शासन गर्दै थिए भन्ने प्रमाणित हुन्छ । विचारार्थ त्यस अभिलेखका केही अंश यहाँ उद्धृत गरिन्छन्–

"राज्ये श्रीगुणकामदेवनृपतेस्सप्तोत्तरेब्दे शते ।
माघे मासि च रोहिणीबुधदिने .............. ।
श्रीमाणिग्वलके सुरालयकृतस्तच्छ्रीवरौपात्मनः
पित्रोवन्द गुरोश्च भक्ति जगतां स्वर्गापवर्गाप्तये ।"

[ने.सं. १०७ (वि.सं. १०४३) माघ महिना ... रोहिणीनक्षत्र बुधवारका दिन, राजा श्रीगुणकामदेवको राज्यमा, श्रीमाणिग्वलमा, आमाबाबुलाई ढोग्ने, गुरुमा भक्ति गर्ने ..... ले संसारलाई स्वर्ग र मोक्ष प्राप्त होस् भनी देवमन्दिर बनाए ।]

श्रीलुशियानो पेटेकले "यस अभिलेखमा संवत् देखिँदैन; लिपिका आधारमा यो अभिलेख बाह्रौं शताब्दीका दोस्रा गुणकामदेवका पालाको हो जस्तो मलाई लाग्छ; किनभने पहिला गुणकामदेवले पाटनभेगमा शासन गरेका थिएनन्" भन्ने भाव व्यक्त गर्नुभएको छ । श्रीडिल्लीरमण रेग्मीले पनि यस अभिलेखमा उल्लिखित गुणकामदेवलाई ने.सं. ३०५ तिरकै हुन् भनी देखाउन खोज्नुभएको छ । साथै उहाँले यस अभिलेखको संवत् भएको भागको पाठ 'सप्तोत्तरत्रिशते' पढ्नुभएको छ । तर यस अभिलेखमा "सप्तोत्तरेब्दे शते" भन्ने पाठ राम्ररी नै ठम्याउन सकिन्छ । यसकारण यो अभिलेख ने.सं. १०७ को हो भन्ने कुरामा कुनै शङ्का छैन । यसताका नेपालमा गुणकामदेवले एक्लै राज्य गरिरहेका थिए भन्ने कुराको पुष्टि अर्को प्रमाणले पनि गर्छ, त्यो हो, राष्ट्रिय अभिलेखालयमा रहेको 'सुमतिपञ्जिका' नामक हस्तलिखित ग्रन्थ । ने.सं. ११० मा लेखिएको सो पुस्तकमा त्यसबेला राजा गुणकामदेवले राज्य गरिरहेका थिए भन्ने कुरा यसरी लेखिएको छ–

"राज्ञा श्रीगुणकामदेवविभुना स्वस्यैकराज्ये कृते
वर्षेस्मिन् दिशमुत्तरे शततमे ............ ... ।
........................ दिने ताराधनिष्ठान्विते ।
नाम्नेयं सुमतिर्यथाभिलिखिता ................ "

[ने.सं. ११० (वि.सं. १०४७) ... धनिष्ठा नक्षत्रका दिन, राजा श्रीगुणकामदेवले आफू एक्लैले राज्य गरिरहनुभएको बेलामा यो सुमतिपञ्जिका नामक ग्रन्थ लेखेको हो ।]

यस प्रमाणबाट यसताका गुणकामदेवले राज्य गरिरहेका थिए भन्ने सिद्ध हुन्छ । यी गुणकामदेवले पाटनभेगमा राज्य गरेका थिएनन् भन्ने श्रीपेटेकको तर्क प्रमाणयुक्त छैन । मध्यकालको उत्तरार्धमा जस्तै सुरुदेखि नै 'नेपालमण्डल' सानो र खण्डित थियो भन्ने पूर्वधारणा लिइएको हुँदा यो भ्रम फैलिएको हो । तर यसबेलासम्म नेपालमण्डल टुकिएको थिएन । यस विषयमा तल यथास्थानमा प्रकाश पारिनेछ ।

राजा गुणकामदेवले कति वर्ष शासन गरे भन्ने कुरा निश्चित रूपमा भन्न सकिँदैन । गोपालवंशावलीकारले 'राजा श्रीगुणकामदेव वर्ष ८५ मा ६' भनी समय लेखेका छन् । तर ८५ वर्ष ६ महिना यो निश्चय पनि राज्यकाल होइन; जीवितकाल (आयु) हो । गोपालवंशावलीमा राजाको समय उल्लेख गर्दा कहीँ 'राज्यकाल' दिने र कहीँ जीवनकाल (आयु) दिने गरिएको

छ । यस विषयको चर्चा माथि गरिसकेको छ । यसो हुँदा त्यहाँ उल्लिखित समय राज्यकाल हो कि जीवनकाल हो; छुट्याउनै पनि मुस्किल पर्छ । यसकारण यसताकाका राजाहरूको क्रम र समयको निर्धारणका लागि अभिलेख र हस्तलिखित ग्रन्थहरूकै भर पर्नु पर्छ । ने.सं. १०७ को गुणकामदेवको पालाको अभिलेख पाइएको र ने.सं. ११० को गुणकामदेवको हस्तलिखित ग्रन्थ पाइएको हुनाले त्यसबेला उनले राज्य गरिरहेको निश्चित भएको छ । 'सुमतिपञ्जिका' भन्ने उपर्युक्त हस्तलिखित ग्रन्थमा गुणकामदेवको वर्णन गर्दा "राजा श्रीगुणकामदेवविभुना स्वस्यैकराज्ये कृते" भनी 'एकराज्य' मा जोड दिइएको हुँदा यसताका 'द्वैराज्य' पद्धति प्रचलनमा आइसकेको थियो; तर गुणकामदेवले चाहिँ एकछत्र नै राज्य चलाएको सङ्केत पाइन्छ ।

गुणकामदेवको राज्यकाल शान्तिपूर्ण र केही समृद्ध रहेको आभास पाइन्छ । यिनले गरेका निकै धर्मकर्मको वर्णन गोपालवंशावलीकारले गरेका छन् । "पशुपतिनाथलाई यिनले एघाह्र वटा कोश चढाए; पशुपतिमै रहेका ईशानेश्वरको मन्दिरमा तामाको छाना हाले; चपाल बनाए; सुन्धाराको निर्माण गरे; कोटीहोम गरे आदि वर्णन गोपालवंशावलीमा गरिएका छन् । भाषावंशावलीमा गुणकामदेवले 'कान्तिपुर' शहर बसाएको चर्चा परेको छ । यस्तो बस्ती बसाइको विकासक्रम विचार गर्दा कान्तिपुर (काष्ठमण्डपपुरी) बसाउने गुणकामदेव यिनै हुन् कि भन्ने अनुमान हुन्छ । किनभने कान्तिपुर, काष्ठमण्डपपुरीको उल्लेख यसैताका भनेजस्तै पाइन्छ । त्यसताकाको परिभाषाअनुसार सहरको एक प्रमुख अङ्ग 'मण्डप' पनि हुन्थ्यो । 'मण्डप' सभाभवनको विशिष्ट अथवा डबलीका रूपमा साधारण पनि हुन्थ्यो । तर 'काष्ठमण्डप' नेपाली पुरानो वास्तुशैलीमा भव्य रूपमा बन्यो । यसो हुँदा यसै मण्डपको नाउँले सहर नै 'काष्ठमण्डप' कहलिन पुग्यो । तर गोपालवंशावलीकारले भने यस महत्त्वपूर्ण कुराको चर्चा नै गरेका छैनन् । यसकारण अरू प्रमाण नपाइएसम्म यस विषयमा निश्चित रूपमा केही भन्न सकिँदैन ।

**द्वैराज्यशासन (संयुक्तशासन)**

गुणकामदेवपछि उदयदेव राजा भएको उल्लेख गोपालवंशावलीकारले गरेका छन् । तात्कालिक हस्तलिखित ग्रन्थबाट भने यसताका नरेन्द्रदेव र उदयदेवको "द्वैराज्य" (संयुक्तशासन) बारे स्पष्ट रूपमा लेखेका छैनन्; अस्पष्ट रूपमा मात्र केही सङ्केत गरेका छन् । बरु सङ्क्षिप्त गोपालवंशावलीमा यसताकाको "द्वैराज्य" को केही चर्चा परेको छ । अब अगाडि बढ्नुभन्दा पहिले मध्यकालको सुरुदेखि अन्त्यसम्म भनेजस्तै असर पारेको "द्वैराज्य" पद्धतिबारे केही लेख्नुपरेको छ ।

प्राचीन कालदेखि प्रचलित अनेक किसिमका शासनपद्धतिमध्ये "द्वैराज्य" शासनपद्धति पनि एक हो । 'एकराजतन्त्र' पद्धतिमा गद्दीको हकदार एक जनामात्र हुन्छ; शासनाधिकार एक जनामा मात्र केन्द्रित रहन्छ । "द्वैराज्य" पद्धतिमा गद्दीका हकदार दुई वा दुईभन्दा बढी पनि हुन सक्छन् । अर्थात् एक किसिमको संयुक्तशासनपद्धति यो हो । द्वैराज्य पद्धतिमा बाबु र छोराको संयुक्तशासन पनि चल्न सक्दथ्यो; दाजुभाइहरूको संयुक्तशासन पनि चल्न सक्दथ्यो । दुई जनाको संयुक्तशासन चल्दा कहिलेकाहीँ आधाआधा इलाका छुट्याइएका हुन्थे । तापनि राज्य दुई टुका पारिएको चाहिँ हुँदैनथ्यो । दुई राज्यका रूपमा भिन्नाभिन्नै नामकरण हुँदैनथ्यो । राज्य एकै मानिन्थ्यो; शासनमात्र दुई जनाको चल्दथ्यो । द्वैराज्यशासनमा प्रायः गरी इलाका छुट्याउने काम पनि हुँदैनथ्यो; संयुक्त रूपमै दुई वा दुईभन्दा बढी शासकहरू घोषित गरिन्थे ।

'द्वैराज्य' पद्धतिको कहीँ राम्रो नतिजा निस्केको र कहीँ नराम्रो नतिजा निस्केको हुनाले यस पद्धतिबारे पुराना शास्त्रकारहरूमा मतभेद रहेको छ । यसो हुनाले आचार्य कौटल्यले यस विषयको विचार 'व्यसनाधिकरण' मा गई गरेका छन् । द्वैराज्यपद्धतिमा प्रायः शासकवर्गमध्ये आफूआफूमै सङ्घर्ष हुने हुनाले यसको नाश हुने गर्दछ; यसकारण 'वैराज्य' पद्धतिभन्दा 'द्वैराज्य' पद्धति खराब छ भन्ने भाव केही पूर्वाचार्यहरूले व्यक्त गरेका छन् । तर आचार्य कौटल्यले 'वैराज्य' भन्दा त 'द्वैराज्य' पद्धति नै बरु असल हुन्छ । किनभने यसमा राज्य बाबु-छोरा, दाजु-भाइहरूको साझा हुने हुनाले अमात्यहरूले मनपरी गर्न पाउँदैनन् भन्ने भावको आशय व्यक्त गरेका छन् । जे होस्, व्यसनाधिकरणमा 'राजराज्ययोर्व्यसनचिन्ता' प्रकरणमा आएर यस विषयमा विचार गरिएको हुनाले द्वैराज्यशासनपद्धतिबाट राज्यमा व्यसन आइपर्न सक्छ; वैराज्यपद्धतिभन्दा मात्र यो पद्धति केही असल हो भन्ने विचार कौटल्यको पनि रहेको स्पष्ट छ ।

लिच्छविकालमा नेपालमा 'द्वैराज्य' पद्धति चलेको देखिएको छैन । लिच्छविकालमा उठानमा कस्तो शासनव्यवस्था चलेको थियो भन्ने कुरा अनुसन्धानको कमीले गर्दा निश्चित गर्न सकिएको छैन । तर जब केही प्रामाणिक इतिहास पत्ता लाग्यो; त्यसबेला राजक्रम वंशानुगत भएको हामीले पाएकाछौँ । अर्थात् त्यसबेला प्रायः बाबुपछि छोरा गद्दीमा बस्ने 'एकराज' पद्धति नै कायम भएको देखिएको छ । बरु लिच्छविराजा गद्दीमा रहे तापनि शासनाधिकार लिच्छविभन्दा भिन्न अर्कै वंशका व्यक्तिको हातमा पुगेको उदाहरण भने लिच्छविकालमा पाइन्छ । साथै क्रमशः शासनाधिकारमा हात लगाउँदै लिच्छविराजासँगै अरू गुप्त आदिहरु संयुक्त राजा हुन पुगेको उदाहरण पनि लिच्छविकालमा पाइन्छ । तर लिच्छवि-

राजवंशहरूकै मध्येमा बाबु वा दाजुभाइहरूको 'द्वैराज्य' रूपको संयुक्तशासन चलेको उदाहरण भने पाइएको छैन ।

मध्यकालको सुरुदेखि भने नेपालमा 'द्वैराज्य' शासन बराबर कायम भएको हामी पाउँछौं । यस पद्धतिले पूरै मध्यकालको राजनीतिलाई प्रभावित पारेको पाइन्छ । यस कुराको पुष्टिका लागि उदाहरणका रूपमा तात्कालिक केही घटनालाई औंल्याउनु आवश्यक छ ।

ने.सं. ११९ (वि.सं. १०५५) मा लेखिएको 'अष्टसहस्रिका प्रज्ञापारमिता' भन्ने हस्तलिखित ग्रन्थबाट त्यसबेला राजा नरेन्द्रदेव र उदयदेवको संयुक्तशासन अर्थात् 'द्वैराज्य' चलिरहेको थियो भन्ने थाहा पाइन्छ । यी नरेन्द्रदेव र उदयदेवमा के नाता पर्दथ्यो भन्ने दर्साउने प्रमाण पाउन सकिएको छैन । शायद यी दुई दाजुभाइ हुन् । जेहोस्, यी दुईको द्वैराज्य (संयुक्त राज्य) चलेको थियो भन्ने कुराचाहिँ उपर्युक्त ग्रन्थमा उल्लिखित पुष्पिकावाक्यबाट स्पष्ट थाहा पाउन सकिन्छ । विचारार्थ उक्त पुष्पिकावाक्य यहाँ उद्धृत गरिन्छ–

"सम्वत् ११९ मार्ग्गशिरशुक्लदिवा पूर्ण्णमास्यां प्रतिष्ठापितः श्रीगण्डीगुल्मकनिवासिन सुवर्ण्णकारश्रीराणकस्य ... । महाराजाधिराज परमेश्वरश्रीनरेन्द्रदेवभट्टारकस्य श्रीउदयदेवयो भट्टारकयो उभयराज्ये लिखितमिति"

[ने.सं. ११९ (वि.सं. १०५५) मार्ग शुक्ल पूर्णिमाका दिन श्रीगण्डीगुल्ममा बस्ने सुवर्णकार (सुनार) श्रीराणकले प्रतिष्ठा गरेको हो । ... महाराजाधिराज परमेश्वर श्रीनरेन्द्रदेव भट्टारक र श्रीउदयदेव भट्टारकको द्वैराज्यमा यो लेखिएको हो ।]

यस पुष्पिकावाक्यमा प्रयुक्त 'उभयराज्य' शब्दले 'द्वैराज्य'लाई नै लक्ष्य गरेको हो भन्ने कुरामा शङ्का छैन । मध्यकालको उत्तरार्धसम्म पनि दुइ जनाको संयुक्तराज्यलाई 'उभयराज्य' भनिन्थ्यो । यसैगरी 'उभय' शब्दकै अनुकृतिमा तीन जनाको संयुक्तशासनलाई 'त्रिभय', चार जनाको संयुक्तशासनलाई 'चवभय', पाँच जनाको संयुक्तशासनलाई 'पञ्चभय' भन्ने शब्दहरूको समेत प्रचलन थियो ।

यसको लगत्तैपछि ने.सं. १२८ (वि.सं. १०६४) को अर्को हस्तलिखित ग्रन्थबाट त्यसबेला निर्भयदेव र रुद्रदेवको संयुक्तशासन चलिरहेको पाइन्छ । त्यस हस्तलिखित ग्रन्थमा सो संयुक्तशासनलाई स्पष्ट रूपमा 'द्विराज्य' शब्दद्वारा नै व्यक्त गरिएको छ । विचारार्थ त्यसको एक अंश यहाँ उद्धृत गरिएको छ-

"अब्दे सते साष्टकविंसयुक्ते
मासे शुभे फाल्गुणशुक्लपक्षे .... नेपालराष्ट्र

श्रीनिर्भयस्य नृपतेः सुरसन्निभस्य
श्रीरुद्रदेववसुधाधिपतेश्च रम्ये
एवं द्विराज्यकमतोद्यतपात्रवर्गे
राज्ये परि ... कवितवैरिसङ्घे
श्रीर्ल्हंविहार इति कीर्त्तितकीर्त्तिपुञ्जे ॥"

[ने.सं. १२८ (वि.सं. १०६४) फाल्गुन शुक्ल ..... देवताजस्ता श्रीनिर्भयदेव र राजा श्रीरुद्रदेवको राम्रो 'द्वैराज्य'मा, यस द्वैराज्यले गर्दा पात्रहरू उद्यमशील भएका बेलामा, ... वैरीहरू सखाप पारेको .... । नाउँ चलेको श्रीर्ल्हंविहारमा]

यसको लगत्तैपछि भोजदेव अगाडि देखा पर्छन् र रुद्रदेव र भोजदेवको 'द्वैराज्य' चल्दछ । पाटन गचाननीको ने.सं. १३२ (वि.सं १०६९) को अभिलेखबाट रुद्रदेव र भोजदेव काकाभतिजा हुन् भन्ने थाहा पाइन्छ । अमावास्यामा चन्द्र र सूर्य सँगै रहे जस्तै काकाभतिजा सँगै रही शासन गरिरहेका छन् भन्ने वर्णन सो अभिलेखमा परेको छ । विचारार्थ सो अभिलेखको अलिकता अंश यहाँ उद्धृत गरिन्छ–

"राज्ये पुण्यमलङ्कृतयशनिधिः श्रीरुद्रदेवो नृपः ।
साधुभ्रातृजपुत्र धर्म्मणि रतिश्रीभोजदेवोपि राट् ।
तावेतौ शशिभास्करोपमतिथौ सन्दर्शकालेहनि
नेपाले गहणारविन्दकुमुदश्रीलालिताख्ये पुरे ॥
....सम्वत् १३२ प्रथमाशाढ शुक्लदिवा त्रीयोदश्याम्बृह-
स्पतिदिने मैत्रनक्षत्र देव प्रतिष्ठितमिति"

[नेपालराज्यमा धर्मात्मा कीर्ति फैलिएका राजा रुद्रदेव हुनुहुन्छ । उहाँका भतिजा सज्जन धर्मात्मा श्रीभोजदेव पनि राजा हुनुहुन्छ । औंसीका दिनमा चन्द्र र सूर्य सँगै रहेजस्तै उहाँ दुइ जना सँगै रही मिलेर शासन गरिरहनुभएको छ । ...

ने.सं. १३२ (वि.सं. १०६९) प्रथम आषाढ शुक्ल त्रयोदशी बृहस्पतिवार अनुराधा नक्षत्रमा देवताको प्रतिष्ठा गरिएको हो ।]

यस अभिलेखमा 'अभयराज्य' वा 'द्वैराज्य' जस्तो शब्दको त प्रयोग गरिएको छैन । तर यस अभिलेखबाट द्वैराज्यपद्धतिको मूल भावना भने राम्ररी व्यक्त भएको छ । यस अभिलेखमा राजाका रूपमा रुद्रदेव र भोजदेवको नाम उल्लेख गरिएको छ । यी रुद्रदेव र भोजदेव काका भतिजा हुन् भन्ने कुरा पनि यस अभिलेखबाट थाहा पाइन्छ । औंसीका दिन सूर्य र चन्द्र जसरी सँगै रहन्छन्; त्यसै गरी रुद्रदेव र भोजदेवले सँगै रही शासन चलाइरहेका छन् भन्ने वर्णन पनि यस अभिलेखमा परेको छ । 'द्वैराज्य' शासनपद्धतिको आदर्श नै यो थियो । स्मरणीय छ; कालिदासले पनि द्वैराज्यपद्धतिको यही भावनालाई जोड दिएका छन् । औंसीमा चन्द्र र सूर्य

मिलेर रहेजस्तै बाबु-छोरा, दाजु-भाइ, काका-भतिजा आदिले मिली संयुक्त रूपमा शासन अधिकार चलाएपछि अधिकार हात लगाउन गरिने षड्यन्त्रले कम स्थान पाउँछ र यो पद्धति बलियो हुन्छ भन्ने भावना यस पद्धतिमा रहेको थियो । तर द्वैराज्यपद्धतिले मध्यकालको नेपालको राजकाजमा सबलताभन्दा दुर्बलता नै बढी ल्याएको देखा परेको छ ।

यसको केही कालपछि रुद्रदेव, भोजदेवका साथै लक्ष्मीकामदेव पनि यस संयुक्तशासनमा सम्मिलित हुन्छन् । यो कुरा ने.सं. १३५ (वि.सं. १०७२) मा लेखिएको एक हस्तलिखित ग्रन्थबाट थाहा पाइन्छ । त्यसको एक अंश यस प्रकारको छ–

"पञ्चत्रिंशाधिकेब्दे शततमप्रशते चैत्रमासे हिमाभे
विख्यातेस्मिन् दशम्यान्दितिजरिपुगुरोर्वाशरे संप्रसस्ते ।
राज्ञि श्रीभोजदेवेप्यमितगुणगणालब्दश्रीरुद्रदेवे
श्रीलक्ष्मीकामदेवैररिगजकुलिशैरर्धराज्योपभुक्ते ॥"

[ने.सं. १३५ (वि.सं. १०७२) चैत्र शुक्ल दशमी बृहस्पतिवारका दिन, राजा श्रीभोजदेव ठूला गुणी श्रीरुद्रदेव र शत्रुलाई जित्ने श्रीलक्ष्मीकामदेवले आधाआधा राज्य चलाइरहेका बेलामा (अर्थात् 'द्वैराज्य=संयुक्तराज्य' चलाइरहेका बेलामा)]

यी केही उदाहरणबाट मध्यकालको सुरुतिर नेपालको शासनमा 'द्वैराज्य' (संयुक्तशासन) पद्धतिले स्थान पाएको थियो भन्ने सिद्ध हुन्छ । यसरी संयुक्तशासन चलेको थियो तापनि प्रायः गरी यिनीहरूमा अधिकार-विभाजन आदि भएको भने हामी पाउँदैनौं । यसो हुँदा यिनमा जो बाठा हुन्थे; तिनले अरूलाई अँठ्याई शासनाधिकार एकलौटी पार्ने चेष्टा गर्दथे । यसबाट परस्परमा कहिलेकाहीँ सङ्घर्ष पनि हुन्थ्यो । यसरी यस चलनले केन्द्रको शासनमा क्रमशः कमजोरी ल्याउन थाल्यो ।

यसको केही कालपछि द्वैराज्यपद्धतिमा देखा परेको सङ्घर्ष टाल्ने अर्को नयाँ प्रयोग भएको हामी पाउँछौं । त्यसबेला (विक्रमको बाह्रौं शताब्दीको उत्तरार्धमा) केन्द्रको शासन एकचोटि फेरि केही सुदृढ भयो । शिवदेवजस्ता योग्य शासक त्यसबेला देखा परे । उनले आर्थिक उन्नतितिर पनि दृष्टि दिए, विद्वान्हरूलाई पनि प्रश्रय दिए; साथै शासनव्यवस्थामा सुधार गर्ने चेष्टा पनि गरेको बुझिन्छ । त्यसबेला दाजुभाइहरूको संयुक्तशासन खडा गर्नु सट्टा दाजुपछि भाइ नै विधिवत् उत्तराधिकारीका रूपमा गद्दीमा बस्ने प्रथा प्रचलनमा ल्याइयो । त्यसअनुसार आनन्ददेव, रुद्रदेव र अमृतदेवहरूले क्रमशः शासन गरे । यो प्रथा धेरै कालसम्म प्रचलनमा आउन नपाउँदै अर्को राजवंश शक्तिमा आयो । त्यो हो मल्लवंश । यस वंशका अरि मल्ल, अभय मल्लहरूले बाबुपछि छोरा गद्दीमा बस्ने क्रम नै चलाए । तर यसको

लगत्तैपछि पुरानो 'देव' कहलाएका राजवंश र मल्लराजवंशमध्ये एकान्तर रूपमा गद्दीमा बस्ने विचित्र शासनपद्धति अस्तित्वमा आयो । यस पद्धतिअनुसार एक राजवंशका व्यक्ति गद्दीमा बसेका छन् भने अर्को राजवंशका व्यक्ति युवराज घोषित गरिन्थे । जस्तै जयभीमदेव राजा गद्दीमा बसेका बेला उनका छोरा युवराज घोषित गरिएनन्; अर्को वंशका युवराज बनाइए । राजा अनन्त मल्ल गद्दीमा बस्दा उनका छोरा अरि मल्ल युवराज भएनन्; जयभीमदेवका छोरा जयादित्यदेव युवराज घोषित गरिए । दुई राजवंशमा एकान्तर रूपमा गद्दीमा बस्ने यस पद्धतिले त पछि केन्द्रमा खुला सङ्घर्षलाई नै निम्त्यायो । यसमा बाहिरका खसराज्य र तिरहुतराज्यले समेत हस्तक्षेप गर्न थालेपछि केही काल केन्द्रको शासन एकदम कमजोर बनेको थियो ।

यसै बीच स्थिति मल्लको उदय भएपछि केही नयाँ मोड आयो; दुई राजकुलको खिचातानीको राजनीतिको अन्त्य भयो । तर 'राजल्लदेवीका पति' का हैसियतले स्थिति मल्लको उदय भएको हुनाले नयाँ ढङ्गको शासनपद्धति खडा गर्न स्थिति मल्ल समर्थ भएनन् । उनीपछि 'द्वैराज्य' अर्थात् संयुक्तशासनपद्धति नै फेरि स्पष्ट रूपमा अस्तित्वमा आयो । उनीपछि उनका धर्ममल्ल, ज्योतिर्मल्ल, कीर्ति मल्ल तीनै छोराहरू राजा घोषित गरिए । पछि बाठा ज्योतिर्मल्लले एकलौटी शासन कायम गरे । ज्योतिर्मल्लपछि उनका दुई छोरा यक्ष मल्ल र जीव मल्लको संयुक्तशासन खडा भयो । यो 'द्वैराज्य' आमा संसारदेवी जीवित छउन्जेल चल्यो । त्यसपछि यक्ष मल्लले एकलौटी पारे । यक्ष मल्लपछि उनका छोराहरूको संयुक्तशासन चल्यो । यहाँनिर अलिकता विशिष्टता देखापऱ्यो । यक्ष मल्लले आफ्नी छोरीका छोरालाई पनि आफ्ना छोरासरह स्थान दिलाउने व्यवस्था गरेका हुनाले दोहित्र भीम मल्ल पनि राय मल्ल रत्न मल्लहरूसरह संयुक्तशासक घोषित गरिए । तर संयुक्तशासनले सन्तुष्ट नभई आफ्नोआफ्नो बेग्लै स्वतन्त्र राज्य खडा गर्ने दाउपेच रत्न मल्लहरूले खेलेका हुनाले त्यसबेला भक्तपुर, कान्तिपुर र ललितपुर तीन स्वतन्त्र राज्यका रूपमा देखापरे ।

यी तीन राज्य खडा भएपछि यी तीनै राज्यमा पनि संयुक्तशासनपद्धति कायम भएको हामी पाउँछौं । यसले मल्लराजपरिवारमा सङ्घर्ष पनि निकै गरायो । भक्तपुर राज्यलाई प्राण मल्लले अँठ्याएपछि उनका काका वीर मल्ल दाजु जित मल्लहरूले जुन विरोधी दल खडा गरे तथा ने.सं. ६६८ को पशुपतिको प्रसिद्ध सन्धि गरे; त्यसले गर्दा ललितपुर, दोलखा आदि धेरै प्रदेश मल्लराजाहरूको आधिपत्यबाट मुक्त भई स्वतन्त्र बने । यस प्रसङ्गमा एउटा कुरा उल्लेखनीय रहेको छ । मल्लराजाहरूको संयुक्तशासनबाट भएको सङ्घर्षबाट लाभ उठाई दोलखा, ललितपुर आदि स्वतन्त्र भएका थिए । तर

दोलखा, ललितपुर आदिका शासकहरूले यस कुराबाट शिक्षा भने लिएनन्। उनीहरूले पनि संयुक्तशासनलाई नै रोजे । दोलखामा इन्द्रसिंहदेव आदि पाँच जना दाजुभाइहरूको संयुक्तशासन चल्यो । तर यसले दोलखाको शासनलाई कमजोर तुल्यायो । यसै गरी महापात्र विष्णुसिंहले कति कष्ट गरी ललितपुरमा आफ्नो एकलौटी शासन खडा गरेका थिए । तर उनीपछि उनका तीन जना छोराहरूको संयुक्तशासन ललितपुरमा खडा भयो । यी तीन दाजुभाइहरूमा विशेष गरेर पुरन्दरसिंह र उद्धवसिंहमा सङ्घर्ष भयो । जसले गर्दा ललितपुरलाई कमजोर तुल्यायो । मल्ल राजाहरूले यस सङ्घर्षलाई रोक्ने प्रयास नगरेका होइनन् । तर निकै अघिदेखि जरो गाडेर रहेको 'द्वैराज्य' अर्थात् संयुक्तशासनपद्धतिको भावनाले जकडिरहेको हुनाले मल्लकालको अन्तिम समयसम्म पनि यस पद्धतिलाई त्याग्ने विचारधारा प्रबल हुन सकेन । कान्तिपुरका अन्तिम मल्लराजा जयप्रकाश मल्ललाई कमजोर बनाउने तत्त्वमध्ये उनका भाइहरूको संयुक्तशासन कायम गर्ने प्रयास पनि एक थियो । मल्लराजाहरूलाई मात्र होइन, श्री ५ पृथ्वीनारायण शाहलाई समेत यस पद्धतिले पछ्याउन छोडेको थिएन । कान्तिपुर विजयपछि पृथ्वीनारायण शाहका भाइहरूले संयुक्तशासन खडा गर्ने जुन इच्छा व्यक्त गरेका थिए; त्यसमा उही पुरानो द्वैराज्यपद्धतिको भावनाले काम गरेको देखिन्छ । तर दूरदर्शी पृथ्वीनारायण शाहले यो कुरा स्वीकार नगर्दा उनका चारै भाइहरू विद्रोही बने । यस अवस्थालाई सम्हाल्न पृथ्वीनारायण शाहलाई निकै अप्ठ्यारो पऱ्यो । पछि दोलखाभेगको अब्बल भाइ दलजित्‌लाई सुम्पेको घटनाले पृथ्वीनारायण शाहले समेत यस पद्धतिलाई सर्वात्मना तोड्न सकेनन् भन्ने दर्साएको छ । जे होस्; पछि पृथ्वीनारायण शाह यस पद्धतिलाई तोड्न सफल भए ।

माथि उल्लिखित सङ्क्षिप्त वर्णनबाट पूरै मध्यकाललाई 'द्वैराज्य' शासनपद्धतिले प्रभावित पारेको स्पष्ट थाहा पाइन्छ । द्वैराज्यपद्धतिले त्यसताका यसरी जरो गाडेर रहनामा त्यसबेलाको सामाजिक धारणा पनि प्रमुख कारण बनेको देखिएको छ । देवमन्दिर, गुठी आदिको सञ्चालन र अरू धेरै सामाजिक क्रियाकलापहरू त्यसताका मिलेर संयुक्त रूपमा चलाउने परम्परा कायम भएको थियो । यसो हुँदा राजगद्दीमा बस्ने कुरामा समेत 'द्वैराज्य' पद्धतिले प्रश्रय पायो; 'एकराज' पद्धति त्यति प्रबल हुन सकेन । आचार्य कौटल्यले भनेजस्तै साझा भावना हुँदा कहिलेकाहीँ यस पद्धतिले केही राम्रो नतिजा पनि निकाल्यो । तापनि प्रायः दाजुभाइहरूमा सङ्घर्षको वातावरण नै यस पद्धतिले बढी खडा गऱ्यो र मध्यकालको राजनैतिक अवस्थालाई कमजोर तुल्यायो । यसो भए तापनि कैयौं शताब्दीसम्म यस शासनपद्धतिले जरो गाडेको देख्दा यस पद्धतिको गुणपक्षबारे पनि खोजी गर्दै जानु आवश्यक देखिन्छ । यो पद्धति

मल्लराजाहरूमा मात्र होइन; पश्चिमका खसराजाहरूमा र सेन आदि मध्यकालका अरू राजाहरूमा पनि केही अंशमा देखापरेको छ । तर बुद्धि पुऱ्याएर दूरदर्शी, राजनीतिज्ञ पृथ्वीनारायण शाहले भने यस पद्धतिलाई तोडेर मध्यकालको राजनीतिलाई नयाँ मोड दिए ।

**उदयदेव**

ने.सं. ११९ (वि.सं. १०५५) मा नरेन्द्रदेव र उदयदेवको 'द्वैराज्य' चलिरहेको चर्चा माथि गरिसकेको छ । यसको ५ वर्षपछिको एक अभिलेख प्राप्त भएको छ । त्यसमा नरेन्द्रदेवको चर्चा छैन । नेपालमण्डलका राजाका रूपमा त्यसमा उदयदेवको मात्र चर्चा परेको छ । तात्कालिक अवस्थामा प्रामाणिक रूपमा प्रकाश पार्ने हुनाले त्यसको उद्धरण यहाँ गरिएको छ–

"ॐ सम्वत्सरे शततमे चतुर्व्विंशतिका(धिके) ।
चैताख्यसितद्वादश्यां शशिपुत्रदिने शुभे ॥
श्रीमहोदयदेवस्य राज्ये नेपालमण्डले ।
श्रीजिग्लोद्गमविषये विद्वत्साधुजनान्विते ॥
कोशं प्रादघाद् गरुडध्वजाय श्रद्धान्वितः श्रीलृपनो म .. ॥
अनेन पुण्येन भवन्तु लोका भुक्तित्वमुक्तित्वफलैः समेताः ॥ ०॥"

[ॐ । ने.सं. १२४ (वि.सं. १०६१) चैत्र कृष्ण द्वादशी बुधबारका शुभ दिनमा ठूला श्रीउदयदेवको राज्यमा, नेपालमण्डलमा विद्वान्हरू र असल मानिसहरू भएको श्रीजिग्लोद्गम भन्ने विषय (जिल्ला) मा,

श्रद्धालु श्रीलृपनले.... गरुडध्वज विष्णुलाई कोश चढाए । यस पुण्यले गर्दा लोकले भुक्ति र मुक्तिको फल पाऊन् ।]

गोपालवंशावलीकारले उदयदेवको राज्यकाल पाँच वर्ष, पाँच महिना लेखेका छन् । सङ्क्षिप्त गोपालवंशावलीमा भने उनको राज्यकाल ६ वर्ष लेखिएको छ । हस्तलिखित ग्रन्थ र अभिलेखबाट ने.सं. ११९ देखि १२४ सम्म उनको शासन चलिरहेको देखिएको र ने.सं. १२५ मा शासकका रूपमा निर्भयदेवको उल्लेख भएको हुनाले वंशावलीकारले लेखेको उदयदेवको राज्यकाल केही मिलेको देखिन्छ ।

**नेपालमण्डल**

यसबेलासम्म नेपाल राज्य टुकिइसकेको थिएन; नेपालराज्यभित्र अनेक विषय (जिल्ला)हरू थिए; केन्द्र र ती विषयहरूलाई समेत बुझाउन त्यसबेला 'नेपालमण्डल' शब्द व्यवहृत हुन्थ्यो भन्ने कुरा यसबेलाका हस्तलिखित ग्रन्थ, अभिलेख आदि ऐतिहासिक सामग्रीबाट थाहा पाइन्छ । उदयदेवका पालाको माथि उद्धृत अभिलेखबाट पनि उक्त कुराको पुष्टि हुन्छ । उक्त अभिलेख उदयदेवले नेपालमण्डलका राजाका हैसियतले शासन चलाइरहेका बेलामा 'जिग्लोद्गम' भन्ने विषय (जिल्ला)मा कुँदाएका हुन् ।

यसबेला काठमाडौँउपत्यका र आसपासका क्षेत्रमा मात्र नेपालराज्य सीमित थियो भन्ने धारणाले गर्दा यस्ता 'विषय'हरूको खोजीतिर विद्वान्हरूको ध्यानै गएको छैन । यसकारण 'जिग्लोद्गम' विषय कता पर्दथ्यो भन्ने निश्चित गर्न सकिएको छैन । तर यो गण्डकीप्रस्रवणक्षेत्रमा अथवा त्योभन्दा पनि पश्चिमपट्टि कतै हुनुपर्दछ भन्ने अनुमान गर्न सकिन्छ । माथि उद्धृत अभिलेखबाट जिग्लोद्गम विषय विकसित बस्ती थियो भन्ने सङ्केत पाइन्छ । जिग्लोद्गम विषयको वर्णन गर्दा यस अभिलेखमा 'विद्वत्साधुजनान्विते' भन्ने कुरामा जोड दिइएको छ । यसबाट सांस्कृतिक विकासका दृष्टिले पनि सो प्रदेश निकै अगाडि बढेको सङ्केत पाइन्छ । अर्को कुरा, गरुडध्वज (विष्णु) लाई 'कोश' चढाई यो अभिलेख कुँद्न लगाउने व्यक्तिको नाउँ अलि अर्कै खालको छ; सो हो 'लृपन' । यो कुन परिवारको भाषाको शब्द हो; सो खुट्याउन सके जिग्लोद्गम विषयको स्थान निर्धारणका लागि यसबाट निकै मद्दत हुने देखिन्छ । साथै यस जिल्लाको नाउँ स्वयम् पनि भाषाशास्त्रका दृष्टिले विचारणीय छ ।

गोपालवंशावलीकारले यस्ता 'विषय' (जिल्ला)हरूको चर्चा गरेका छैनन् । तैपनि तात्कालिक नेपाल चिन्न अत्यावश्यक भएको हुनाले यस विषयमा पनि यहाँ सङ्क्षिप्त रूपमै भए पनि केही विवेचना गर्न आवश्यक छ ।

त्यसताका केन्द्रबाट सोझै शासन गरिने प्रदेश र सामन्तद्वारा शासन गरिने प्रदेश गरी नेपालराज्य मुख्य रूपमा दुई भागमा विभक्त थियो । 'नेपालमण्डल' शब्दले उक्त दुवै भागलाई बुझाउँथ्यो । आजकाल प्रचलित 'राष्ट्र' शब्दको पर्यायका रूपमा त्यसबेला 'मण्डल' शब्द प्रचलित थियो । 'नेपालमण्डल' शब्दको प्रयोग लिच्छविकालमै भइसकेको थियो । तापनि मध्यकालमा यो शब्द अझ बढ्ता प्रचलित रह्यो । मध्यकालमा केन्द्रमा सैनिक शक्तिको कमी रहेको हुँदा सामन्तद्वारा शासन गरिएका प्रदेशको महत्त्व पहिलेभन्दा बढी रह्यो । यसकारण नेपालमण्डलभरि प्रभाव कायम रहनु मध्यकालका शासकहरूका दृष्टिमा गौरवको कुरा रहेको थियो । अर्को कुरा नेपालमण्डल शब्दको प्रयोग राजधानीका बासिन्दाभन्दा बाहिरका प्रदेशका बासिन्दाहरू बढी गर्दथे । उनीहरूले आफ्नो परिचय दिनुपर्दा नेपालमण्डलको चर्चा पहिले गरी अनि आफ्नो विषय (जिल्ला) को चर्चा गर्दथे ।

प्रशासन चलाउन सुविधा होस् भनी राज्यलाई अनेक 'विषय' मा विभक्त गर्ने चलन प्राचीन कालदेखि थियो । यस्ता विषयको प्रशासन चलाउन 'विषयपति' नियुक्त गरिन्थे । मध्यकालको सुरुसुरुसम्म नेपालमण्डलभित्र अनेक विषयहरू कायम थिए । त्यहाँ विषयपतिहरू पनि रहन्थे । तर तिनका रूप भने निकै बदलिसकेको थियो । त्यसैले विषयपतिहरू प्रायः गरी पुस्तैनी अधिकार पाएका महासामन्त रूपका हुन थालेका थिए । यसरी अघिका

'विषय' (जिल्ला)हरू क्रमशः सामन्तराज्यका रूपमा परिणत हुँदै गए । पाठकहरूलाई यस विषयमा विचार गर्न सजिलो होस् भनी तात्कालिक अभिलेख, हस्तलिखित ग्रन्थ आदि ऐतिहासिक सामग्रीहरूमा देखापरेका त्यस्ता 'विषय'हरूका बारेमा यहाँ केही विचार गर्नु आवश्यक छ ।

**गण्डीगुल्मविषय**

सर्वप्रथम यसको उल्लेख ने.सं. ११९ (वि.सं. १०५५) को एक हस्तलिखित ग्रन्थमा आएको छ । गण्डीगुल्ममा बस्ने सुवर्णकार (सुनार) राणा (मगर)ले सारेको उक्त ग्रन्थमा "श्रीगण्डीगुल्मकनिवासिन सुवर्ण्णकार श्रीराणकस्य..." भन्ने उल्लेख परेको छ । नरेन्द्रदेव र उदयदेवको द्वैराज्यकालमा सो लेखिएको हो भन्ने पनि त्यसमा चर्चा परेको छ । त्यसमा 'गण्डीगुल्म'लाई 'विषय' भनिएको छैन । तर यसभन्दा पछिको ने.सं. २१३ को राजा हर्षदेवको राज्यकालमा लेखिएको अर्को हस्तलिखित ग्रन्थमा "श्रीगण्डीगुल्मविषये कुलपुत्र कायस्थ श्रीजीवधरसिंहस्य पुस्तकम्" भनी स्पष्ट रूपमा गण्डीगुल्मलाई 'विषय' भनिएको छ । यसभन्दा अलिपछि लेखिएको अर्को हस्तलिखित ग्रन्थबाट यस भेगमा कुनै बौद्धविहार पनि थियो भन्ने थाहा पाइन्छ । यहाँ लेखिएका उक्त तीनै हस्तलिखित ग्रन्थ 'अष्टसाहस्रिका प्रज्ञापारमिता' हुनाले पनि यसताका यस भेगमा बौद्ध धर्म फैलिएको सङ्केत पाइन्छ । उक्त तीन ग्रन्थमध्ये दुइटा भोटको शक्यामठमा पुगेको हुनाले भोटसँग पनि यस प्रदेशको सम्बन्ध रहेको सङ्केत पाइन्छ ।

श्रीलुशियानो पेटेकले 'गण्डीगुल्म' ललितपुरभेगमा कतै पर्दथ्यो होला भन्ने अनुमान गर्नुभएको छ । यसरी यस विषयमा बढी खोजखबर गर्नुपर्ने त्यतिको आवश्यकता ठानिएन । तर गण्डीगुल्म ललितपुरभेगमै भएको भए यस प्रदेशलाई 'विषय' (जिल्ला) भन्नुपर्ने आवश्यकता थिएन । यो विचारणीय कुरा छ । ललितपुरभेगमा लेखिएका कुनै पनि ग्रन्थमा 'विषय' को उल्लेख आएको छैन । यसकारण 'गण्डीगुल्म' ललितपुरभेगमा होइन; उपत्यकाबाहिर पश्चिम वा पूर्वपट्टि रहेको 'विषय' (जिल्ला) हो भनी सहजै अनुमान गर्न सकिन्छ ।

'गण्डकी' नदीलाई 'गण्डी'मात्र भन्ने चलन पनि थियो । वास्तवमा मूलशब्द त 'गण्डी' नै हो । त्यसलाई संस्कृतीकरण गरिएपछि मात्र 'गण्डकी' शब्द बनेको हो । यसकारण गण्डीगुल्मविषय गण्डकी नदीकै नजिकै रहेको प्रदेश होला भनी अनुमान गर्न गाह्रो छैन । पहिले यस भेगमा कुनै सुदृढ गुल्म (सुरक्षाचौकी) रहेको थियो; त्यही विकसित भएपछि 'विषय' को रूपमा परिवर्तित भएको देखिन्छ । यस आधारमा विचार गर्दा गण्डीगुल्मविषयको सम्झना वर्तमान गुल्मीभेगले दिलाइरहेको छ भन्ने लाग्छ । यस कुराको प्रकारान्तरले पुष्टि यसैताका लेखिएको हस्तलिखित ग्रन्थमा 'लम्जुङ्गु' प्रदेशको उल्लेख पाइने हुनाले हुन्छ । ने.सं. १८९ मा

राजा शङ्करदेवका पालामा लम्जुङ्गुंमा बस्ने गङ्गा राना (मगर)ले सो ग्रन्थ सारेको हो । 'गुं' शब्दले डाँडोलाई बुझाउने हुनाले 'लम्जुङ्गुं' वर्तमान लमजुङभेग नै हो भन्ने कुरामा शङ्का छैन । भोटसँगको व्यापारसम्बन्धले गर्दा कालीगण्डकीका आसपासका हिमालभेगदेखि पाल्पाभेगसम्मकै प्रदेशमा अनेक बस्ती यस ताका निकै विकसित भएका थिए ।

जबसम्म पश्चिम कर्णालीप्रदेशमा खसराज्यको स्थापना भएको थिएन तथा यस राज्यले गण्डकीप्रदेशमा समेत आफ्नो प्रभाव फैलाएको थिएन; त्यसबेलासम्म केन्द्रका (नेपालउपत्यकाका) शासकहरूको आधिपत्य यस भेगमा कायम थियो । यस प्रसङ्गमा यो पनि विचारणीय छ ।

**जिग्लोद्गमविषय**

यस विषयबारे माथि नै केही लेखिसकिएको छ । विष्णुलाई कोश चढाई कुँदाइएको अभिलेखमा जिग्लोद्गमविषयको उल्लेख आएको हुनाले यो प्रदेशमा वैष्णव धर्मको प्रसारको सङ्केत पाइन्छ । यसकारण सो प्रदेश पनि कालीगण्डकीकै किनारामा कतै हुँदो हो भन्ने लाग्छ । वास्तवमा कालीगण्डकीको प्रस्रवणक्षेत्र एक प्रकारले 'वैष्णवक्षेत्र' जस्तै बनेको थियो । माथि शिर मुक्तिनाथदेखि रिडीभेगसम्म त अनेक वैष्णव तीर्थस्थान, मन्दिर आदि पाइन्छन् । सप्तगण्डकी पछि देउघाटदेखि 'नारायणी' नामले परिवर्तित हुनामा समेत वैष्णव सम्प्रदायको प्रसारप्रचार कारण बनेको थियो । यो कुरा यस प्रसङ्गमा विचारणीय छ ।

**पन्नगविषय**

पश्चिमतिरको एक अर्को 'विषय' को उल्लेख पनि तात्कालिक हस्तलिखित ग्रन्थमा पाइन्छ; त्यो हो पन्नगविषय । ने.सं. २७० मा लेखिएको एक हस्तलिखित ग्रन्थमा "श्रीपन्नगविषयाधिपति श्रीमहासामन्त हंसदेवस्य विजयराज्ये यूपटोलकाधिवासी शिरोश्रीकुलपुत्रस्य फुलणनायकस्य" भन्ने उल्लेख परेको छ । ने.सं. २८२ को हालै प्रकाशमा आएको एक ताम्रपत्रमा पनि पन्नगविषयको उल्लेख आएको छ । त्यसमा नेपालाधिपतिका रूपमा आनन्ददेवको चर्चा परेको छ तथा विषयाधिपति महासामन्तका रूपमा रहस्यदेवको चर्चा छ । 'पन्नगविषय' ठिमीनिरको नकदेश हुन सक्छ भन्ने आशय श्रीडिल्लीरमण रेग्मीले व्यक्त गर्नुभएको छ । तर यसताका उपत्यकाभित्रका कुनै पनि बस्तीलाई 'विषय' (जिल्ला) भनिएको नपाइने हुनाले पन्नगविषय नकदेश होइन भनी सहजै अनुमान लगाउन सकिन्छ । अर्को कुरा यसबेला राजधानी भक्तपुरमा बसी शक्तिशाली शासक आनन्ददेव शासन गर्दै थिए । राजधानी भक्तपुरको नजिकैको प्रदेश नकदेशमा विषयाधिपति महासामन्तको पृथक अस्तित्व कायम हुनु कुनै हालतमा पनि सम्भव थिएन । यसकारण यो विषय पनि पश्चिमतिरकै हो भनी अनुमान गर्ने आधार नभएको होइन । 'पन्नग' शब्द 'नाग' शब्दको पर्यायवाची हो ।

पश्चिमपट्टि नागडाँडो आदि नागलाई लक्ष्य गर्ने अनेक स्थान छन् । पश्चिमका मगरहरूमा नागपूजाको प्रचलन पनि बढी रहेको सुनिन्छ । सेनवंशावलीमा सेन राजाले मगरातभेगमा आफ्नो प्रभाव फैलाउन नागहरूलाई जितेको वर्णन छ । यस आधारमा विचार गर्दा 'पन्नगविषय' मगरातभेगमा रहेको अनुमान हुन्छ । 'मंग्वर' विषयसँग 'पन्नग' विषय सम्बद्ध रहेको हुँदा पनि उक्त अनुमानको पुष्टि हुन्छ । जे होस्; विक्रमको तेह्रौँ शताब्दीको सुरुतिर 'पन्नग' नामक विषय कायम थियो; त्यहाँ महासामन्तरूपका विषयपतिको प्रशासन चल्दथ्यो भन्ने कुराचाहिँ निश्चित छ । साथै पन्नगविषयअन्तर्गतका यूपटोल, यखरको पश्चिमटोल आदिको उल्लेख हस्तलिखित ग्रन्थ, ताम्रपत्रमा आएको हुनाले यहाँ टोल टोल विभक्त विकसित बस्ती पनि थियो भन्ने सङ्केत पाइन्छ ।

**मंग्वरविषय**

यस ताकाको प्रामाणिक सामग्रीमा उल्लिखित अर्को विषयको नाम हो 'मंग्वर' । ने.सं. २२१ (वि.सं. १११७) को एक ताम्रपत्रमा 'मंग्वर' विषयको उल्लेख भएको छ । त्यसमा नेपालमण्डलका अधिपतिका रूपमा शिवदेवको उल्लेख भएको छ । मंग्वरविषयका अधिपतिका रूपमा रामदेवको उल्लेख भएको छ । उक्त ताम्रपत्रबाहेक अरू सामग्रीमा 'मंग्वर' विषयको उल्लेख भएको छैन । तर मंग्वरविषयका अधिपति ती रामदेवको भने ने.सं. २२० को एक हस्तलिखित ग्रन्थमा उल्लेख आएको छ । महासामन्त रामदेव शक्तिशाली व्यक्ति थिए भन्ने कुरा त्यताबाट थाहा पाइन्छ । उक्त ग्रन्थमा रामदेवलाई 'महासामन्ताधिपति' भन्ने विशेषण लगाइएको छ । यसबाट अरू 'विषय'का महासामन्तहरूभन्दा रामदेव माथिल्लो स्तरका थिए; उनले अरू 'विषय'का महासामन्तहरूलाई केही अँठ्याएका थिए भन्ने सङ्केत पाइन्छ । उक्त हस्तलिखित ग्रन्थमा गद्दीनसिनराजाको नामोल्लेख गरिएको छैन । उक्त ग्रन्थमा रामदेवलाई धवलस्रोतपुरका भनी लेखिएको छ । यसबाट मंग्वरविषय र धवलस्रोतपुर परस्परमा सम्बद्ध रहेको कुरा थाहा पाइन्छ । अर्को कुरा, मंग्वरविषय र पन्नगविषय आसपासमै थिए अर्थात् यी दुई विषयको सीमा जोडिएको थियो भन्ने अनुमान हुन्छ । ने.सं. २२१ को उक्त ताम्रपत्रमा 'मंग्वर' विषयअन्तर्गत रहेको 'झोन्टेश्वर' भट्टारक (महादेव) को उल्लेख परेको छ । अर्को ने.सं. २८२ को ताम्रपत्रमा पनि झोन्टेश्वर भट्टारकको उल्लेख भएको छ । त्यहाँ भने 'मंग्वर' विषयको उल्लेख नभई 'पन्नग' विषयको उल्लेख परेको छ । यसबाट झोन्टेश्वर महादेव-मन्दिर 'मंग्वर'विषय र पन्नगविषयको दोसाँधमा अथवा आसपासमा रहेको बुझिन्छ ।

'मंग्वर' यो शब्द वर्तमान 'मगर' शब्दको पूर्वरूप हो भन्ने कुरामा शङ्का छैन । हाम्रो यहाँ मध्य नेपालको अर्थात् गण्डकीप्रस्रवणक्षेत्रका केही

इलाका 'मगरात' भनेर पछिसम्म नै प्रचलित थिए । यही परम्पराअनुसार नव नेपालका निर्माता पृथ्वीनारायण शाहसम्मले "मगरातका राजा त मै हुं" भन्ने भाव आफ्नो दिव्योपदेशमा व्यक्त गरेका छन् । यसकारण 'मंग्वर' विषय उक्त मगरातप्रदेशभित्र रहेको थियो भन्ने कुरा प्रसङ्गबाट थाहा पाइन्छ । यस मंग्वरविषयको मूल केन्द्र कहाँ थियो भन्नेचाहिँ खोजी हुन बाँकी छ ।

**धवलस्रोतपुर**

मध्यकालको सुरुतिरका पश्चिमभेगका प्रसिद्ध बस्तीमध्ये एक धवलस्रोतपुर पनि हो । तीन हस्तलिखित ग्रन्थमा धवलस्रोतपुरको उल्लेख भएको छ । धवलस्रोतपुरलाई ती हस्तलिखित ग्रन्थमा 'विषय' त भनिएको छैन । तर शक्तिशाली महासामन्तहरूको प्रशासन यहाँ चल्दथ्यो; ती महासामन्तहरूको प्रशासनकेन्द्र यो थियो भन्ने कुरा ती हस्तलिखित ग्रन्थबाट थाहा पाइन्छ । सर्वप्रथम ने.सं. २२० मा लेखिएको 'आर्योष्णीष-विजयनामधारिणी' भन्ने हस्तलिखित ग्रन्थमा धवलस्रोतपुरको उल्लेख भएको छ । त्यसबेला धवलस्रोतपुरमा शक्तिशाली महासामन्त रामदेव थिए भन्ने त्यताबाट थाहा पाइन्छ । ने.सं. २२१ को ताम्रपत्रबाट रामदेव 'मंग्वरविषय' का महासामन्त थिए भन्ने थाहा पाइने हुनाले धवलस्रोतपुर 'मंग्वरविषय' अन्तर्गत थियो भन्ने बुझिन्छ । ने.सं. ३०३ मा लेखिएको 'चरकसंहिता' नामक हस्तलिखित ग्रन्थमा पनि धवलस्रोतपुरको उल्लेख भएको छ । त्यसमा महासामन्त रत्नदेवको चर्चा छ । साथै ने.सं. ३०४ मा धवलस्रोतपुरमा लेखिएको अर्को हस्तलिखित ग्रन्थ पनि पाइएको छ । 'पुर' कहलाएको, महासामन्तहरूको प्रशासनको केन्द्र रहेको 'धवलस्रोतपुर' विकसित बस्ती थियो भन्ने यताबाट थाहा पाइन्छ ।

धवलस्रोतपुर वर्तमान धुलिखेल होला भनी पं. हरप्रसाद शास्त्री, लुशियानो पेटेक आदिले अनुमान गर्नुभएको छ । तर 'धुलिखेल' यो नाम नेवार भाषा 'धरिखेर' को नेपालीकरण भएको रूप हो । मध्यकालका अभिलेख, कागजपत्र आदिमा धुलिखेललाई 'धरिक्षर', 'धरिखेर' आदि लेखिएको पाइन्छन् । धुलिखेलको संस्कृत नाउँ तात्कालिक ताडपत्र, अभिलेखहरूमा 'शिखरापुरी' भन्ने आएको छ । यसकारण धवलस्रोतपुर वर्तमान धुलिखेल होइन भन्ने स्पष्ट देखिन्छ ।

**पञ्चावतदेशविषय**

ने.सं. ३२१ मा लेखिएका एक हस्तलिखित ग्रन्थमा पञ्चावतदेशविषयको उल्लेख आएको छ । त्यसमा नेपालमण्डलका राजाका रूपमा अरि मल्लको चर्चा गरिएको छ । साथै त्यसमा "श्रीपञ्चावतदेशीयविषयाधिपतिराणक-श्रीश्रीधरसिंहस्य वर्तमाने" भनी लेखी पञ्चावतदेशविषयका प्रशासकचाहिँ श्रीधरसिंह राणा (मगर) थिए भन्ने त्यहाँ दर्साइएको छ । 'राना' (मगर)

प्रशासक भएको नेपालअन्तर्गतको यो विषय पनि नुवाकोटभन्दा पश्चिमातिरको हो भन्ने देखिन्छ ।

**उदयपुर**

यसताका सामन्तद्वारा शासन गरिएको प्रदेशका रूपमा उल्लेख भइरहने प्रदेशमध्ये एक उदयपुर पनि हो । ने.सं. १८६ मा प्रद्युम्नकामदेवको राज्यकालमा लेखिएको 'सद्धर्मपुण्डरीक' भन्ने ग्रन्थ पाइएको छ । त्यसमा उदयपुराधिपतिका रूपमा महासामन्त जनार्दनजीवको चर्चा परेको छ । वामदेवको राज्यकालमा लेखिएको 'सेकनिर्देशपञ्जिका' भन्ने अर्को ग्रन्थमा पनि उदयपुरको उल्लेख आएको छ । त्यसमा सुन्दर उदयपुरको रक्षा महासामन्त नागार्जुनदेवले गरिरहेको छ भन्ने वर्णन परेको छ । अर्को 'नक्षत्रजातक' भन्ने ने.सं. २४८ मा लेखिएको ग्रन्थमा नेपालमण्डलका राजाका रूपमा इन्द्रदेवको चर्चा छ तथा उदयपुरका अधिपतिका रूपमा महासामन्त पैषानन्दजीवको उल्लेख छ । यी उदाहरणबाट यस ताका प्रसिद्ध प्रदेशमध्ये 'उदयपुर' पनि एक हो; त्यहाँ पुस्तैनी अधिकार पाएका महासामन्तहरूको प्रशासन चल्दथ्यो भन्ने थाहा पाइन्छ । यो उदयपुरको सम्झना पूर्वी नेपालको वर्तमान उदयपुरले दिलाइरहेको बुझिन्छ । पूर्वतिर भई भारत उत्रने मार्गमध्ये एक सिन्धुलीभेग पनि परेको हुनाले त्यतै भेगमा 'उदयपुर'का रूपमा एक विशेष बस्तीको विकास यसताका भएको अनुमान हुन्छ । साथै यसको सम्बन्ध दोलखा भई भोटडिगर्चासँग पनि थियो भन्ने अनुमान हुन्छ । यसताका उदयपुरभेगमा बौद्धधर्मको पनि प्रचार थियो भन्ने कुरा उपर्युक्त हस्तलिखित ग्रन्थबाट थाहा पाइन्छ ।

**फनपिङविषय**

यसताका अभिलेख, हस्तलिखित ग्रन्थ आदिमा उल्लेख भइरहने 'विषय'मध्ये एक 'फनपिङविषय' पनि हो । वर्तमान फर्पिङको ने.सं. ३८१ को एक अभिलेखमा "श्रीफनपिंगविषयाधिपति महासामन्तश्रीजेतरामजीवस्य नगरेति" भन्ने उल्लेख पाइएको हुनाले फनपिङविषय वर्तमान फर्पिङ नै हो भन्ने निश्चित छ । नेवारभाषामा यस प्रदेशलाई अहिलेसम्म 'फंपिं' भनि आएको छ । गोपालवंशावलीमा पनि 'फनपिंग' को उल्लेख धेरै ठाउँमा आएको छ । यसरी काठमाडौं उपत्यकाको सबभन्दा नजिकको विषय (जिल्ला) यो हुन आएको छ । दक्षिणतिर मैदानमा झर्ने बाटोमध्ये उहिले फर्पिङ भई जाने बाटो पनि एक प्रचलित बाटो थियो । यसो हुनाले फर्पिङभेगमा विकसित बस्ती बसेको थियो भन्न सकिन्छ । पछि प्रशासनका दृष्टिले यो प्रदेश एक 'विषय' बन्न पुग्यो र यहाँ पुरानी महासामन्तहरूको प्रशासन चल्न थाल्यो ।

यति कुराबाट मध्यकालको नेपालको इतिहास खुलस्तरूपमा जान्नका लागि माथि उल्लिखित गण्डीगुल्म, जिग्लोद्गम, पन्नग, मंग्वर,

धवलस्रोतपुर, पञ्चावतदेश, उदयपुर आदि प्रदेशहरूको खोजी गर्नु आवश्यक छ भन्ने स्पष्ट थाहा पाइन्छ। माथि उल्लिखित 'विषय'हरूबाहेक वनियध्र्यविषय, खलंपिंविषय आदि अरू केही विषयहरू पनि हालै देखापरेका छन्। चाँगुनारायणस्थानमा पाइएको एक ताम्रपत्रमा 'वनियध्र्यविषय' को उल्लेख आएको छ। एक ताडपत्रमा 'खलंपिंविषय' को उल्लेख भएको छ। अलि राम्ररी ध्यान दिई खोजी गरे यीबाहेक अरू पनि अनेक 'विषय' पत्ता लाग्ने देखिएको छ। यस्ता 'विषय'हरूको खोजीका लागि सर्वप्रथम मध्यकालको सुरुदेखि नै 'नेपालमण्डल' काठमाडौं उपत्यका र आसपासका क्षेत्रमा मात्र सीमित थियो भन्ने पूर्वधारणालाई त्याग्नुपर्ने हुन्छ।

**निर्भयदेव**

गोपालवंशावलीकारले उदयदेवपछि लक्ष्मीकामदेव भए भनी लेखेका छन्। सङ्क्षिप्त गोपालवंशावलीमा भने उदयदेवपछि निर्भयदेव राजा भए; उनले ५ वर्ष राज्य गरे भनी लेखिएको छ। अभिलेख आदि तात्कालिक ऐतिहासिक सामग्रीबाट सङ्क्षिप्त गोपालवंशावलीको भनाइ नै ठीक छ भन्ने देखिएको छ। निर्भयदेवका पालाको ने.सं. १२५ को एक अभिलेख भक्तपुर भैरवस्थानमा पाइएको छ। तात्कालिक कुरा प्रामाणिक रूपमा बुझ्न उपयोगी हुनाले सो अभिलेख यहाँ उद्धृत गरिन्छ–

"१. ॐ श्रेयोरतः ॥ सम्वत् १२५ चैत्रशुक्लत्रियोदस्यां ...

२. महाराजाधिराजश्रीनिर्भयदेवविजयराज्ये । श्रीखपु ....

३. शिवग्वलोत्तरटोलकवास्तव्यजयचतुपाकनश्रिया धरदवकपरक ...

४. देवस्थानार्थं द्वादस मानिधानि प्रज्ञातयति । तिलिक मराण..."

[कल्याण होस्। ने.सं. १२५ (वि.सं. १०६२) चैत्र शुक्ल त्रयोदशीका दिन... महाराजाधिराज श्रीनिर्भयदेवको विजयराज्यमा।

श्रीखपु ... शिवग्वलको उत्तरटोलमा बस्ने जयचतुपाकले ... देवस्थलका लागि बाह्र मानिका धान (आउने खेत) चढाएका छन्।]

ने.सं. १२५ (वि.सं. १०६२)को यस अभिलेखबाट यसबेला निर्भयदेवले 'महाराजाधिराज' का हैसियतले एक्लै शासन गरिरहेका थिए भन्ने प्रमाणित हुन्छ। यसभन्दा एक वर्षअघिचाहिँ गद्दीमा राजा उदयदेव थिए भन्ने कुरा तात्कालिक अभिलेखबाट थाहा पाइएको छ। यसको केही कालपछि निर्भयदेवका साथमा रुद्रदेव पनि संयुक्त रूपमा शासक हुन पुगेका देखिन्छन्। ने.सं. १२८ मा लेखिएको एक हस्तलिखित ग्रन्थबाट उक्त कुरा थाहा पाइन्छ। बाबुछोरा, दाजुभाइ, काकाभतिजा आदिको 'द्वैराज्य' (संयुक्तशासन) खडा गर्ने जुन एक शासनपद्धति थियो; सो पद्धतिले यसताका नेपालको शासनव्यवस्थामा जरो गाडेको थियो भन्ने चर्चा माथि गरिसकिएको छ। द्वैराज्यको उल्लेख परेको ने.सं. १२८ को उक्त

हस्तलिखित ग्रन्थमा निर्भयदेवको वर्णन गर्दा उनलाई 'सुरसन्निभ' (देवताजस्ता) भन्ने विशेषण दिइएको छ । यसबाट निर्भयदेव अलि सरल प्रकृतिका थिए भन्ने झल्किन्छ ।

**रुद्रदेव, भोजदेव र लक्ष्मीकामदेव**

गोपालवंशावलीकारले तात्कालिक राजाका रूपमा रुद्रदेव र भोजदेवको उल्लेख गरेका छैनन्; लक्ष्मीकामदेवको मात्र चर्चा गरेका छन् । सङ्क्षिप्त गोपालवंशावलीमा भने "राजा श्रीभोजदेव रुद्रदेव वर्ष ९ मास ७ ॥ भोजदेवेन श्रीमण्डपविनाशिता" भनी लेखिएको छ । यसबाट रुद्रदेव र भोजदेवको 'द्वैराज्य' चलेको थियो भन्ने थाहा पाइन्छ । रुद्रदेवपहिले निर्भयदेवसँग संयुक्तराजा हुन पुगेका थिए । ने.सं. १२८ (वि.सं. १०६४) को एक हस्तलिखित ग्रन्थमा "श्रीनिर्भयस्य नृपतेः सुरसन्निभस्य श्रीरुद्रदेव वसुधाधिपतेश्च रम्ये" भनी लेखिएको छ । यहाँ निर्भयदेवको वर्णन गर्दा 'सुरसन्निभस्य' (देवताजस्ता) भन्ने विशेषण दिइएको छ । रुद्रदेवको वर्णन गर्दा चाहिँ 'वसुधाधिपति' भनिएको छ । यसबाट निर्भयदेव अलि सरल प्रकृतिका हुँदा यसताका रुद्रदेवले अधिकार बढाएको आभास पाइन्छ । हुन पनि यसपछि निर्भयदेवको उल्लेख पाइँदैन । यसपछि उनको शासन समाप्त भएको बुझिन्छ ।

यसपछि भोजदेव अगाडि बढ्छन् । शायद भोजदेव निर्भयदेवका छोरा थिए । जेहोस्; ने.सं. १३१ (वि.सं. १०६८) को एक हस्तलिखित ग्रन्थबाट रुद्रदेवलाई भोजदेवले उछिनेको आभास पाइन्छ । पाटनमा पाइएको त्यस हस्तलिखित ग्रन्थमा रुद्रदेवको उल्लेख गरिएको छैन; परमभट्टारक राजाद्रिराज परमेश्वरका रूपमा श्रीभोजदेवको मात्र उल्लेख छ । विचारार्थ त्यस हस्तलिखित ग्रन्थको पुष्पिकावाक्य यहाँ उद्धृत गरिन्छ–

> "देयधर्मोयं महायायिनः श्रीवाग्वतीतीरस्थानाधिवासिना कुलपुत्रोपासकः नैरसिंहपाकस्य, यत्पुण्यं तद्भवत्वाचार्यमाता-पितृपूर्वङ्गमं कृत्वा सकलसत्वरासे अनुत्तराज्ञानसम्यक्संबोधि-प्राप्तये दिति । संवत् १३१ ज्येष्ठशुक्लद्वितीयायां सोमदिने परमभट्टारकराजाद्धिराजपरमेश्वर श्रीभोजदेवस्य विजयराज्ये लिखितमिति ।"

[महायानका अनुयायी, श्रीवाग्वतीतीरका ठाउँमा बस्ने कुलपुत्र उपासक नैरसिंहपाकको यो दानधर्म हो । यसबाट जुन पुण्य भएको छ; त्यसबाट गुरु, आमा, बाबु आदि सारा प्राणीहरूलाई अनुत्तरज्ञान, संबोधिज्ञान प्राप्ति होस् ।

ने.सं. १३१ (वि.सं. १०६८) ज्येष्ठ शुक्ल द्वितीया सोमबारका दिन, परमभट्टारक राजाधिराज परमेश्वर श्रीभोजदेवको विजयराज्यमा यो लेखिएको हो ।]

ने.सं. १३१ (वि.सं. १०६८) मा भोजदेवको प्रभाव बढेको थियो भन्ने कुरा यताबाट स्पष्ट छ । यसको एक वर्षपछिको एक अभिलेख पाटन गचाननीमा पाइएको छ । त्यस अभिलेखबाट रुद्रदेव र भोजदेवको 'द्वैराज्य' त्यसबेला चलिरहेको थियो भन्ने थाहा पाइन्छ । माथि 'द्वैराज्य' को वर्णनका सिलसिलामा उक्त अभिलेखको उद्धरणसहित चर्चा गरिएको छ तापनि विचारार्थ यहाँ पनि त्यस अभिलेखको अलिकता अंश उद्धृत गरिन्छ-

"राज्ये पुण्यमलङ्कृतयशनिधिः श्रीरुद्रदेवो नृपः ।
साधुभ्रातृजपुत्रधर्म्मणि रतिश्रीभोजदेवोपि राट् ।
तावेतौ शशिभास्करोपमतिथौ सन्दर्शकालेहनि
नेपाले गहणारविन्दकुमुदश्रीलालिताख्ये पुरे ॥ ...
सम्वत् १३२ प्रथमाशाढशुक्लदिवा त्रीयोदश्याम्बृहस्पतिदिने
मैत्रनक्षत्रन्देवप्रतिष्ठितमिति"

[नेपालराज्यमा धर्मात्मा कीर्ति फैलिएका राजा रुद्रदेव हुनुहुन्छ । उहाँका भतिजा सज्जन धर्मात्मा श्रीभोजदेव पनि राजा हुनुहुन्छ । औंसीका दिनमा चन्द्र र सूर्य सँगै रहेजस्तै उहाँ दुई जना सँगै रही मिलेर शासन गरिरहनुभएको छ ।

ने.सं. १३२ (वि.सं. १०६९) प्रथम आषाढ शुक्ल त्रयोदशी बृहस्पतिवार अनुराधा नक्षत्रमा देवताको प्रतिष्ठा गरिएको हो ।]

यस अभिलेखमा राजाका रूपमा रुद्रदेव र भोजदेवको चर्चा परेको छ । भोजदेवभन्दा यहाँ रुद्रदेवलाई प्राथमिकता दिइएको छ । यी रुद्रदेव र भोजदेव काकाभतिजा हुन् भन्ने कुरा पनि यस अभिलेखबाट थाहा पाइन्छ । हुन त यस अभिलेखमा भोजदेवलाई रुद्रदेवका 'भ्रातृजपुत्र' भनी लेखिएको छ । यस शब्दको अर्थ भतिजा अथवा नाति दुवै हुन सक्छन् । श्रीलुशियानो पेटेक आदिले यस शब्दको आधारमा भोजदेवलाई रुद्रदेवका नाति भनेर लेख्नुभएको छ । तर त्यसको प्रसङ्ग विचार गर्‍यौं भने उनी रुद्रदेवका भतिजा नै हुन् भन्ने देखिन्छ । कनीकुथी बनाइएको पद्य मिलाउनमात्र सो पद प्रयोग गरिएको हो । रुद्रदेवलाई मिचेर भोजदेव एक्लै नै अगाडि बढेको पनि देखिएकोले नाति भएका भए कच्चै उमेरकाले त्यस्तो गर्नु सम्भव देखिँदैन ।

यसको केही कालपछि रुद्रदेव र भोजदेवका साथै लक्ष्मीकामदेव पनि यस संयुक्तशासनमा सामेल हुन्छन् । यी लक्ष्मीकामदेव को हुन्; निश्चित रूपमा थाहा पाइएको छैन । तर नामसादृश्यलाई विचार गर्दा लक्ष्मीकामदेव गुणकामदेवका सन्तान हुन् कि भन्ने अनुमान हुन्छ । जे होस्, ने.सं. १३५ (वि.सं. १०७२) मा लेखिएको एक हस्तलिखित ग्रन्थबाट त्यसबेला रुद्रदेव, भोजदेव र लक्ष्मीकामदेवको संयुक्तशासन चलिरहेको कुरा थाहा पाइन्छ । विचारार्थ त्यस ग्रन्थको पुष्पिकावाक्यको एक अंश यहाँ उद्धृत गरिन्छ–

"पञ्चत्रिंश..धिकेब्दे शततमप्रशते चैत्रमासे हिमाभे
विख्यातेस्मिन् दशम्यान्दितिजरिपुगुरोर्वाशरे संप्रसस्ते ।
राज्ञि श्रीभोजदेवेप्यमितगुणगणालब्दश्रीरुद्रदेवे
श्रीलक्ष्मीकामदेवैररिगजकुलिशैरर्धराज्योपभुक्ते ।"

[ने.सं. १३५ (वि.सं. १०७२) चैत्र शुक्ल दशमी बृहस्पतिवारका दिन, राजा श्रीभोजदेव, ठूला गुणी श्रीरुद्रदेव र शत्रुलाई जित्ने श्रीलक्ष्मीकामदेवले आधाआधा राज्य चलाइरहनुभएका बेलामा (अर्थात् द्वैराज्य=संयुक्तशासन चलाइरहनुभएका बेलाम)]

यसपछि भोजदेव र रुद्रदेवको उल्लेख पाइँदैन । लक्ष्मीकामदेवले मात्र एक्लै शासन गरेको पाइन्छ । लक्ष्मीकामदेवको शासनकाल लामो रहेको पाइन्छ । गोपालवंशावलीकारले उनको राज्यकाल २१ वर्ष भनेका छन् । तर तात्कालिक हस्तलिखित ग्रन्थबाट उनको राज्यकाल २५ वर्ष जति रहेको देखिन्छ । लक्ष्मीकामदेवका पालाको अभिलेख त पाइएको छैन; तर उनका पालाका हस्तलिखित ग्रन्थ भने चारवटा पाइन्छन् । विचारार्थ ती हस्तलिखित ग्रन्थका पुष्पिकावाक्य यहाँ उद्‌धृत गरिन्छन्–

(१) सम्वत् १४४ श्रावणशुक्लद्वितीयायाम् महाराजाधिराजपरमेश्वर श्रीलखिमिकामदेवपरमेश्वरस्य विजयराज्ये । श्रीगाङ्कूटलाङ्गाधिवासिनः करुणाकरदत्तस्य पुस्तकोयं लिखितमिति ।

(२) सम्वत् १५६ श्रावणशुक्लद्वादश्याम् परमभट्टारकमहाराजाधिराज-परमेश्वर श्रीलक्ष्मीकामदेवस्य विजयराज्ये श्रीतैत्तिरीयशालायाधि-वासिना कुलपुत्ररत्नसिंहेन लिखितम्.

(३) अष्टपञ्चशताधिकसम्वत्सरे गते श्रीलक्ष्मीकामदेवस्य राज्ये निष्कण्टक-याते लिखितं सप्तर्षजीवेन

(४) सम्वत् १५९ वैशाखशुक्लतृतीयायाम् शुक्रदिने । श्रीलक्ष्मीकामदेवस्य विजयराज्ये लिखितमिति ॥

यसबाट ने.सं. १५९ (वि.सं. १०९६) सम्म लक्ष्मीकामदेवले एक्लै शासन गरिरहेको थाहा पाइन्छ । यसरी उनको शासनकाल २५ वर्ष जति रहेको थियो । लक्ष्मीकामदेवको लामो शासनकालभित्र प्रायः शान्ति नै रहेको देखिन्छ । तापनि कहिलेकाहीँ अशान्ति पनि मच्चिएको आभास गोपाल-वंशावलीको वर्णन र हस्तलिखित एक ग्रन्थबाट थाहा पाइन्छ । गोपालवंशावलीकारले लक्ष्मीकामदेवको वर्णनको प्रसङ्गमा "तेन चम्पट-पश्चात्सहिते सम्वच्छ सते द्वांते राष्ट्रे सान्ति कृतवान्" भन्ने अस्पष्ट वाक्य लेखेका छन् । यसैको अन्धानुकरण गरी संक्षिप्त गोपालवंशावलीमा "तेन हि चंपटपश्चात्सहिते संवत्सरनिधाने राष्ट्र शान्ति कृता" भनी लेखिएको छ । वाक्य अशुद्ध हुँदा अर्थ अस्पष्ट हुनु स्वाभाविक छ । त्यसैले

श्रीलुशियानो पेटेक आदिले यसको अर्थ आफ्नै ढङ्गले गरेका छन् । तर यसो विचार गरी हेर्दा गोपालवंशावलीकारले 'तेन च पञ्चाशत्सहिते संवत्सरशते द्वान्ते' लेख्न खोजिएको हो जस्तो लाग्छ । त्यसो हो भने यसको अर्थ ने.सं. १५२ भन्ने हुन्छ । ने.सं. १५२ (वि.सं. १०८९) मा लक्ष्मीकामदेवले अशान्ति हटाई शान्ति स्थापित गरेको यताबाट देखिन्छ । यो अशान्ति राजनैतिक नभएर दैविक आपत्तिरूपको पनि हुन सक्छ । किनभने गोपाल-वंशावलीकारले माथि पनि ठाउँ ठाउँमा विभिन्न राजाहरूले शान्तिस्थापना गरेको कुरा लेखेका छन् । ती प्रायः त्यसै प्रसङ्गमा उल्लिखित छन् ।

लक्ष्मीकामदेवको अन्तिम समयमा केही अंशमा राजनैतिक अशान्ति पनि मच्चिएको उल्लेख पाइन्छ । यस कुराको झलक तात्कालिक हस्तलिखित ग्रन्थको निम्नलिखित पुष्पिकावाक्यबाट पाइन्छ–

"सम्वत् १५९ वैशाखकृष्णदशम्याम् । श्रीखृम्पृम्ब्रुमायां महायुद्धप्रवर्त्तमानकाले दुस्तरसंसारे निस्तरणार्थेन लिखितम् ।"

[ने.सं. १५९ (वि.सं. १०९६) वैशाख कृष्ण दशमीका दिन श्रीखृम्पृम्ब्रुमा (भक्तपुर) मा ठूलो युद्ध भइरहेका बेलामा तर्न गाह्रो संसारबाट तर्नाका लागि यो लेखिएको हो ।]

यसबाट वि.सं. १०९६ वैशाखमा भक्तपुरमा ठूलो लडाइँ भइरहेको स्पष्ट छ । किन र कसरी लडाइँ भइरह्यो भन्ने कुरा यताबाट खुल्दैन । तापनि सो लडाइँ सामान्य थिएन; ठूलै लडाइँ थियो; त्यसले भएको दुःख, क्षतिले उक्त ग्रन्थ सार्ने लेखक दिक्क, संसारदेखि नै विरक्त थिए भन्ने स्पष्ट थाहा हुन्छ । यसताका भक्तपुर राजधानी बनेको थिएन । तापनि लिच्छविकालमै विकसित हुन थालेको यो बस्ती यसबेलासम्म निकै विकसित भइसकेको थियो । काठमाडौं-उपत्यकाका प्रमुख बस्तीमा भक्तपुरको पनि यसबेला गणना हुन थालिसकेको थियो ।

**विजयदेव**

लक्ष्मीकामदेवपछि विजयदेव राजा भए भनी गोपालवंशावलीकारले बोलेका छन् । सङ्क्षिप्त गोपालवंशावलीमा यिनको नाम जयदेव दिइएको छ । यिनका पालाको अभिलेख वा हस्तलिखित ग्रन्थ पाइएको छैन । गोपालवंशावलीकारले यिनका बारेमा लेख्दा 'तेन ललितापुरी अर्द्धराज्यं करोति' भनी लेखेका छन् । सङ्क्षिप्त गोपालवंशावलीमा चाहिँ "राजा श्रीजयदेव वर्ष २०। तेन हि ललितपुर अर्द्धराज्यं कृत्यवर्ष १७। राजा श्रीभास्करदेव जयदेव उभयराजा वर्ष ७ मा ४" भनी लेखिएको छ । यसबाट जयदेव र भास्करदेवको 'द्वैराज्य" चल्यो: जयदेवले चाहिँ ललितपुरमा आफ्नो केन्द्र स्थापित गरे भन्ने थाहा पाइन्छ । 'अर्द्धराज्य' भन्नु नै 'द्वैराज्य' हो यो द्वैराज्यको पर्यायजस्तै हो । 'द्वैराज्य' शासनपद्धतिमा

कहिलेकाहीँ आधाआधा इलाका छुट्याइन्थे । यसो हुँदा संयुक्तशासकमध्ये एकको भागमा परेको इलाका 'अर्धराज्य' कहलाउँथ्यो । 'अर्धराज्य'हरूको समष्टिरूप 'द्वैराज्य' हुन्थ्यो भन्ने तात्कालिक सामग्रीबाट यो कुरा खुल्दछ । उदाहरणार्थ भोजदेव, रुद्रदेव र लक्ष्मीकामदेवको 'द्वैराज्य' चलिरहेका बेलाको निम्नलिखित पुष्पिकावाक्यलाई देखाउन सकिन्छ–

"राज्ञि श्रीभोजदेवेप्यमितगुणगणालब्दश्रीरुद्रदेवे
श्रीलक्ष्मीकामदेवैररिगजकुलिशैरर्धराज्योपभुक्ते ।"

यसबाट 'अर्धराज्य' चलायो भन्नु नै 'द्वैराज्य' को प्रतीक हो भन्ने स्पष्ट छ । श्रीलुशियानो पेटेकले भन्नुभएजस्तै 'अर्धराज्य' भनेको तल्लो तहको; 'द्वैराज्य' भनेको माथिल्लो तहको एकाइ होइन ।

**भास्करदेव**

विजयदेवपछि भास्करदेव राजा भए भनी गोपालवंशावलीमा लेखिएको छ । सङ्क्षिप्त गोपालवंशावलीअनुसार विजयदेवकै पालामा उनी संयुक्तशासक हुन पुगिसकेका थिए भन्ने देखिन्छ । पछिका चल्तीका वंशावलीअनुसार भास्करदेवदेखि शङ्करदेवसम्मका राजाहरू नुवाकोटका वैश्य ठकुरीहरू हुन् । भास्करदेव केन्द्रका राजा जयदेवका सामन्त थिए; जयदेवको मृत्युपछि भारादारहरूका अनुमतिले नुवाकोटका सामन्त यी भास्करदेव राजा बनी केन्द्रको गद्दीमा बसेका हुन् भनी पछिका वंशावलीकारले लेखेका छन् । गोपालवंशावलीकारले भास्करदेवदेखि शङ्करदेवसम्मका उक्त राजाहरूको उल्लेख गरेका छन् । तर यिनीहरू नुवाकोटका हुन् भन्ने कुनै सङ्केत गरेका छैनन् । सङ्क्षिप्त गोपालवंशावलीमा पनि यस कुराको सङ्केतसम्म पनि परेको छैन । यसो हुनाले पछिका वंशावलीकारहरूले लेखे पनि यी भास्करदेवहरू नुवाकोटकै हुन् भनी निश्चित रूपमा भन्न सकिँदैन । तर पछिका वंशावलीकारहरूले भास्करदेवहरू नुवाकोटका हुन् भनी कुन आधारमा लेखे? यसको छानबीन हुनु वाञ्छनीय छ ।

भास्करदेवको पालाको अभिलेख त पाइएको छैन; तर हस्तलिखित ग्रन्थ भने पाइएका छन् । भास्करदेवबारे विचार गर्न त्यताबाट केही मद्दत पाइने हुनाले ती ग्रन्थका पुष्पिकावाक्य यहाँ उद्धृत गरिन्छन्–

१. सम्वत् १६५ श्रावणशुक्लदशम्याम् शुक्रदिने । राज्ये श्रीभास्करदेवस्य । श्रीगुणकामदेवकारिते श्रीपद्मचक्रमहाविहारे स्थितसाक्यभिक्षुकुमारचन्द्रेन लिखितम् ।

२. सम्वत् १६७ अश्वणिकृष्णषष्टम्याम् बुधदिने परमभट्टारकमहाराजाधिराज-परमेश्वर श्रीमद्भास्करदेवस्य राज्ये 'श्रीदक्षिणपधिमकेवास्तव्य-श्रीलक्ष्मीधरदर्शनस्य देयधर्मोयम् ।

यी प्रमाणले भास्करदेवको शासनकाल र अवस्थितिलाई दर्साउँछन् । तर गोपालवंशावलीकारको भनाइअनुसार भास्करदेवको शासनकाल त्यति राम्रो थिएन । आफ्नो छोटो शासनकालमा उनले पैतृक शिरपेच बेचेका थिए; मानेश्वरीदेवीको सुनको प्रतिमा बिगारेका थिए । त्यही दोषले गर्दा उनी अन्धा भए र ठूलो दुःख पाए भन्ने गोपालवंशावलीकारको भनाइ छ । गोपालवंशावलीका यस विषयका मूल वाक्य यस प्रकार छन्– "राजा श्रीभास्करदेव वर्ष ३ तेन पितृमोलितविकृतम् स्ववर्णमयीश्रीमानेश्वरी भटारिका विनाशिता । तद्दोषेन अन्धीभवति महाकष्टप्राप्ते ।"

**बलदेव**

भास्करदेवपछि गोपालवंशावलीमा 'बलवन्तदेव' राजा भए, उनले १२ वर्ष राज्य गरे भनी लेखिएको छ । सङ्क्षिप्त गोपालवंशावलीमा र हस्तलिखित ग्रन्थहरूमा भने यिनको नाम 'बलदेव' दिइएको छ । बलदेवले राम्ररी शासन चलाए; उनका पालामा अत्यन्त सुभिक्ष भयो; उनले 'हरिपुर' बनाए भनी गोपालवंशावलीकारले लेखेका छन् । गोपालवंशावलीका मूल वाक्य यस प्रकार छन्- "राजा श्रीबलवन्तदेव वर्ष १२ तेन अत्यन्तसुभिक्षं राज्य करोतिः तेन च हरिपुर कृतम् ।" केशरपुस्तकालयको सङ्क्षिप्त गोपालवंशावलीमा पनि बलदेवको बयान गर्दा उही कुरा लेखिएको छ । तर त्यसमा अलिकता कुरा बढी छ । त्यताबाट बलदेवले बनाएको 'हरिपुर' कता थियो भन्ने उल्लेखनीय सङ्केत पाइन्छ । केशरपुस्तकालयको सङ्क्षिप्त गोपालवंशावलीमा बलदेवबारे यस्तो लेखिएको छ– "राजा श्रीबलदेव वर्ष १२ । तेन हि अत्यन्त सुभिक्ष करोति तेन वजरत्थहरिपुर कृतम् ।" यसबाट बलदेवले बनाएको 'हरिपुर' वजरत्थ (वृजिकरथ्या)मा थियो भन्ने थाहा पाइन्छ । 'वजरत्थ' यो पद 'वृजिकरथ्या' को अपभ्रंश हो । 'वृजिकरथ्या' लिच्छविकालको एक प्रसिद्ध बस्ती हो । प्रसिद्ध वृजिकजातिको बसोबास भएको टोल हुनाले यसको नाम 'वृजिकरथ्या' रहेको हो । लिच्छविकालका प्रसिद्ध राजा नरेन्द्रदेवको देउपाउन कसाईंटोलको अभिलेखमा 'वृजिकरथ्या' को उल्लेख भएको छ । त्यस अभिलेखमा राजा नरेन्द्रदेवले नवगृह (देउपाउन) को 'पाञ्चाली' मा वृजिकरथ्यामा बस्ने एक जना नियुक्त गरेको कुरा परेको छ । यसैले 'वृजिकरथ्या' 'नवगृह' (देउपाटन) कै आसपासमा हुनुपर्छ भन्ने अनुमान पहिले गरिएको थियो । तर हाल 'वृजिकरथ्या' हाँडीगाउँमा पर्दो रहेछ भन्ने कुरा खुल्न आएको छ । यो कुरा हाँडीगाउँका मल्लकालका अभिलेखबाट थाहा पाइन्छ । उदाहरणार्थ यहाँ हाँडीगाउँ थटोल नारायणमन्दिरको नरेन्द्र मल्लको पालाको अभिलेखको एक अंश उद्धृत गरिन्छ–

"स्वस्ति श्रीनेपालमण्डलेश्वरः श्रीश्रीमानेश्वरवर.ब्ध-श्रीराजाधिराजः परमभत्तारकः परमेश्वरधर्म्मनारायणश्रीश्री–जयनरेन्द्रमल्लदेवस्यविजयराज्ये ।

विजरथपातने श्रीश्रीश्रीभुटेश्वरसन्निधाने दक्षिनदिस्य पुत्रस्यार्थेन श्रीश्रीश्रीनारायणपाषानप्रतिमा कृत्वा"

हाँडीगाउँको यस अभिलेखबाट 'विजरथ' (वृज्जिकरथ्या)पत्तन हाँडीगाउँमा थियो भन्ने स्पष्ट भएको छ । अरू अभिलेखबाट यस कुराको पुष्टि हुन्छ । फेरि हाँडीगाउँलाई हरिग्राम, हरिपुर भनेर लेखिएको पनि पाइन्छ । यसकारण बलदेवले बनाएको 'हरिपुर' हाँडीगाउँ नै हो भन्ने कुरामा शङ्का छैन । हाँडीगाउँभेगमा लिच्छविकालदेखिको प्राचीन बस्ती त छँदै थियो; बलदेवले त्यसैलाई विकसित पारी 'पुर' (सहर) को रूप दिएको देखिन्छ ।

बलदेवका पालाका अनेक हस्तलिखित ग्रन्थ पाइएका छन् । बलदेवको समय आदिबारे प्रामाणिक रूपमा बुझ्न त्यताबाट मद्दत पाइन्छ । यसकारण ती हस्तलिखित ग्रन्थहरूका पुष्पिकावाक्य यहाँ उद्धृत गरिन्छन्–

(१) सम्वत् १७२ माघशुक्लाष्टम्याम् आदित्यदिने राजाधिराजपरमेश्वर श्रीबलदेवराज्येश्रीपशुपतिवास्तव्यश्रीजयाकरजीवेन ब्रह्मयामलं नाम शास्त्रं लिखितम्

(२) सम्वत् १७३ पौषशुक्लषष्ठीबुधवाररेवतीदिने बलदेवविजयराज्ये ।

सम्वत्सरशते ख्याते त्रयसप्ततिसंयुते
पौषशुक्लदिने षष्ठीरेवतीबुधसंयुते
दीप्तश्रावलदेवराजविजयलक्ष्मीपनामण्डले
श्रीमत्पश्चिमवाहनवरे यो हेमकारो वसन्
श्रीदामोदरसिंह इत्यभिहित .... जननीं नवप्रतिष्ठापित ।

(३) देयधर्मोयं प्रवरमहायानयायिन्याः श्रीयम्वित्युत्तरटोलकाधिवासिन्याः परमोपासिकाया कुमुददैकाया यदत्र पुण्यं तद्भवत्वाचार्य ...सकलसत्त्वरासेरनुत्तरज्ञानावाप्तयेति ।

सम्वत् १७४ चैत्रकृष्णाष्टम्यां । राजाधिराजपरमेश्वरपरमभट्टारक-श्रीबलदेवस्य विजयराज्ये लिखितमिति ।

(४) पूर्ण्णे वेद्मल (षड्ग) युते वर्षे शते शारदसङ्गते ।
मासे मृष्टाङ्किते (?) रम्ये मृगाङ्ककरमण्डने
नवम्यां रोहिणे ऋक्षे प्रभातार्क्कदिने शुभे ।
कृतारिबलदेवाख्ये क्षितिं रक्षति क्ष्माधिपे ।
वार्त्तकल्याणगुप्तेन कारिते सुगतालये ।
ाहेन्द्रमति विख्याता बुद्धधर्माङ्कधारिणी ॥

(५) अशीतियुक्ते सशते सम्वत्सरे सिते शुभे माघतृतीयवासरे ।
नृपान्वये श्रीबलदेवराजके ...

हस्तलिखित ग्रन्थका यी पुष्पिकावाक्यबाट बलदेवबारे प्रामाणिक रूपमा विचार गर्न निकै मद्दत मिल्दछ ।

**प्रद्युम्नकामदेव**

बलदेवपछि पद्मदेव राजा भए भनी गोपालवंशावलीकारले लेखेका छन् । उनको राज्यकाल ६ वर्षको भनी लेखिएको छ । सङ्क्षिप्त गोपालवंशावलीमा पनि उनको नाम पद्मदेव नै लेखिएको छ । तर हस्तलिखित र अभिलेखमा भने उनको नाम प्रद्युम्नकामदेव लेखिएको छ । विचारार्थ हस्तलिखित ग्रन्थका पुष्पिकावाक्य र अभिलेखका उद्धरण यहाँ गरिन्छन्–

(१) त्रयाधिकाशीतिशते गतेब्दे मासे च ज्येष्ठे कृतकृष्णपक्षके
एकादशी सोम प्रशस्यसंज्ञके कृतानि हानानि प्रसन्नमानसः
श्रीशङ्करदेवस्य विजयनेपालमण्डले विजितशत्रुसङ्घाते जनानां च निराकुले श्रीमन्मानदेवस्य विहारे प्रवरे शते भिक्षुरवेन्द्रदेवेति आचार्यसुधियोत्तमः यत्पुस्तकप्रतिमा ...
सम्वत् १८३ ज्येष्ठ .... राजाधिराजपरमेश्वरपरमभट्टारक-श्रीप्रजुम्नकामदेवस्य विजयराज्ये लिखितम् । ... मानदेवमहाविहारे धिवासिन आचार्यस्थविररवेन्द्रदेवस्य ...

(२) सम्वत् १८५ वैशाखशुक्लद्वादशम्याम् । परमभट्टारक-श्रीप्रद्युम्नकामदेवस्य राज्ये ।

(३) ॐ पञ्चासीतिनियुक्तवत्सरशतं प्राप्ता सुपूर्ण्णं सुभा
मूलादित्ययुता (वि)धिश्च धवलाषाढत्रयोदस्यपि
श्रीप्रद्युम्नमहीपतेश्च सुखवदराज्यं प्रतिष्ठापिता
तत्राचार्यवरेण सा प्रतिकृती रत्नाकरस्वामिना

(४) सम्वत् १८६ माघकृष्णदिवा दसम्याम् बुधदिने । श्रीमन् ...
श्रीउदयपुराधिपतिमहासावन्त श्रीजनार्द्दनजीवस्य प्रवर्त्तमाने । - त्रोदके यूकेकोधलिटोलकाधिवासिनी कुलमती ...
श्रीप्रद्युम्नकामदेवराजे । श्रीउदयपुरे ...

यी हस्तलिखित ग्रन्थ र अभिलेखबाट प्रद्युम्नकामदेव नेपालमण्डलका राजाधिराजका रूपमा प्रमाणित भएको छ । गोपालवंशावलीमा प्रद्युम्नकामदेवको शासनकाल ६ वर्ष लेखिएको छ । जुन कुरा ठीक छ भन्ने पुष्टि अभिलेख र हस्तलिखित ग्रन्थबाट हुन्छ । प्रद्युम्नकामदेवको शासनकाल छोटो भए पनि शान्तिपूर्ण थियो भन्ने देखिन्छ । पाटन थपाहिटीको ने.सं. १८५ (वि.सं. ११२२) को अभिलेखमा उनको राज्यकालको विशेषण 'सुखवद' भन्ने लगाइएको छ । यसबाट प्रद्युम्नकामदेवको राज्यमा सुखशान्ति छाएको

कुरा झल्किन्छ । प्रद्युम्नकामदेवभन्दा अघि भएका राजा भास्करदेवले राजकीय शिरपेच नै बेचेका थिए । त्यसैले यी प्रद्युम्नकामदेवले अर्को राजमुकुट बनाउन लगाएका थिए । गोपालवंशावलीकारले यस कुराको वर्णन "तेन स्वमुकुटं कृतवान्" भनी गरेका छन् ।

**नागार्जुनदेव**

प्रद्युम्नकामदेवपछि नागार्जुनदेव राजा भए भनी गोपालवंशावलीकारले लेखेका छन् । उनको राज्यकाल गोपालवंशावलीमा "राजा श्रीनागार्जुनदेव वर्ष २" भनी दुई वर्ष लेखिएको छ । सङ्क्षिप्त गोपालवंशावलीमा ३ वर्ष लेखिएको छ । ने.सं. १८६ सम्म प्रद्युम्नकामदेवले शासन गरिरहेको कुरा हस्तलिखित ग्रन्थबाट देखिएको छ । ने.सं. १८९ मा शङ्करदेव राजा भइसकेको पनि हस्तलिखित ग्रन्थबाट देखिएको छ । यसकारण नागार्जुनदेवको राज्यकाल २।३ वर्षको छोटो थियो भन्ने कुरा तात्कालिक सामग्रीबाट पनि देखिन्छ ।

नागार्जुनदेवका पालाको एक हस्तलिखित ग्रन्थ पाइएको छ । विचारार्थ त्यसको पुष्पिकावाक्य यहाँ उद्धृत गरिन्छ–

"सम्वत् १८८ श्रीमहाराजानागार्जुनदेवस्य राज्ये कुलजश्री-माधवसिंहस्य पुस्तकम् लेखककुलोद्भवभीमसिंहेन लिखितम्."

यसबाट गोपालवंशावलीकारको भनाइ पुष्टि हुन्छ ।

**शङ्करदेव**

नागार्जुनदेवपछि शङ्करदेव राजा भए; उनले १५ वर्ष राज्य गरे भनी गोपालवंशावलीकारले लेखेका छन् । शङ्करदेवले आफ्नो राज्यकालमा नन्दीशाला (नक्साल)मा शङ्करेश्वर भट्टारकको प्रतिष्ठा गरे; देवल बनाई तामाको छाना हाले; फेरि भगवती मनहर भट्टारिकाको प्रतिष्ठा गरे; यसरी राष्ट्रमा शान्ति भयो भन्ने कुरा गोपालवंशावलीकारले यसरी व्यक्त गरेका छन्– "राजा श्रीशङ्कदेव वर्ष १५ तेन च नंदीशालायां सङ्करेश्वरभटारिक प्रतिष्ठितम्. ताम्रसंछन्न कृतं देवुलम् । पुनः भगवती मनहरभटारिका प्रतिष्ठिता ॥ राष्ट्रसान्ति भवतिः"

गोपालवंशावलीकारले भनेजस्तै शङ्करदेवको राज्यकालमा देशमा शान्ति छाएको; अनेक निर्माण कार्य भएका देखिन्छन् । यस कुराको पुष्टि शङ्करदेवका पालाका हस्तलिखित ग्रन्थबाट पनि केही हुन्छ । विचारार्थ शङ्करदेवका पालाका हस्तलिखित ग्रन्थका पुष्पिकावाक्य यहाँ दिइन्छन्–

(१) नवोत्तराशीतियुते शतेब्दे आषाढशुक्लस्य तिथौ तृतीये ।
श्रीशङ्कराख्ये जयति क्षितीन्द्रे श्रीयङ्गलस्योत्तरटोल्लके यः ।

(२) सम्वत् १८९ भाद्रपद ... (दिव)से श्रीमच्छङ्करदेवराज्ये श्रीलंजुगुङ्ग वास्तव्यगङ्गराणकेन लिखितमिदम् ।

(३) एकाधिकनवतिकानुगते प्रयाते सम्वच्छरे तपसि मासि तिथौ दशम्याम्
संवर्द्धमानशशितद्दयितान्वितायां बाचस्पतौ ... शोभनयोगयुक्ते
श्रीभूषणे शङ्करदेवसंज्ञे विख्यातकीर्त्तौ जितवैरिवृन्दे
सूर्यानुयाप्रवरदैवदेवसंराजिसंरक्षिते सर्व्वलोके
श्रेयोस्तु । सम्वत् १९१ फाल्गुनशुक्लदशम्यां तिथौ रोहिनीनक्षत्रे शोभनयोगे बृहस्पतिवासरे।

(४) अष्टानवतिसंयुक्ते शतसम्वति वत्सरे ।
कृष्णे श्रावणपञ्चम्यां वासरे कुंजसाह्वये ।
श्रीमच्छङ्करदेवस्य राज्ञो विजयशालिनः ...
श्रीललितपुरे रम्ये श्रीमानीग्वलसंज्ञके
यच्छ्रीराघवनाम्नस्य विहारे सुगतालये ।

(५) सम्वत २०२ चैत्रशुक्लदिवा पूर्णमास्यायाम् । वृहस्पतिदिने । हस्तनक्षत्रे । परमभट्टारक महाराजाधिराजपरमेश्वरश्रीमत्शङ्करदेवस्य विजयराज्ये वर्त्तमाने । ... श्रीचकवातीमहादेवीमहाविहार्यशाक्यभिक्षुणीयेमेन्द्रनाथाय ... श्रीइन्द्रमूलस्थानाधिवासी अमात्यपरमोपासकश्रीगुणाकरजीवभल्लोकेन स्वयं लिखितमिति

शङ्करदेवका पालाका यी पाँच हस्तलिखित ग्रन्थका पुष्पिकावाक्यहरूले एकातिर उनको राज्यको प्रामाणिकता औंल्याउँछन् भने अर्कोतिर शङ्करदेवको प्रभुत्वलाई पनि दर्साउँछन् । यसबेलासम्म नेपालराष्ट्र त्यति टुकिएको थिएन; कमसेकम लम्जुङभेगसम्म केन्द्र (नेपालउपत्यका)कै प्रभुत्व कायम रहेको थियो भन्ने कुरा माथि उद्धृत ने.सं. १८९ (वि.सं. ११२६) को अष्टसाहस्रिका प्रज्ञापारमिता नामक हस्तलिखित ग्रन्थको पुष्पिकावाक्यबाट थाहा पाइन्छ । सो ग्रन्थ लम्जुङमा लेखिएको थियो । सर्वप्रथम राहुल सांकृत्यायनले सो पुस्तक पत्ता लगाउनुभएको हो । पछि लुशियानो पेटेकले पनि त्यस पुस्तकको उल्लेख गर्नुभएको छ । उहाँहरूले उपर्युक्त पुस्तकमा उल्लिखित 'लम्जुंगुं' कुन ठाउँ हो भन्ने कुरा पत्ता लगाउन सक्नुभएको छैन । तर गहिरिएर विचार गर्‍यौं भने उक्त ठाउँ 'लम्जुङ' नै हो भनी ठम्याउने प्रशस्त आधार छन् ।

'गुं' डाँडोलाई बुझाउने शब्द हो । यस शब्दको प्रचलन लिच्छविकालदेखि अहिलेसम्म रहेको पाइन्छ । मूल नाउँचाहिँ 'लम्जु' मात्र हो । जुन अहिलेसम्म त्यही नामले व्यवहृत भइरहेकै छ । रूपावली चलाउन गाह्रो संस्कृतेत्तर शब्दमा 'क' प्रत्यय जोडी संस्कृतीकरण गर्ने चलन हामीकहाँ चलेको छ । यसरी 'लम्जुंगुङ्के बास्तव्य" यस पदको अर्थ लम्जुङ भन्ने डाँडोमा बस्ने भन्ने हो; यसमा शङ्का छैन । यस प्रसङ्गमा विचारणीय कुरा अर्को पनि छ । उक्त ग्रन्थ सार्ने व्यक्तिको नाउँ 'गङ्गा राणक' दिइएको छ । मगरहरूको नाममा सम्मानबोधक 'राना' शब्द जोड्ने चलन हाम्रो यहाँ

अहिलेसम्म चलेको छ । यसकारण यी गङ्गा राणा मगर हुन् भन्ने स्पष्ट छ । यसबाट पनि उक्त ग्रन्थमा उल्लिखित स्थान 'लम्जुंगुं' वर्तमान लम्जुङ नै हो भन्ने कुराको केही पुष्टि हुन्छ । यसताका नेपालमण्डलअन्तर्गत पश्चिमभेगमा गण्डीगुल्मविषय (वर्तमान गुल्मीभेग) मंखरविषय, पन्नगविषय, जिग्लोद्गमविषय आदि अनेक विषयहरू रहेका थिए भन्ने कुरा अरू हस्तलिखित ग्रन्थ, अभिलेखबाट सिद्ध भइसकेको छ । यसबाट पनि 'लम्जुंगुं' वर्तमान लम्जुङ नै हो भन्ने कुराको बल मिल्छ । यसैगरी उक्त अष्टसाहस्रिका प्रज्ञापारमिता तिब्बत ङोरमठमा पाइनुले पनि उक्त कुराको सम्झना दिलाउँछ ।

यसरी उक्त अष्टसाहस्रिका प्रज्ञापारमिताले लम्जुङभेगको मध्यकालको सुरुको अवस्थामा निकै महत्त्वपूर्ण प्रकाश पारेको छ । एकातिर यसले लम्जुङभेगमा त्यसबेला भिन्नै स्वतन्त्र राज्य खडा भएको थिएन; यो प्रदेश केन्द्रकै शासनअन्तर्गत नै थियो भन्ने दर्साउँछ । अर्कोतिर लम्जुङभेगमा बौद्धधर्मको निकै प्रचार त्यसबेला थियो भन्ने पनि यसबाट थाहा पाइन्छ । लम्जुङमा लेखिएको ग्रन्थ भोटको ङोरमठमा पुगेको हुनाले यस प्रदेशमा बौद्धधर्मको प्रचार सामान्य रूपमा मात्र भएको होइन; विद्याप्रचार गर्न सक्ने बौद्धमठ नै यस भेगमा रहेको सङ्केत पाइन्छ । यसरी यस प्रदेशले पनि भोटमा बौद्धधर्मको प्रचारमा केही सघाउ पुऱ्याएको देखापरेको छ ।

अर्को विचारणीय कुरा, यसताका उता पश्चिम कर्णालीप्रदेशमा नागराजले खसराज्य स्थापना गर्ने प्रयास गरिरहेको अनुमान हुन्छ । हुन त नागराजले राज्यस्थापना गरेको निश्चित मिति थाहा पाइएको छैन । तर नागराजभन्दा पाँच पुस्तापछिका काचल्ल गद्दीमा बसेको मिति थाहा पाइएको छ; त्यो हो वि.सं. १२६४ । यसबाट विक्रमको बाह्रौं शताब्दीको सुरुतिर अर्थात् यता केन्द्रमा शङ्करदेव राजा भइरहेको ताका उता पश्चिम कर्णालीप्रदेशमा नागराजद्वारा 'खसराज्य'को स्थापनाको प्रयास भइरहेको अनुमान हुन्छ । यी खसराजाहरूलाई जुम्लाबाट पूर्वतिर अघि बढ्न यी शङ्करदेवले रोकेको बुझिन्छ । यसै हुँदा माथि उद्धृत हस्तलिखित ग्रन्थका पुष्पिकावाक्यमा शङ्करदेवको वर्णन गर्दा 'जितवैरिवृन्द', 'विजयशाली' आदि विशेषण उनमा लागेका पाइन्छन् । जे होस्; शङ्करदेवले आफ्नो शासनकालमा केन्द्रलाई फेरि एकपटक सुदृढ पारेको कुरामा शङ्का छैन । त्यसैले गोपालवंशावलीकारले उनले राष्ट्रमा शान्ति फैलाए; अनेक देवताको स्थापना गरे भनी लेखेका हुन् ।

**वामदेव**

शङ्करदेवपछि वामदेव राजा भए भनी गोपालवंशावलीकारले लेखेका छन् । उनको शासनकाल तीन वर्षको छोटो रह्यो भन्ने कुरा गोपालवंशावली र सङ्क्षिप्त गोपालवंशावलीमा पनि लेखिएको छ । उनका

पालाको एक हस्तलिखित ग्रन्थ पाइएको छ । विचारार्थ त्यसलाई यहाँ उद्धृत गरिन्छ-

"चतुर्मासाधिक (चतुर्वर्षाधिक)शतद्वये सम्वत्सरे शुभे । राज्ञः श्रीवामदेवविजये । श्रीउदयपुरीयरम्ये महासावन्तश्रीनागार्ज्जुन-जीवस्य रक्षिते । तत्र स्थितः सौगततत्त्ववेदीपरमोपासक-श्रीवज्राकरजीवसंज्ञकैः । सुलिख्यते शाश्वतसेकन्निर्ण्णयैः । कृष्ण भाद्रपदे मासे वारे बृहस्पतिप्रसंसिते । शुभमस्तु सर्व्वदा ॥"

सार्नेको दोषले यहाँ संवत् अलि अस्पष्ट भएको छ । तर श्रीलुशियानो पेटेकले लेख्नुभएजस्तै यो ने.सं. २०४ नै लेखिएको हो भन्ने देखिन्छ । जेहोस्; वामदेव राजा भएका थिए भन्ने कुराको यस तात्कालिक सामग्रीबाट पनि पुष्टि भएको छ ।

पाटन सौगलटोलमा यसताकाको एक अभिलेख पाइएको छ । त्यस ने.सं. २०३ मा बाणदेवले सूर्यमूर्ति स्थापना गरेको कुरा परेको छ । विचारार्थ सो अभिलेख यहाँ उद्धृत गरिएको छ–

१. त्रिभिर्वर्षैः समायुक्ते सम्वत्सरशतद्वये । वै(शाखशु-)
२. क्लसप्तम्यां बुधे पुष्योदये शुभे । श्रीयशोदेव भूनाथत-
३. नयो धर्मतत्परः । श्रीबाणदेवः कृतवान् प्रतिमा सु-
४. प्रतिष्ठिता । दिवाकरस्य या मात्रा पुरा संकल्पिता मुदा
५. कर्त्तुस्तेनास्तु सततं तेजोवृद्धिरनुत्तरा ॥

[ने.सं. २०३ (वि.सं. ११४०) वैशाख शुक्ल सप्तमी बुधवार पुष्यनक्षत्र भएका शुभ दिनमा श्रीयशोदेव राजाका छोरा धर्मात्मा श्रीबाणदेवले पहिले आमाले सङ्कल्प गरेअनुसार सूर्यमूर्तिको प्रतिष्ठा गर्नुभयो । यसबाट मूर्तिस्थापना गर्नेको सधैं अनुत्तर तेजको बढिबढाउ भइरहोस् ।]

यस अभिलेखमा बाणदेवको परिचय दिँदा "श्रीयशोदेव भूनाथतनय" भनी लेखिएको छ । भूपति, भूनाथ आदि शब्दले साधारणतः राजालाई कहने हुनाले बाणदेव राजवंशका व्यक्ति देखिन्छन् । त्यसैले बेन्डालले यी बाणदेव यसताकाका हस्तलिखित ग्रन्थमा र गोपालवंशावलीमा उल्लिखित राजा वामदेव नै होलान् भन्ने भाव लेखेका छन् । तर वामदेव र बाणदेव नाममा अक्षरको सादृश्य केही भए पनि शब्दार्थमा धेरै अन्तर हुँदा लेभी आदि विद्वान्लाई यो कुरा मान्य भएन । हुन पनि यस अभिलेखमा बाणदेवका अगाडि 'श्री' बाहेक राजोचित अरू कुनै विशेषण रहेको छैन । उनी धर्मात्मा, आमाप्रति भक्त थिए भन्ने कुरामात्र यहाँ झल्काइएको छ । यसकारण बाणदेव र वामदेव एकै व्यक्ति होइनन् भन्ने बुझिन्छ । तर यसताकासम्म पनि नामका पछाडि 'देव' शब्द प्रायः शासकपरिवारका

व्यक्तिमा मात्र जोड्ने प्राचीन चलन चलि नै रहेको थियो । यसो हुनाले बाणदेव शासक परिवारकै व्यक्ति हुन् भन्ने कुरामा चाहिँ शङ्का छैन ।

**हर्षदेव**

वामदेवको छोटो समयपछि हर्षदेव राजा भए भनी गोपालवंशावलीकारले लेखेका छन् । उनको शासनकाल १४ वर्ष रह्यो; उनले ने.सं. २१९ सम्म राज्य गरे; अनि परिवर्तन भयो भन्ने कुरा गोपालवंशावलीकारले यसरी व्यक्त गरेका छन्- "राजा श्रीहर्षदेव वर्ष १४ उनविंसति सम्वच्छरसतद्वये परिवर्तनमान ॥" सङ्क्षिप्त गोपालवंशावलीमा भने हर्षदेवको राज्यकाल १६ वर्ष लेखिएको छ ।

हर्षदेवका पालाका पाँच वटा हस्तलिखित ग्रन्थ पाइएका छन् । एउटा अप्रकाशित अभिलेख पनि पाइएको छ । हर्षदेवबारे विचार गर्न ती तात्कालिक सामग्रीबाट मद्दत पाइने हुनाले तिनलाई यहाँ उद्धृत गरिन्छ–

१. "वर्षानान्दशसम्युते शतयुगे ज्येष्ठस्य मासे सित-
पक्षे शुक्रदिने तिथौ च नवमे श्रीहर्षदेवे नृपे । ...
श्रीविन्नृलक्ष्म्याख्यायां रुलजया सम्यक्प्रतिष्ठापितम्."

२. "सम्वत् २१२ फाल्गुन शुक्लदिवा अश्वनिनक्षत्रे शुक्रदिने श्रीमद्हरषदेवस्य राजे श्रीफल्लप्विङ्गविषये कोसबुटोल्लकाधिवासिनां"

३. "वर्षाणां द्विशते त्रयोदशाधिगते चैत्रमासे कृष्णपक्षे त्रयोदशी । श्रीमद्राजा हर्षदेव आशीन (?) श्रीललितक्रमनाग्वल यच्छुटोल्कन्वसते कुलपुत्री यदत्र पुण्यम् ..."

४. सम्वत् २१३ श्रीहर्षदेवराजे श्रीगण्डीगुल्मविषये । कुलपुत्रकायस्थ-श्रीजीवधरसिंहस्य पुस्तकमिति ॥

५. द्विशते सम्वत्सरेतीते सप्तदशप्रपूरितः ।
फाल्गुणस्य शुक्लस्य उत्तमेषु त्रयोदशि ॥
तारकापूर्व्वफाल्गुण्यां शुक्रग्रहसुशोभने ।
सुमूर्त्ते पूज्यसत्कारे सिद्धिहेतुवरार्चिना ॥
श्रीनेपालस्य विजयराज्ये महाश्रीहर्षदेवराजेषु ।
लेखकः श्रीपशुपतिस्थानासन्नो गोवर्द्धनाङ्कितः ॥

यी पाँच हस्तलिखित ग्रन्थबाहेक हर्षदेवका पालाको एक अभिलेख पनि पाइएको छ । वज्राचार्यहरूको पूजा गर्दा लगाउने तामाको मुकुटमा सो अभिलेख कुँदिएको हो । त्यसमा ने.सं. २१७ लेखिएको छ ।

माथि उद्धृत हर्षदेवका पालाका हस्तलिखित ग्रन्थका पुष्पिकावाक्यमध्ये एकबाट सो पुस्तक ने.सं. २१३ (वि.सं. ११५०) मा 'गण्डीगुल्मविषय' मा लेखिएको हो भन्ने थाहा पाइन्छ । 'गण्डीगुल्म' वर्तमान 'गुल्मी'भेग थियो भन्ने कुरा माथि मध्यकालका सुरुका 'विषय' भन्ने प्रसङ्गमा लेखिसकिएको

छ । यताबाट हर्षदेवको राज्यक्षेत्र कालीगण्डकीको किनारसम्म थियो भन्ने थाहा पाइन्छ ।

**शिवदेव**

शिवदेवमा पुगेपछि गोपालवंशावलीकारको वर्णनशैलीमा उल्लेखनीय अन्तर देखापरेको छ । यी शिवदेवका पालादेखि गोपालवंशावलीमा अलि बढ्ता विवरण दिइएको पाइन्छ । सुरुदेखि अर्थात् गोपालवंशी राजाहरूदेखि स्थिति मल्लका राजाहरूको सङ्क्षिप्त चर्चा संस्कृत भागमा गरेपछि "स्वस्तिः भूतवृत्तान्तर लिखितञ्च श्रृणु– अब भएका वृत्तान्त पनि सुन" भनी अनि यी शिवदेवदेखिका राजाहरूका जन्म, मृत्यु आदिका तिथिमितिसहितको वर्णन गोपालवंशावलीमा गरिएको छ । गोपालवंशावलीमा यी शिवदेवभन्दा अगाडिका राजाहरूको जन्म आदिका तिथिमितिसहित वर्णन गरिएको छैन । यसरी गोपालवंशावलीकारको वर्णनमा नयाँ मोड आएको स्पष्ट हुन्छ । फेरि गोपालवंशावलीकार शिवदेवका व्यक्तित्वबाट निकै प्रभावित भएका देखिन्छन् । शिवदेवका जन्ममृत्युको उल्लेखका सिलसिलामा 'कामरूपो भैरवअवतार' भन्ने विशेषण गोपालवंशावलीकारले उनमा लगाएका छन् । यसबाट शिवदेवका व्यक्तित्व र देन विशिष्ट थिए, उनले आँटेर जुन काम गरे त्यसले गर्दा उनी साधारण व्यक्ति थिएनन्; भैरवका अवतार थिए भन्ने धारणा लोकमा जमेको देखिन्छ ।

गोपालवंशावलीअनुसार यी शिवदेवको जन्म वि.सं. १११४ आषाढ कृष्ण प्रतिपदा बुधबारका दिन भएको थियो भन्ने थाहा पाइन्छ । यस विषयको गोपालवंशावलीको मूल वाक्य यस प्रकारको छ –

> "सम्वत् १७७ आषाढकृष्णप्रतिपद्या उत्राषाढ नक्ष'त्र' सुधिजोग बुधवार श्रीसंक(र) देवस्य पुत्र श्रीशिवदेवस्य जात ॥ राजा अस्त ६९ कामरूपो भेरवअवतारः।" (३१ पत्र)

यसबाट ने.सं. १७७ (वि.सं १११४)मा शिवदेवको जन्म भएको हो; उनी ६९ वर्ष बाँचे; अर्थात् ने.सं. २४६ (वि.सं. ११८३) सम्म जीवित रहे भन्ने थाहा पाइन्छ । साथै "श्रीसंक(र) देवस्य पुत्र श्रीशिवदेवस्य जात" भनिएको हुँदा यी शिवदेव प्रसिद्ध राजा शङ्करदेवका छोरा हुन् भन्ने कुरा पनि यताबाट थाहा पाइन्छ । लेख्नेको गल्तीले मूलमा 'शङ्करदेव' मा 'र' छुटेको छ तापनि प्रसङ्गबाट उक्त कुरा सजिलैसँग बुझ्न सकिन्छ ।

गोपालवंशावलीको वर्णनअनुसार राजा हर्षदेवपछि ने.सं. २१९ मा शिवदेव गद्दीमा बसेका थिए । उनी त्यसबेला ४२ वर्षका थिए । शिवदेवले जम्मा २७ वर्ष ७ महिना राज्य गरे भनी गोपालवंशावलीकारले लेखेका छन् । यताबाट पनि शिवदेवको शासनकाल ने.सं. २४६ सम्म रह्यो भन्ने देखिन्छ । उपर्युक्त कुराको पुष्टि तात्कालिक हस्तलिखित ग्रन्थहरूबाट पनि हुन्छ । राजा हर्षदेवका पालाका हस्तलिखित ग्रन्थ ने.सं. २१७ सम्मका

पाइएका छन् । ने.सं. २२१ देखि २४६ सम्मका अभिलेख, हस्तलिखित ग्रन्थमा शिवदेवको नाम उल्लेख भएको छ । ने.सं. २४७ आषाढमा लेखिएको हस्तलिखित ग्रन्थमा शिवदेवका उत्तराधिकारीका रूपमा इन्द्रदेवको उल्लेख भएको छ । यसबाट गोपालवंशावलीकारले लेखेको शिवदेवसम्बन्धी सालमिति मिलेको छ भन्ने देखिन्छ ।

राजा शिवदेवको शासनकालमा भएका राजनैतिक, आर्थिक र धार्मिक महत्त्वका कुराको चर्चा गर्नुभन्दा पहिले त्यसबेलाको एक समस्याको समाधानतिर दृष्टि दिनु आवश्यक छ जस्तो लाग्छ । गोपालवंशावलीको वर्णनअनुसार हर्षदेवपछि शिवदेव राजा भए; उनले ने.सं. २१९ देखि ने.सं. २४६ सम्म जम्मा २७ वर्ष राज्य गरे; अनि इन्द्रदेव राजा भए भन्ने कुरा निश्चित छ । यसबीचमा सिंहदेवले राज्य गरेको सङ्केतसम्म पनि गोपालवंशावलीबाट पाइँदैन । तर यसबेलाका हस्तलिखित ग्रन्थहरूबाट भने सिंहदेवले यस बीच शासन गरेको कुराको राम्ररी पुष्टि हुन्छ । एकातिर ने.सं. २२१ देखि ने.सं. २४३ सम्मका शिवदेवको नामोल्लेख भएका अभिलेख, हस्तलिखित ग्रन्थहरू पाइन्छन् भने अर्कोतिर ने.सं. २३१ देखि २४२ सम्मका सिंहदेवको शासनकालमा लेखिएका हस्तलिखित ग्रन्थ पाइन्छन् । विचारार्थ पहिले तिनका सङ्क्षिप्त उद्धरण यहाँ गर्नु आवश्यक छ–

(१) "१. शुभमस्तु । सम्वत् २२१ मार्ग्गशुक्लदशंम्यां राजाधिराजपरमे–
२. श्वरः श्रीमतशिवदेवमहाराजै । श्रीरामदीवसमन्तविजयराजै ।
३. मंग्वरविषये । भ्रोंटेश्वरभटारकास टाडेगोठिपञ्चालिकेणः छेप-
४. रम् ग्वण्ड ओपलेम् ॥ श्रीइदा भावो नायक । श्रीधक्नप नायक । श्रीसोह-
५. व राने । एते पधाण वर्त्तनीय ।"

[कल्याण होस् । ने.सं. २२१ (वि.सं. ११५७) मार्ग शुक्ल दशमीका दिन, राजाधिराज परमेश्वर श्रीशिवदेवको राज्यकालमा, सामन्त श्रीरामदेवको विजयराज्यमा,, मंग्वरविषय (जिल्ला)मा भ्रोन्टेश्वर भट्टारक (देवता)लाई ताङेका गोष्ठी र पाञ्चालीका सदस्यहरूले छेपर (नागसहित गरुडमूर्तिअङ्कित तोरण) र चाँदीको कमल (?) चढाए । श्रीइदा भावो नायक, श्रीधक्नप नायक, श्रीसोहेव राना (मगर), यी प्रधानहरूले यसको हेरचाह गरी चलाउनू ।]

(२) सम्वत् २४० प्रथमाषाढकृष्ण द्वितीयायाम् सोमदिने । श्रीराजाधिराजपरमेश्वरश्रीमच्छिवदेवविजयराज्ये लिखितमिति ॥ श्रीललितकमायां श्रीहातीग्वल्केधिवासिना वैद्यश्रीगोथीशिलस्य पुस्तकोयमिति ॥

(३) ... परमोपासकभरुदाकरासहस्य ... परमेश्वरपरमभट्टारक-महाराजाधिराजश्रीशिवदेवराज्ये । सम्वत् २४३ ज्येष्ठ (?) दिवा शुक्लप्रतिपद् लिखितमिदम्

१. सम्वत् २३१ अश्वनिकृष्णद्वादश्याम् सिंहदेवराजे ।

२. सम्वत् २३४ अश्विनिशुक्ल दिवा नवम्याम् । पूर्व्वाषाढनक्षत्रे बुधदिने । श्रीमत्महाराजाधिराजपरमेश्वरपरमभट्टारकश्रीसिंहदेव-विजयराज्ये । श्रीललितकमायाम् श्रीमानीग्वलमध्यमटोल्के-धिवासिना..

३. परमेश्वर परमभट्टारक महाराजाधिराज परमसौगत-श्रीमत्सिंहदेवस्य विजयराज्ये श्रीउदयपुर्यां महासावन्त-श्रीपिषुजीवस्य विजयराज्ये तस्मिन् चेन्द्रकोष्टकाधिवासिनो पिषाकरचन्द्रस्य यदत्र पुण्यम् ... श्रीललितकमायां श्रीमानीग्वल परमगुड्यां कुलपुत्र जयचन्द्रवर्म्मना लिखितमिति । सम्वत् २४० चैत्रशुक्लपूर्णमास्याम् अङ्गारदिने ॥

४. परम ... द्वाकमहाराजाधिराजश्रीसिहदेवराज्ये सम्वत् २४२ ... ड दिन २ ॥

५. सम्वत् २००... नि शुक्लतृतीयायाम् श्रीमद्राजाधिराजपरमेश्वर-श्रीसिंहदेवविजयराज्ये ।

यी सामग्रीबाट एकै समयमा भनेजस्तै शिवदेव र सिंहदेवको अस्तित्व कायम भएको देखापरेको छ । साथै गोपालवंशावलीमा राजाका रूपमा सिंहदेवको उल्लेख परेको छैन । तापनि युवराज महेन्द्रदेव, राजा आनन्ददेव, रुद्रदेव, अमृतदेवका पिताका रूपमा सिंहदेवको उल्लेख भएको छ । यसरी शिवदेव र सिंहदेव एकअर्काका प्रतिद्वन्द्वी शासक हुन् कि ती दुई एकै व्यक्ति हुन् भन्ने समस्या उठेको छ । श्रीलुशियानो पेटेक आदि केही इतिहासकारले शिवदेव र सिंहदेव भिन्नाभिन्नै शासक हुन् भन्ने कुरा देखाउने प्रयास गरेका छन् । श्रीसिल्भाँ लेभीले भने शिवदेव र सिंहदेव एकै व्यक्ति हुन् भन्ने भाव व्यक्त गरेका छन् । निश्चित प्रमाणको अभाव हुनाले यो विवाद अहिले सर्वात्मना टुङ्गिदैंन । तापनि प्राप्त सामग्रीहरूको अध्ययन गरी हेर्दा शिवदेव र सिंहदेव एकै व्यक्ति हुन् भन्ने देखिएको छ । अब यस विषयमा यहाँ अलिकता उल्लेख गर्नु आवश्यक छ ।

मध्यकालको पूर्वार्द्धदेखि हाम्रो यहाँ 'द्वैराज्य' अर्थात् संयुक्तशासन चलेको थियो । यही परम्परामा शिवदेव र सिंहदेवको पनि द्वैराज्य अर्थात् संयुक्तशासन चलेको थियो कि भन्ने पनि अनुमान गर्न नसकिने होइन । तर प्राप्त सामग्रीहरू राम्ररी केलाई हेर्दा यसबेला द्वैराज्य चलेको सङ्केत कतैबाट पाइँदैन । गोपालवंशावलीबाट पनि उक्त कुराको सङ्केत पाइँदैन ।

अभिलेख हस्तलिखित ग्रन्थहरूबाट पनि पाइँदैन । यदि शिवदेव र सिंहदेव एकै व्यक्ति होइनन् भने यी दुईमा सत्ता हात पार्न कडा सङ्घर्ष भइरहेको हुनुपर्छ भन्ने निष्कर्ष निकाल्नुपर्ने हुन्छ । तर शिवदेवको राज्यकालमा भएका आर्थिक विकास आदितिर दृष्टि दिँदा यसबेला अशान्ति थियो; सत्ता हात पार्न सङ्घर्ष भइरहेको थियो भन्ने कुनै लक्षण देखापर्दैन । गोपालवंशावली–कारले शिवदेवप्रति जुन आदरभाव दर्साएका छन्; साधारण राजा होइनन्; भैरवका अवतार हुन् भनी जुन उद्‌गार व्यक्त गरेका छन्; त्यतातिर दृष्टि दिँदा पनि उपर्युक्त कुराको पुष्टि हुँदैन । यसकारण शिवदेव र सिंहदेव एकै व्यक्ति हुन्; एकै व्यक्तिका ती दुई नामान्तर मात्र हुन् भन्ने कुरा मानेको खण्डमा उक्त समस्याको समाधान स्वतः हुन्छ । एकै शासकका दुई नामको प्रचलन इतिहासमा कुनै नौलो कुरा होइन । यस्ता उदाहरण अनेक पाइन्छन् । फेरि गोपालवंशावलीको वर्णनतिर यसो दृष्टि दियौं भने शिवदेव र सिंहदेव एकै व्यक्तिका दुई नाम हुन् भन्ने कुरा अनुमान गर्ने आधार नभएको पनि होइन । अब यस कुराको पुष्टिका लागि 'द्रम्म' मुद्राको प्रचलन गरेको कुराको गोपालवंशावलीकारले वर्णन गर्दा प्रयुक्त वाक्यतिर दृष्टि दिऔं । त्यहाँ यस्तो लेखिएको छ- "राजा शिवदेव ... तेन ... स्वसिंहाकृति रूप्यदम्मव्यवहारा कृता" अर्थात् राजा शिवदेवले आफ्नो सिंहको आकृति कुँदिएको चाँदीका द्रम्मको व्यवहार चलाए" । यहाँ द्रम्ममा सिंह कुँदाइएको भन्नाका लागि 'सिंहाकृति'मात्र भने पुग्नेमा 'स्वसिंहाकृति' भनिएको कुरा निकै विचारणीय छ । आफ्नो सिंहको आकृति कुँदाइएको भन्ने यस उल्लेखबाट शिवदेवको अर्को नाम सिंहदेव पनि रहेछ र द्रम्ममा सिंह कुँदाइँदा 'स्वसिंहाकृति' भनिएको हो भनी अनुमान गर्न गाह्रो छैन । पछिका लक्ष्मीनरसिंह, सिद्धिनरसिंह आदि मल्ल राजाका चाँदीका मुद्रामा 'लक्ष्मीनर', 'सिद्धिनर' यति अक्षर कुँदाइसकेपछि 'सिंह' चाहिँ अक्षरमा नकुँदाई 'सिंहाकृति' नै कुँदाइएको पनि पाइन्छ । त्यसै गरी शिवदेवले आफ्नो द्रम्म मुद्रामा 'सिंहाकृति' कुँदाउनमा आफ्नो अर्को नाम 'सिंहदेव' को प्रतिनिधित्वका लागि रहेछ भन्ने चाखलाग्दो सङ्केत यताबाट पाइन्छ ।

गोपालवंशावलीकारले नेपालका राजाहरूको वर्णनको सिलसिलामा सिंहदेवको चर्चा गरेका छैनन्; शिवदेवको मात्र चर्चा गरेका छन् । तर युवराज महेन्द्रदेव र राजा आनन्ददेव, रुद्रदेव र अमृतदेवका पिताका रूपमा भने गोपालवंशावलीकारले सिंहदेवको उल्लेख आदरसाथ चारपटक गरेका छन् । यसबाट 'सिंहदेव' यस नामदेखि गोपालवंशावलीकार अपरिचित थिएनन् भन्ने स्पष्ट छ । अतः सिंहदेव भिन्नै स्वतन्त्र राजा भएका भए गोपालवंशावलीकार र अरू वंशावलीकारहरूले पनि नेपालका राजाहरूको उल्लेखका सिलसिलामा नै सिंहदेवको पनि छुट्टै उल्लेख गर्ने थिए । तर शिवदेव र सिंहदेव एकै व्यक्ति हुँदा नेपालमा भएका राजाहरूको सूचीमा

शिवदेवलाई संलग्न गरेपछि सिंहदेवको पनि उल्लेख स्वतः अनावश्यक हुँदा गोपालवंशावलीकारले सिंहदेवको पृथक् उल्लेख नगरेका हुन् भन्ने कुरा प्रसङ्गबाट थाहा पाइन्छ। यताबाट पनि सिंहदेव र शिवदेव एकै व्यक्ति हुन् भन्ने कुराको आभास पाइन्छ।

अर्को कुरा– गोपालवंशावलीको संस्कृत भागमा र अर्को दोस्रो भागमा पनि शिवदेवको वर्णनको सिलसिलामा नै युवराज महेन्द्रदेवको उल्लेख गरिएको छ। यसबाट युवराज महेन्द्रदेव राजा शिवदेवका नै छोरा हुन् भन्ने सङ्केत पाइन्छ। हुन त यसताका दुई राजकुलको अस्तित्व रहेको हुँदा गद्दीनसिन राजा एक वंशका भए युवराज अर्को वंशका घोषित गर्ने चलन पनि चलेको पाइन्छ। यसकारण युवराज महेन्द्रदेव राजा शिवदेवकै छोरा हुन् भनी यति कुराको आधारमा ठोकेर भन्न सकिँदैन। तैपनि गोपालवंशावलीकारको वर्णनशैली हेर्दा युवराज महेन्द्रदेव राजा शिवदेवका नै छोरा हुन् भन्ने सङ्केत पाइन्छ। अर्कोतिर गोपालवंशावलीमा महेन्द्रदेवलाई 'सिंहदेव' का छोरा भनी स्पष्टै लेखिएको छ। यताबाट पनि शिवदेव र सिंहदेव एकै व्यक्ति हुन् भन्ने अनुमानको पुष्टि हुन्छ।

जब आर्थिक समृद्धि, सांस्कृतिक उन्नति भएको हुन्छ; तब राजकाजमा स्थिरता, राष्ट्रमा शान्ति, चैन रहेको हामी पाउँछौँ। शिवदेवको शासनकालमा पनि आर्थिक समृद्धि, सांस्कृतिक उन्नति भएका देखिएका छन्। शिवदेव र सिंहदेव भिन्नाभिन्नै एकअर्काका प्रतिद्वन्द्वी व्यक्ति भएका भए उपर्युक्त कुराको उल्टो उदाहरणका रूपमा लिनुपर्ने हुन्छ। त्यसबेला सत्ताका लागि सङ्घर्ष चलिरहेको थियो; राजनैतिक स्थिरता थिएन भन्ने निष्कर्ष निकाल्नुपर्ने हुन्छ। तर शिवदेव र सिंहदेव एकै व्यक्ति हुन् भन्ने कुरा निश्चितजस्तै भएको हुँदा उक्त समस्याको समाधान भएको छ।

अब गोपालवंशावलीकारले वर्णन गरेका शिवदेवसम्बन्धी अरू कुराको पनि सङ्क्षेपमा यहाँ चर्चा गर्नु उचित हुन्छ। शिवदेवले पशुपतिनाथको मन्दिरमा सुनको छाना हालेका थिए; पूर्वशिखरदेव (चाँगुनारायण) मन्दिरको जीर्णोद्धार गरेका थिए। शिवदेवको उल्लेखनीय विशेषता धार्मिक कुराभन्दा आर्थिक विकासलाई नयाँ मोड दिनामा रहेको छ। एकातिर उनले धारा, कुवा, पोखरीहरूको निर्माण गराएर जनतामा सुखसुविधा पुऱ्याए भने अर्कोतिर नदीमा बाँध बाँधेर खेतीका लागि सिँचाइको बन्दोबस्त गरे। कीर्तिपुरनजिकै बल्खुखोलामा उनले बाँध बाँधेका थिए। कीर्तिपुर बस्तीलाई तात्कालिक परिभाषामा 'देश' सहरको रूप पनि उनैले दिएका हुन्। यसरी सहर बसाउने, धारा, कुवा, पोखरी, बाँधको निर्माण गर्ने आदि आर्थिक विकासका कामकुराबाहेक उनले नेपाली मुद्राको इतिहासमा नयाँ अध्याय पनि थपेका थिए। गोपालवंशावलीको भनाइअनुसार यसभन्दा अगाडि चाँदीको 'द्रम्म' को व्यवहार चलेको थिएन; यी शिवदेवले सर्वप्रथम नेपालमा

चाँदीका द्रम्मको प्रचलन गरे । यसभन्दा अगाडि लिच्छविकालदेखि प्रचलित पुराण, पण आदि मुद्राहरू नै प्रचलनमा रहेको बुझिन्छ । साथै गोपालवंशावलीको भनाइअनुसार त्यसबेला 'सुवर्णरक्तिका' (सुनका टुक्रारूपका मुद्रा) को प्रचलन पनि थियो । पूर्वपरम्पराअनुसार द्रम्मको प्रचलन पनि पशुपतिनाथलाई लक्ष्य गरेर नै गरिएको थियो । साथै शिवदेवले सुनका शिवका (सुकी)हरू पनि प्रचलनमा ल्याएका थिए । यसरी शिवदेवका पालादेखि नेपाली मुद्राको इतिहासले अर्को मोड लिएको थियो । तर यी द्रम्म सिक्काहरू पाउन सकिएका छैनन् । मूल्यवान् सिक्काहरूको पहिचान नै नगरी त्यसै गाल्ने गरेका हुँदा हाल ती सिक्का नभेट्टिएका हुन् । त्यसैले यी द्रम्म, सिक्का आदि मुद्राहरू कस्ता थिए भन्ने कुराको यकिन हुन सकेको छैन । शिवदेवले 'पञ्चपुर' युक्त राजदरबार पनि बनाउन लगाएका थिए । शिवदेवसम्बन्धी उपर्युक्त वर्णन गोपालवंशावलीकारका शब्दमा यस प्रकार रहेको छ-

> "राजा श्रीशिवःदेव वर्ष २७ मा ७ तेन श्रीपशुपतिभटारकस्य देवुल सुवर्ण्ण संखलीसंछादनकृतम् । तत कीर्तिभगतापुरे वलवलदेवी तप कृत्य नन्दिबन्ध्याय नीता ॥ पनालिका कुप प्वस्करणी थाने स्थाने कृता ॥ चतु (र्भूमिक) पञ्चपुरसमयुक्त श्रीराजगृहसुनिखादितम् ॥ तत पश्चात् श्रीपशुपतिभटारकाय, रजतपद्मपिण्डिकाघटितम् पूर्व्वदम्मव्यवहार नास्तिः सुवर्ण्णर–क्तिकास्त व्यवर्तते । स्वश्रीसिंहाकृति रूप्यदम्मव्यवहारा कृता । सुवर्णमयी श्रीशिवस्यांकृति शिवकाङ्क कृत्यः ॥ पूर्वशिखरदेवस्य परिवारसहितेन जीर्ण्णोधार कृताः ॥" (२४ पत्र)

> "शिवदेवश कृत्य, वलवलनदी बन्धनीयम् । पनालिका कूप देशस्थानेस्थाने शोभ कृता" ॥ (३१ पत्र)

शिवदेवको राज्यकालमा उनका छोरा युवराज महेन्द्रदेवले पनि 'महेन्द्रसर' (अर्को नाम 'मदनसर') नामक ठूलो पोखरी बनाउन लगाएका थिए । यस कुराको वर्णन पनि गोपालवंशावलीकारले गरेका छन् । सो यस प्रकारका छन्–

> "जौराज श्रीमहेन्द्रदेवेन योद्यम्बृहत्पुस्करणी खनित्वा पूर्व्व कर्षक पन, दम्मार्धः । स पुस्करणी खनिते च दम्मेकेक पन देयम् सम्पूर्ण्ण कृतम् महेन्द्रसरो नामदेय मतस्य सम्वच्छरो नव तृयः सतद्वयम् माधवशुचिपूर्ण्णमी । तस्या द्विनामः मदनसरो कृता ॥"(२४ पत्र)

> "सम्वत् १९९ वेशाष पूर्ण्णस्या विशाषनक्षत्र ध्रुवजोग वृहस्पिवार मध्यानवेलाया, श्रीसीहदेव परमेश्वरस्य पुत्र श्रीमहेन्द्रदेवस्य जातः ॥ धने स्वयं दातार महाभोगवान्,

युवराजमिति ॥ तस्य कृतम् मदनसरवरम्. सम्वत् २३९ वेशाषपूर्णमी प्रतिष्ठा कृतम्. दिन प्रति दम्मेकेक बनि देयम् ॥ अस्त वर्ष ६५ ॥" (३१ पत्र)

यति माथिका कुराबाट राजा शिवदेवको शासनकालमा नेपालमा आर्थिक सांस्कृतिक महत्त्वका निकै कुरा सम्पन्न भएका थिए भन्ने स्पष्ट थाहा पाइन्छ ।

माथि उद्धृत शिवदेवका पालाको ने.सं. २२१ (वि.सं. ११५७) को ताम्रपत्र सानो भए पनि तात्कालिक कुरा बुझ्न निकै उपयोगी रहेको छ । सो ताम्रपत्र राजधानी नेपाल-उपत्यकामा कुँदाइएको नभई उपत्यकाबाहिर 'मंग्वरविषय' (मगरात)मा कुँदाइएको हो । त्यसबाट तात्कालिक प्रशासनव्यवस्था, सामाजिक सङ्गठनबारे बुझ्न केही मद्दत मिल्दछ । त्यस ताम्रपत्रमा नेपालमण्डलको मूल गद्दीमा बसेका राजा शिवदेवको पहिले उल्लेख गरी त्यसपछि मंग्वरविषयका सामन्त रामदेवको उल्लेख गरिएको छ । शिवदेवको प्रशस्ति 'राजाधिराज परमेश्वर' दिइएको छ । जुन गद्दीनसिन राजालाई जनाउने अधिदेखि प्रचलित प्रशस्ति हो । सामन्त रामदेवमा विशेष प्रशस्ति जोडिएको छैन । तापनि उनको 'विजयराज्य'मा भनिएको हुनाले स्थानीय प्रशासन उनकै प्रभुत्वमा थियो भन्ने थाहा पाइन्छ । बाटो-घाटोको कठिनाइ आदि भौगोलिक कारणले गर्दा नेपालको शासनव्यवस्थामा प्राचीनकालदेखि नै 'सामन्तप्रथा' ले महत्त्वपूर्ण स्थान लिएको थियो । लिच्छविकालमा केन्द्रीय शासन सुदृढ थियो । तर त्यसबेला पनि सामन्तहरूको स्थान उल्लेखनीय नै थियो । स्थानीय प्रशासनमा सामन्तहरू निकै स्वतन्त्र हुन्थे ।

यसरी लिच्छविकालदेखि नै केन्द्रद्वारा शासन गरिएको प्रदेश र सामन्तद्वारा शासन गरिएको प्रदेश गरी नेपालमण्डल दुई खण्डमा विभक्त थियो । मध्यकालमा पुगेपछि यसमा केही अन्तर आउन थाल्यो । अब विभिन्न 'विषय' (जिल्ला) का विषयपतिहरू पनि पुस्तैनी अधिकार पाएका महासामन्तरूपका हुन थाले । यसरी अघिका विषयहरू अब क्रमशः सामन्तराज्यका रूपमा परिणत हुन थाले । केन्द्रमा (मूल राजधानीमा) सैन्य शक्ति पर्याप्त नहुँदा यी सामन्तहरूले आफ्नो शक्ति झन् बढाउन थाले । साथै विभिन्न 'विषय' का केन्द्ररूपका प्रमुख बस्ती 'गढ' रूपका हुन पुग्दा मूल केन्द्र कमजोर हुनेवित्तिकै यस्ता विषयहरू स्वतन्त्र हुने चेष्टा पनि गर्दथे । तात्कालिक राजनैतिक इतिहासलाई केलाई हेर्‍यौं भने हामी उक्त कुरा स्पष्ट रूपमा देख्तछौं !

उपर्युक्त ताम्रपत्रमा उल्लिखित सामन्त रामदेव पनि निकै शक्तिशाली स्थानीय शासक थिए । ने.सं. २२० को आर्योष्णीष विजयधारणी नामक एक हस्तलिखित ग्रन्थबाट यी रामदेव शक्तिशाली थिए भन्ने कुराको पुष्टि हुन्छ ।

उक्त ग्रन्थमा रामदेवलाई 'महासामन्ताधिपति महासामन्त' भन्ने विशेषण लगाइएको छ । त्यसबाट अरू विषयका महासामन्तहरूभन्दा रामदेव माथिल्लो तहका थिए; अरू महासामन्तहरूको रेखदेख गर्ने अभिभारा उनले पाएका थिए भन्ने सङ्केत पाइन्छ ।

उपर्युक्त ताम्रपत्रको महत्त्व राजनैतिक इतिहासका दृष्टिले मात्र होइन; सामाजिक इतिहासका दृष्टिले पनि केही महत्त्व रहेको छ । लिच्छविकालदेखि नै नेपालको स्थानीय स्वशासनमा र सामाजिक कुरामा प्रमुख स्थान राख्ने दुई थरी जनसङ्गठन थिए; ती हुन्– पाञ्चाली र गोष्ठी । यिनमा पाञ्चालीको सम्बन्ध सोझै तात्कालिक प्रशासनव्यवस्थासँग रहेको थियो । अर्थात् पाञ्चाली तात्कालिक प्रशासनव्यवस्थाकै एक अङ्ग थियो । गोष्ठीहरूचाहिँ जनताको स्वतन्त्र सङ्गठन थिए । प्रशासनसँग गोष्ठीको सोझै सम्बन्ध थिएन । तर धार्मिक कुराबाहेक शिक्षा, स्वास्थ्य आदि लौकिक जीवनसँग सम्बन्ध राख्ने धेरै कुराको अभिभारा गोष्ठीहरूले बोकेका हुँदा गोष्ठीहरू तात्कालिक जनजीवनका अभिन्न अङ्ग बनेका थिए । धार्मिक कुरामा त गोष्ठीको महत्त्वपूर्ण स्थान रहेको थियो नै । त्यसैले लिच्छविकालका प्रसिद्ध शासक अंशुवर्माले पाञ्चाली र गोष्ठीप्रथालाई निकै सम्मानजनक अवस्थामा पुऱ्याएका थिए । लिच्छविकालपछि अर्थात् मध्यकालको सुरुमा पनि पाञ्चाली र गोष्ठीको स्थान पूर्ववत् नै कायम रह्यो भन्ने कुरा शिवदेवका पालाको उपर्युक्त ताम्रपत्रबाट थाहा पाइएको छ । अर्को कुरा– उक्त ताम्रपत्र राजधानीमा कुँदिएको नभई 'मंग्वरविषय' (मगरात) मा कुँदिएको हुनाले त्यहाँ पनि राजधानीमा जस्तै पाञ्चाली र गोष्ठीको स्थान रहेको थियो भन्ने महत्त्वपूर्ण सङ्केत उक्त ताम्रपत्रबाट पाइन्छ ।

अर्को ध्यान दिनुपर्ने कुरा, गोष्ठीका नाइके पाञ्चालीका प्रधानमध्ये तीन जनाको नामोल्लेख शिवदेवका पालाको मंग्वरविषयको उक्त ताम्रपत्रमा भएको छ । तिनमा पहिलो 'श्रीइदा भावो' भन्ने छ । सम्मानप्राप्त व्यक्तिलाई कहने 'भावो' शब्द नेवारभाषामा पछिसम्म पनि प्रचलित रहेको छ । यताबाट इदा भावो नेवारवर्गका थिए भन्ने अनुमान हुन्छ । यस कुराको पुष्टि 'झोन्टेश्वर' महादेवसम्बन्धी अर्को ताम्रपत्रबाट केही हुन्छ । ने.सं. २८२ को उक्त ताम्रपत्रमा यखरको पश्चिम टोलमा बस्ने 'मी भिङ्गु भावो र हर्षमयि स्त्रीपुरुष' को उल्लेख परेको छ । मी भिङ्गु भावो, हर्षमयि स्त्रीपुरुष (त्यपु) यी त पक्कै पनि नेवारवर्गका तथा नेवारभाषामा रूढ भएका शब्द हुनाले उनीहरू नेवारवर्गका थिए भन्ने कुरामा शङ्का गर्ने ठाउँ छैन । यी उदाहरणबाट गण्डकीप्रदेशमा नेवारवर्गको बसोबास निकै अगाडि भएको थियो भन्ने सङ्केत पाइन्छ । लिच्छविकालको उत्तरार्धदेखि भोटसँग

रहेको विशेष व्यापारसम्बन्धले गर्दा उक्त बसोबास हुन गएको देखापरेको छ। यसरी यो एक खोजीको विषय बनेको छ।

उक्त ताम्रपत्रमा उल्लिखित अर्का प्रधानको नाउँ 'धक्नप' नायक भन्ने रहेको छ। 'धक्नप' यो नाम भोटेवर्गको अथवा गुरुङवर्गको हो कि भन्ने अनुमान हुन्छ। यसमा भाषाशास्त्रीहरूको ध्यान जानु आवश्यक छ। उक्त ताम्रपत्रमा अर्का प्रधानको नाउँ 'सोहव राने' दिइएको छ। एक थरी मगरहरू अहिलेसम्म पनि 'राना' कहलाई नै रहेका हुनाले यी सोहव रानाचाहिँ मगर हुन् भन्ने कुरामा शङ्का छैन।

शिवदेवको शासनकालमा नेपालको भोट (तिब्बत)सँग राम्रो सम्बन्ध रहेको थियो भन्ने सङ्केत माथि उद्धृत हस्तलिखित ग्रन्थबाट पाइन्छ। साथै शिवदेवका पालामा नेपालको प्रतिष्ठा भारततिर पनि केही फैलिएको बुझिएको छ। भारतका केही धार्मिक गुरु, विद्वान्हरू नेपालमा आएका थिए। उदाहरणार्थ काशी, प्रयागका शङ्कराचार्य (शैव सम्प्रदायका विद्वान्) यसताका नेपालमा आएको कुरालाई देखाउन सकिन्छ। शिवदेवका छोरा आनन्ददेवहरूले ती शङ्कराचार्यसँग नै दीक्षा लिएका थिए। यस कुराको अरू चर्चा तल यथास्थानमा गरिनेछ। साथै यसताका विद्याको स्तर पनि केही उठेको देखिएको छ।

एकातिर यी शिवदेवले पशुपतिनाथको मन्दिरको जीर्णोद्धार, पाशुपत सम्प्रदायलाई बढावा दिने आदि काम गरेका छन् भने अर्कोतिर यिनमा 'परमसौगते' (बुद्धका ठूला अनुयायी) भन्ने पदवी पनि जोडिएको पाइन्छ। माथि उद्धृत ने.सं. २४० को एक हस्तलिखित ग्रन्थमा उनलाई 'परमसौगत' भनिएको छ। धार्मिक समन्वय, उदारताका उदाहरण पनि शिवदेवले प्रस्तुत गरेका छन्।

यसरी राजा शिवदेवको शासनकाल धार्मिक, आर्थिक, राजनैतिक आदि दृष्टिले उल्लेखनीय रहेको स्पष्ट छ। त्यसैले गोपालवंशावलीकारले यी शिवदेव साधारण राजा थिएनन्; 'कामरूपो भैरवअवतार' रूपका थिए भनी लेखेका हुन्।

**इन्द्रदेव**

शिवदेवपछि इन्द्रदेव राजा भए भनी गोपालवंशावलीकारले लेखेका छन्। ने.सं. २४६ मा शिवदेवको मृत्यु भएको हो। यसकारण त्यसपछि इन्द्रदेव राजा भए भन्ने यताबाट देखिएको छ। ने.सं. २४७ देखिका इन्द्रदेवका पालाका हस्तलिखित ग्रन्थहरू पाइएका छन्। यसकारण शिवदेवपछि इन्द्रदेव राजा भए भन्ने गोपालवंशावलीकारको भनाइ शुद्ध देखिन्छ। विचारार्थ इन्द्रदेवका पालाका हस्तलिखित ग्रन्थका पुष्पिकावाक्य यहाँ उद्धृत गरिन्छन्–

(१) सम्वत् २४७ आषाढ कृष्ण अष्टम्याम् श्रीमद् इन्द्रदेवस्य विजयराज्ये लिखितमिति ।

(२) सम्वत् २४८ फाल्गुण शुक्ल द (शम्याम्) आदित्यदिने लिखितमिति राजाधिराज परमेश्वर श्रीइन्द्रदेवस्य विजयराजे लिखितमिति । श्रीउदयापुर गमन श्रीसेकाधिनाम ,चित्तवज्राधिनाम ... । श्रीउदयापुराधिपति महासामन्त श्रीपैषानन्दजीवस्य काले लिखितमिति ।

(३) स्वस्ति एकपञ्चशता युक्ते सम्वत्सरशतद्वयम् । पौषमासे प्रवरे चतुर्थ्यां सिततिथौ पुष्यनक्षत्र बृहस्पतिवार राजा श्रीइन्द्रदेवस्य नृपतेः कीर्तिमण्डले ।

(४) सम्वत् २५३ अशुनि शुदि तृतीयायां श्रीनेपालमण्डले राजाधिराज परमेश्वर परमभट्टारक श्री इन्द्रदेवस्य विजयराज्ये श्रीललितापुर मानिग्वलोत्तर व्रीविहाराधिवासिन प्रवरमहायानयायिन ...

(५) सम्वत् २५४ चैत्रशुक्लसप्तम्याम् श्रीमत् राजाधिराज परमेश्वर परमभट्टारक परमेशैव इन्द्रदेवस्य, श्रीइन्द्रदेवस्य विजयराज्ये लिखितमिदम् ॥

(६) राजाधिराज परमेश्वर श्रीइन्द्रदेवस्य राजा विजयराज्ये सम्वत् २५६ कार्तिकशुक्ल पञ्चम्याम् श्रीजुमलके शाक्यभिक्षु रत्नगुप्तेन लिखितम्।

यी ६ हस्तलिखित ग्रन्थबाट इन्द्रदेव राजा भएका थिए भन्ने कुराको पुष्टि प्रामाणिक रूपमा हुन्छ । यी इन्द्रदेव को हुन् भन्ने कुरा निश्चित हुन सकेको छैन । गोपालवंशावलीकारले यी इन्द्रदेवबारे विशेष कुरा लेखेका छैनन् । "राजा श्रीइन्द्रदेव वर्ष १५" यतिमात्र गोपालवंशावलीमा लेखिएको छ । शिवदेवका जेठा छोरा महेन्द्रदेव थिए । असाध्यै दानी युवराज भनी गोपालवंशावलीकारले महेन्द्रदेवको प्रशंसा गरेका छन् । युवराज महेन्द्रदेव नै त इन्द्रदेव होइनन् ? भन्ने प्रश्न लेभिले उठाएका छन् । किनभने शिवदेवको मृत्यु हुँदा युवराज महेन्द्रदेव जीवित थिए । महेन्द्रदेवको जन्म ने.सं. १९९ वैशाखमा भएको थियो; उनको मृत्यु ६५ वर्षको उमेरमा भयो भनी गोपालवंशावलीमा लेखिएको छ । यसरी ने.सं. २६४ सम्म युवराज महेन्द्रदेव जीवित थिए भन्ने यताबाट देखिन्छ । यसकारण ने.सं. २४६ मा शिवदेवको मृत्यु हुँदा महेन्द्रदेव जीवित नै थिए भन्ने स्पष्ट छ । यसैले राजा शिवदेवको मृत्युपछि युवराज महेन्द्रदेव नै इन्द्रदेवको नाउँले गद्दीमा बसे कि भन्ने प्रश्न उठ्नु स्वाभाविक छ । तर गोपालवंशावलीकारको वर्णनशैलीलाई विचार गर्दा उक्त कुरा होइन; युवराज महेन्द्रदेव र राजा इन्द्रदेव बेग्लाबेग्लै व्यक्ति हुन् भन्ने देखिन्छ । गोपालवंशावलीकारले राजा हुन नपाएका युवराजकै रूपमा मरेका व्यक्तिलाई मात्र 'युवराज' भनी परिचय दिने गरेका छन् । युवराज भएर पछि राजा नै भएकालाई गोपालवंशावलीकारले 'युवराज' भनी

परिचय दिने गरेका छैनन्; त्यसलाई राजा भनेर नै परिचय दिइएको छ । युवराजचाहिँ घोषित भएका तर कारणवश राजा हुन नपाएका युप्रै राजकुमारको उल्लेख गोपालवंशावलीमा परेको छ । यसकारण महेन्द्रदेवलाई गोपालवंशावलीकारले युवराजमात्र लेखेका हुनाले उनी युवराज घोषित भए पनि कारणवश राजा हुन पाएका थिएनन् भन्ने स्पष्ट छ । अतः महेन्द्रदेव र इन्द्रदेव भिन्नै हुन् भन्ने निष्कर्ष निकाल्न गाह्रो छैन ।

**मानदेव र नरेन्द्रदेव**

इन्द्रदेवपछि मानदेव राजा भए; उनको शासनकाल ४ वर्ष ७ महिना रह्यो; त्यसपछि नरेन्द्रदेव राजा भए; तिनको शासनकाल ६ वर्ष ५ महिना रह्यो भन्ने गोपालवंशावलीकारले यसरी लेखेका छन्–

"राजा श्रीइन्द्रदेव वर्ष १५॥ राजा श्रीमानदेव वर्ष ४ मा ७ ॥
राजा श्रीनरेन्द्रदेव वर्ष ६ मा ५ ॥" (२४ पत्र)

तात्कालिक हस्तलिखित ग्रन्थहरूबाट यसताका राजा मानदेव र नरेन्द्रदेव राजा भएका थिए भन्ने कुराको पुष्टि हुन्छ । मानदेवका पालाको त एक अभिलेख पनि पाइएको छ । विचारार्थ तिनलाई यहाँ उद्धृत गरिएको छ–

(क)

(१) श्रीमद् राजाधिराज परमेश्वर श्रीमानदेवस्य विजयराज्ये । सम्वत् २५८ पौष कृष्ण त्रयोदश्यां सोम ... नक्षत्रे योग सिद्धि शुभानुकुलेन लिखित समाप्ति कृतम्

(२) सम्वत्सरे गतवति द्वितिये शतस्य पञ्चाशता परिगते नवमाञ्चितेन श्रीकार्त्तिके शशिकरार्चित पञ्चमेह्नि श्रीमानदेवनृपतेर्विजये च राज्ये ॥

(३) १. सम्वत् २५९ भाद्रपदकृष्णसप्तम्याम् । श्रीमत् राजाधिराज परमेश्वर

२. परमभट्टा(र)क श्रीमानदेवस्य विजयराज्ये । श्रीदुनीश्व(र) दक्षिण ... धिवा-

३. सिना । दिवंगतपूजनार्चननिमित्तेन तत्रैव रथ्याधिवासिना द्रोनमेत-

४. नद्या: तत पन्नलि कर्तव्यम् नित्यवछिन्नम् सम्प्रदत्तम्

[ने.सं. २५९ (वि.सं. ११९६) भाद्र कृष्ण सप्तमी । श्रीराजाधिराज परमेश्वर परमभट्टारक श्रीमानदेवको विजयराज्यमा ।

श्रीदुनीश्वरको दक्षिण ... मा बस्ने ... दिवङ्गत (पितृ)हरूलाई तर्पण पूजनका निमित्त त्यहीँ टोलमा बस्नेले यो जलद्रोणी बनाएका हुन् । नदीबाट

पानी ल्याई यस द्रोणीलाई सधैं पानी आउने धारो (प्रणाली) जस्तो यसलाई बनाउनुपर्छ ।

(ख)

(१) वेदे मन्मथवाणनरनेत्रे वत्सरे सुसंयाते ।
फाल्गुणमासशुक्लषष्ट्यां भृगुवासरे सुभगे ।
श्रीमन्नरेन्द्रदेवे राजेन्द्रे राजराजसादृश्ये ।
नेपालेस्मिन् गुणवति पशुपतिपादाङ्गपरिवृते ।
भक्तग्रामनिवासी वटकमहीपालपुत्रसम्भारो ।
देव्या मताभिधानं पुस्तकमभिलिखितं भक्तिचित्तेन ॥

(२) श्रीमत् राजाधिराज परमेश्वर श्रीनरेन्द्रदेवस्य विजयराज्ये ॥ श्रीललितव्रुमे श्रीमानीगलके श्रीदेयधर्मोयं प्रवरमहायानयायिन परमोपासिका कुलपुत्री राणी भारी नाम्ना ... सम्वत् २६१ पौषशुक्लत्रयोदश्यां सो(म)दिने (मृ)गशिरनक्षत्रे । योगकल्याणं शुभान्कृतवति लिखित समाप्तम् ।

(३) सम्वत् २६१ चैत्रकृष्णाष्टम्याम् अङ्गारदिने श्रीनरेन्द्रदेवस्य विजयराज्ये । दक्षिणवैहारिक भिक्षुराचार्य सुवर्ण्णभद्रेण स्वापरार्थाय लिखितमिति ।

(४) श्रीकाष्ठमण्डपे केलाच्छछे मल्लनसिंहस्य ... महाराजाधिराज परमेश्वर परमभट्टारक श्रीनरेन्द्रदेवस्य विजयराज्ये ॥ सम्वत् २६३ अश्वनि शुक्ल पूर्ण्णमासायाम् शुकदिने ... श्रीस्यम्ब्रह्ममाया माती-ग्वलपूर्व्वतः वैद्यमस्थानाधिवासी वणिकपुत्र विसुद्रजीवेन लिखितम् ।

(५) सम्वत् २६२ भाद्रपद शुक्ल द्वादश्याम् राजाधिराज परमेश्वर परमभट्टारक श्रीनरेन्द्रदेवस्य विजयराज्ये

(६) सम्वत् २६४ कार्तिक शुक्ल चतुर्थ्याम् राजाधिराज परमेश्वर परमभट्टारक श्रीनरेन्द्रदेवस्य विजयराज्ये

(७) सम्वत् २६४ कार्तिक शुक्ल त्रयोदश्याम् बृहस्पतिदिने राजाधिराज परमेश्वर परमभट्टारक श्रीनरेन्द्रदेवस्य विजयराज्ये सप्तकुटुम्बज कुलपुत्र श्रीश्रीहर्षचन्द्रस्य पुस्तकमिदम् शाक्यभिक्षुवर्मणा लिखितमिति

यी राजाहरू बारे नयाँ प्रकाश आएको छ । यी हस्तलिखित ग्रन्थ, अभिलेखबाट इन्द्रदेवपछि मानदेव र नरेन्द्रदेव कमशः राजा भए भन्ने कुरा प्रमाणित हुन्छ । यी मानदेव र नरेन्द्रदेवको परिचय पाउन सकिएको छैन । गोपालवंशावलीकारले यसताकाका राजाहरूको जन्म आदिसमेतको वर्णन गर्ने गरेका छन् । तर यी इन्द्रदेव, मानदेव र नरेन्द्रदेवका जन्ममृत्युका तिथिमितिसहित परिचय दिइएको छैन । त्यसैले यिनीहरूको परिचय पाउन नसकिएको हो । जे होस्; शिवदेवपछि उनका छोराहरू राजा भएनन्;

यिनीहरू राजा भए भन्ने तथ्यचाहिँ गोपालवंशावलीबाट पनि पत्ता लागेको छ; तात्कालिक अभिलेख हस्तलिखित ग्रन्थबाट पनि थाहा पाइएको छ।

**आनन्ददेव**

नरेन्द्रदेवपछि गद्दीमा आनन्ददेव बसे । आनन्ददेव सिंहदेव (शिवदेव)का माहिला छोरा हुन् । गद्दीमा बस्दा आनन्ददेव ४७ वर्षका परिपक्व उमेरका थिए । आनन्ददेवले बीस वर्ष राज्य गरे; ६८ वर्षको उमेरमा उनको मृत्यु भयो । आफ्नो बीस वर्षको शासनकालमा आनन्ददेवले केन्द्रीय शासनलाई निकै सुदृढ पारेका थिए; यसो हुँदा उनको शासनकालमा देशमा शान्तिसुव्यवस्था छायो; आर्थिक, सांस्कृतिक आदि उन्नति पनि केही भएका थिए । यसकारण गोपालवंशावलीकारले आनन्ददेवप्रति विशेष आस्था व्यक्त गरेका छन्; गोपालवंशावलीकारले यस ताकाका राजाहरूमा आनन्ददेवको पनि प्रमुख स्थान रहेको छ भनेर विशेष रूपमा उल्लेख गरेका छन् ।

ने.सं. २१९ (वि.सं. ११५६) वैशाखमा आनन्ददेवको जन्म भएको हो । त्यही साल आनन्ददेवका बाबु शिवदेव अथवा सिंहदेव गद्दीमा बसेका थिए । यसरी आनन्ददेवको जन्म शुभ सालमा भएको थियो । गोपालवंशावलीकारले आनन्ददेवको जन्मतिथि यसरी टिपेका छन्–

> "सम्वत् २१९ वैशाषकृष्णपञ्चम्यां उत्राषाढनक्षत्र श्रीशीहदेव-परमेश्वरस्य पुत्र श्रीआनन्ददेवस्य जात ॥ अस्त वर्ष ६८ ।" (३१ पत्र)

ने.सं. २६७ (वि.सं. १२०३) माघ कृष्णप्रतिपदाका दिन आनन्ददेवको राज्याभिषेक भएको हो । उनको राज्याभिषेकको तिथिमिति गोपाल–वंशावलीकारले पद्यरूपमा विशेषरूपमा टिपेका छन् । पद्य प्रौढ छैन; कनीकनी अशुद्ध रूपमा बनाइएको छ । तैपनि यसमा विशेषता रहेको छ । गोपालवंशावलीकारले पद्यरूपमा यस्तो वर्णन ज्यादै थोरैमात्र गरेका छन् । पद्यरूपको यस्तो वर्णन कि आनन्ददेवको राज्याभिषेकका सिलसिलामा गरेका छन् कि स्थितिमल्लका उदयका बेला गरेका छन् । यसबाट गोपालवंशावलीकारको दृष्टिमा आनन्ददेवको उदय उल्लेखनीय रहेको थियो भन्ने थाहा पाइन्छ । आनन्ददेवको राज्याभिषेकसम्बन्धी गोपालवंशावली–कारको उक्त वर्णन यस प्रकारको छ–

> "माघे कृष्णसुचन्द्रमाप्रतिपदे सप्ताधिके षष्टिके,
> काले वर्षशतद्वये शुभदिने राज्यं वरः प्रापितो ।
> श्रीनेपालसमस्तमण्डलमहीत्राता प्रजानाशनम्
> पीड्यं शास्त्र तदा सुनिर्मितगुणे श्रीनन्ददेवप्रभुः ॥

यसपछि गोपालराजवंशालीकारले "राजा श्रीआनन्ददेव वर्ष २०" भनी उनको शासनकालको चर्चा गरेका छन् । तात्कालिक हस्तलिखित अभिलेख

आदिबाट आनन्ददेवले बीस वर्ष राज्य गरे भन्ने कुराको पुष्टि हुन्छ । आनन्ददेवका पालाका हस्तलिखित ग्रन्थ र अभिलेखहरू निकै पाइएका छन् । विचारार्थ तिनलाई यहाँ उद्धृत गरिन्छन्–

(१) सम्वत् २६७ प्रथमाषाढ कृष्ण पञ्चम्याम् पूर्व्वभद्रनक्षत्रे शुक्रदिने । श्रीमत् राजाधिराज परमेश्वर श्रीआनन्ददेवस्य विजयराज्ये । श्रीललितक्रमायाम् ...

(२) दृग्ऋतुभुजङ्गयुक्ते वत्सरे पौषमासे शशिकिरणवारे पौण्णमास्यां नृपेन्द्रे । भुवमवति समस्तां श्रीमदानन्ददेवे निखिलसुगतमातुः कारितास्याः प्रतिष्ठा ॥

(३) सम्वत् २७० द्विराषाढकृष्णैकादश्याम् श्रीआनन्ददेवस्य विजयराज्ये

(४) सम्वत् २७२ वैशाखशुक्ल १५ आदित्यदिने परमेश्वरमहाराजाधिराज परमशैव श्रीआनन्ददेवप्रवर्धमानविजयराज्ये लिखितम्

(५) सम्वत् २७२ श्रावण कृष्ण एकादश्यां लिखितं मया । राजाधिराज परमेश्वर परमभट्टारक श्रीमद् आनन्ददेवपादीयविजयराज्ये शुभदिने ।

(६) सम्वत् २७३ अश्विनि शुक्ल प्रतिपद् आदित्यदिने श्रीमहाराजाधिराज परमेश्वर श्र्यानन्ददेवस्य महाविजयराज्ये लिखितमिति

(७) सम्वत् २७५ चैत्र कृष्ण पञ्चम्यां बृहस्पतिदिने । श्रीमद्राजाधिराज परमेश्वर परमभट्टारक श्रीआनन्ददेवस्य विजयराज्ये लिखितं वरमहायायिनः श्रीललितक्रमायां श्रीन्हागलटोल्केधिवासिन ।

(८) सम्वत् २७६ प्रथमपौष कृष्णदिव चतुर्थ्याम् । श्र्यानन्ददेवस्य विजयराजे लिखितमिदं पुस्तकम् ।

(९) सम्वत् २७८ भाद्रपदमासे । श्रीमच्छ्रीनेपालाभ्यन्तरे । श्रीभक्तपुरे । श्रीआनन्ददेवस्य राज्ये। भट्टपण्डिताचार्य उदयसोमसर्म्माख्यास्य सर्वसत्त्वोपकारकामस्येदं प्रायश्चित समुच्चयपुस्तकम् कुलपुत्रश्री-राज्यपालशील लिखितमिति ।

(१०) सम्वत् २७९ कार्त्तिकमासे । श्रीआनन्ददेवस्य राज्ये । श्रीनेपालमण्डले अन्तरे श्रीभक्तपुराधिवासिनो ...

(११) सम्वत् २७९ कार्तिकशुक्लअष्टम्यां शुक्रदिने राजाधिराज परमेश्वर परमभट्टारक श्रीशानन्ददेवनृपतौ लिखितम् ।

(१२) सम्वत् २७९ भाद्रपदकृष्णाष्टम्याम् आदित्यदिने परमेश्वर परमभट्टारक राजाधिराज परमेश्वर श्रीमदानन्ददेवस्य विजयराज्ये लिखितमिदं

(१३) सम्वत् २८० पौषकृष्णचतुर्दश्यां श्रीयम्बुकमायां श्रीत्रनगलटोलके श्रीआनन्ददेवस्य राज्ये ।

(१४) सम्वत् २८२ फाल्गुनशुक्लचतुर्थ्यां सोमवारे । श्रीमन्महाराजाधिराज परमेश्वर परमभट्टारक श्रीआनन्ददेवविजयाराज्ये लिखितम् ।

**१५. ताम्रपत्राभिलेख**

१. श्रेयोस्तु ॥ सम्वत् २८२ मार्ग्गशिरशुक्लपुर्ण्णमास्या रोहिन्याङ्गारदि–
२. ने ॥ राजाधिराज परमेश्वर परमभटारक । श्रीनेपालाधिपति-
३. श्रीमदानन्ददेवस्य विजयराजे । श्रीपनुंगविषयाधिपतिमहा–
४. सामन्तश्रीमद्रहस्यदीवस्य प्रवर्तमानकाले । श्रीयखरप–
५. श्चिछ्मटोलकाधिवाशिन । मी भिङ्गु भावो हर्षवयि स्त्रीपुरुष
६. उभयकेन श्रीभ्कोंण्टेश्वरभटारकस्य । च्छत्रके उमामहेश्व–
७. र बालचक: प्रवतम् । द्धर्मकाममोक्षाथेन ढोकितमिति ।

[कल्याण होस् । ने.सं. २८२ (वि.सं. १२१८) मार्ग शुक्लपूर्णिमा मङ्गलबार रोहिणीनक्षत्रको दिन, राजाधिराज परमेश्वर परमभट्टारक नेपालका अधिपति श्रीआनन्ददेवको विजयराज्यमा ।

श्रीपनुंगविषय (जिल्ला)का अधिपति महासामन्त श्रीरहस्यदेवका कार्यकालमा श्रीयखरको पश्चिमटोलमा बस्ने मी भिङ्गु भावो, हर्षमयी स्त्रीपुरुष (लोग्नेस्वास्नी) दुवैले श्रीभ्कोंटेश्वर भट्टारकको मन्दिरमा बालचकसहितको उमामहेश्वरको मूर्ति स्थापना गरे । धर्मअर्थकाममोक्ष प्राप्ति होस् भनी सो स्थापना गरिएको हो ।]

**१६. स्तम्भाभिलेख**

१. ॐ स्वस्ति ॥ श्रीरोदाम्बुनिधौ विधाय रभसात् क्षुब्धं गिरिं मन्दरं
२. संभूता कमलालया प्रमथिते देवासुरैर्व्विश्वत: संवी–
३. क्ष्य स्वधिया विचिन्त्य च मुहुर्देवेषु सर्वात्मना श्रेष्ठोसावि–
४ ति यं गता स जगतां कुर्याच्छ्रियं माधव: । य: पारिजा–
५. ततरुमानयति स्म भर्त्तुर्लक्ष्मीपतेरसुरकाननधूमकेतो:
६. कर्त्तुं प्रमोदमवमत्य समस्तदेवान् देयाच्छुभं स जगतां विन–
७. तातनूज: । पृथ्वीं नृपे सकललोकहृदंवुहंसे युक्त्या प्रशा–
८. सति रिपुद्विपकेशरीन्द्रे । वित्ते गुणैर्जगति चंद्रकलाव-
९. दातै: श्र्यानन्ददेव इति सूर्यकुलप्रदीपे । नप्त्रा सज्जन–
१०. चित्तकैरवविधो: सम्पद्दयाशालिन: श्रीमद्रामुनिसंज्ञित–
११. स्य विहिता पुत्रेण पुण्यात्मन: । अर्च्चा श्रीपतिमाधवस्य प–
१२. रया सम्प्राप्तुमुच्चै: पदं भक्त्या श्रीगरुडस्य शंकर इति
१३. ख्यातेन भूमण्डले । पत्न्या सहानिन्द्यचरित्रवत्या कलं–

१४. कहीनोडुपविम्बकान्तं वक्त्रं दधत्या हृदयं क्षिपन्त्या नि–

१५. रुत्तरे श्रेयसि तेजलक्ष्म्या ॥ समाशतद्वये प्राप्ते वसुव–

१६. ह्निसमायुते । कृष्णाष्टम्यां कृता ज्येष्ठे प्रशस्तिः सोमवास–

१७. रे । विद्वतोदयचन्द्रेण सेवायै कमलापतेः । पूजि–

१८. तो वाक्यपुष्पेण मुदमेति हि केशवः ॥

[कल्याण होस् । देव र दानवहरूले मन्दराचललाई मदानी बनाई क्षीरसमुद्रलाई बेसरी मथ्दा लक्ष्मी प्रकट भइन्; अनि लक्ष्मीले चारैतिर नियाली, बुद्धि लगाई खूब विचार गर्दा जसलाई देवताहरूमा सबभन्दा श्रेष्ठ यी हुन् भनी ठहऱ्याइन् र त्यसकहाँ गइन् । ती विष्णुले संसारको कल्याण गरून् ।

दानवहरूलाई नाश पार्ने आफ्ना मालिक विष्णुलाई खुसी पार्न जसले सारा देवताहरूलाई वास्ता नगरीकन पारिजातको रूख ल्याएका थिए; ती गरुडले संसारको शुभ गरून् ।

सारा दुनियाँको मन जितेका, शत्रुहरूलाई सखाप पारेका जूनजस्तै निर्मल आफ्ना गुणहरूले गर्दा संसारमा प्रख्यात भएका सूर्यवंशका बत्तीजस्ता राजा श्रीआनन्ददेवले राज्यगरिरहनुभएका बेलामा ।

सज्जनहरूको मनलाई आनन्द पार्ने धनी र दयालु श्रीरामुनिका नाति पुण्यात्माका छोरा नाउँ चलेका शङ्करले श्रीपति माधवका गरुडको उच्चपद पाउने इच्छाले ठूलो भक्तिसाथ यो प्रतिमा स्थापना गरे । चोखो चरित्र भएकी, दाग नभएका चन्द्रमाको बिम्बजस्ती राम्रो अनुहार भएकी, ठूलठूला दान, धर्ममा मन लगाएकी पत्नी तेजलक्ष्मीसँगै भई (उक्त विष्णुमूर्ति स्थापना गरिएको हो ।)

ने.सं. २८३ (वि.सं. १२२०) ज्येष्ठ कृष्ण अष्टमी सोमबारको दिन विद्वान् उदय चन्द्रले विष्णुलाई प्रसन्न पार्न यो प्रशस्ति बनाएका हुन् । वाक्यरूपी फूलले पुजिएका विष्णु खुसी होऊन् ।]

(१७) श्रीमहाराजाधिराज परमेश्वर परमभट्टारक श्रीमद्आनन्ददेवस्य विजयराज्ये । सम्वत् २८४ माघशुक्लदिवाष्टम्याम् आदित्यदिने लिखित समाप्तीकृतमिति ।

(१८) यातेब्दे मदनास्त्रनागनयने मासे सिते फाल्गुने
सप्तम्यां भृगुवासरे ...
श्यानन्दः सुमहीपतिर्गुणविधिः प्रोढप्रतापानलो
राजे तस्य मते कलङ्क(रहि)ते सर्व्वैर्जनैः संस्तुते ॥
जातोयं प्रवराग्रशुद्धहृदयः श्रीगण्डिगुल्मालये
बुद्धोपासक संज्ञानाननिलये लक्ष्यालये धर्म्मिना

(१९) सम्वत् २८५ व्रणशुक्लाष्टम्यामादित्यदिने श्रीमदानन्ददेवस्य विजयराज्ये। लिखितेदं श्रीमम्बूकयां वन्त्राण्डुलके श्रीधर्मचकमहाविहाराधिवासिन शाक्यभिक्षुमञ्जुश्रेयेणेति । श्रीफानपिं।विषयाधिवासिन बुडौभ्रावै नामधेयस्य

(२०) सम्वत् २८६ फाल्गुनशुक्लाष्टम्यान्निस्पादितप्रतिष्ठाङ्ग ... (परमभ)ट्टारक परमशैव महाराजाधिराज श्रीमदानन्ददेवप्रवर्द्धमानकल्याणविजयराज्ये।

(२१) सम्वत् २८६ फाल्गुणशु एकादश्यां आदित्यदिने । महाराजाधिराज श्रीमदानन्ददेवस्य विजयराज्ये।

यी हस्तलिखित ग्रन्थहरू र अभिलेखबाट गोपालवंशावलीकारले दिएको आनन्ददेवको राज्यकाल ठीक छ भन्ने कुराको पुष्टि हुन्छ । बीस वर्षको उनको शासनकालमा केन्द्रको शासन सुदृढ रहेको थियो भन्ने स्पष्ट सङ्केत माथि उद्धृत सामग्रीबाट पाइन्छ । यसताका उता कर्णालीप्रदेशमा सिंजालाई केन्द्र बनाई खसराज्य खडा भइसकेको थियो । यस नयाँ खसराज्यको सैन्यशक्ति सुदृढ हुँदा यस राज्यको विस्तार हुँदै थियो। केन्द्रका शासकहरूका लागि यो एक खतराका रूपमा देखापरेको थियो । तर शङ्करदेव, शिवदेव, आनन्ददेवको शासन मजबूत हुँदा खसहरू पूर्वतिर बढ्न सकेका थिएनन् । कर्णालीप्रदेशमा खसराज्यको प्रभुत्व कायम हुन थालेपछि गण्डकीप्रदेशमा भने आनन्ददेवहरूकै प्रभुत्व राम्ररी कायम थियो भन्ने कुरा माथि उद्धृत हस्तलिखित ग्रन्थ, विशेष गरी ताम्रपत्रबाट थाहा पाइन्छ । उक्त ताम्रपत्र 'पन्नग' विषय (जिल्ला)मा कुँद्न लगाइएको हो । यसताका पश्चिम नेपालमा देखापरेका जिग्लोद्गमविषय, गण्डीगुल्मविषय, मंग्वरविषय, पञ्चावतविषय आदिमध्ये एक पन्नगविषय पनि हो । मंग्वरविषय पश्चिमको मगरातभेग हो भन्ने स्पष्ट छ । मंग्वरविषयसँग पन्नगविषय जोडिएको थियो भन्ने देखिएको छ। यस विषयको चर्चा माथि गरिसकेको हुँदा यहाँ फेरि दोहऱ्याउनु आवश्यक देखिँदैन । यसकारण पन्नगविषय पनि गण्डकीप्रदेशमै थियो भन्ने कुरामा शङ्का छैन । त्यसताका यस्ता 'विषय' (जिल्ला)हरूको प्रशासन पुस्तैनी हक पाएका महा–सामन्तहरूले गर्दथे । स्थानीय प्रशासनमा उनीहरूको हात रहन्थ्यो । उनीहरू तत्तत् विषयका 'अधिपति' नै कहलाउँथे । यसै हुँदा स्थानीय कतिपय हस्तलिखित ग्रन्थमा मूल (केन्द्र)का राजाको नामोल्लेख नगरी विषयाधिपतिको मात्र नामोल्लेख गर्ने चलन पनि चलेको थियो । त्यसैले ने.सं. २७० श्रावणमा पन्नगविषयमा लेखिएको एक हस्तलिखित ग्रन्थमा "श्रीपन्नगविषयाधिपतिश्रीमहासामन्त-हंसदेवस्य विजयराज्ये" भनी लेखिएको पाइएको छ । यहाँ राजा आनन्ददेवको नामोल्लेख नहुँदा यस क्षेत्रमा यसताका आनन्ददेवको प्रभुत्व कायम थिएन कि भन्ने शङ्का

इतिहासकारहरूले गरेका छन् । तर तत्तत् विषय (जिल्ला)को प्रशासन 'विषयाधिपति' का रूपमा महासामन्तहरूले चलाउने हुँदा ती 'विषय'मा लेखिएका हस्तलिखित ग्रन्थमा कहिलेकाहीँ मूल गद्दीनसिन राजाको नाम लेखकका इच्छाअनुसार नलेखिनेमात्र हो; सो 'विषय'मा केन्द्रीय प्रभाव हट्यो भनी त्यतिकै भरमा निष्कर्ष निकाल्न मिल्दैन । उपर्युक्त ताम्रपत्र कुँदिएताका (ने.सं. २८२ मा) पन्नगविषयका अधिपति महासामन्त रहस्यदेव थिए । यसभन्दा आठ वर्षअगाडि त्यहाँ महासामन्त हंसदेव थिए । यी रहस्यदेव उक्त हंसदेवकै वंशज हुन् भन्ने देखिन्छ । यी महासामन्त शासकहरूको विशेष प्रशस्ति नभए पनि उनीहरूलाई 'विषयाधिपति' भनिने र 'उनको विजयराज्य'मा भनिने हुनाले स्थानीय प्रशासन उनीहरूको हातमा रहन्थ्यो भन्ने थाहा पाइन्छ ।

ने.सं. २८२ को उक्त ताम्रपत्रमा आनन्ददेवलाई 'नेपालाधिपति' भनिएको छ । आनन्ददेवलाई 'नेपालाधिपति' भनी लेख्नामा तात्कालिक अवस्था केही अंशमा प्रतिविम्बित रहेको आभास पाइन्छ । उता कर्णालीप्रदेशमा खस-राज्यस्थापना भएपछि यता नेपाल केन्द्रका शासक आनन्ददेवहरू सावधान हुन थालेको बुझिन्छ । यसो हुँदा आनन्ददेवहरूले कर्णालीप्रदेशमा जस्तै गण्डकीप्रदेश र अरू प्रदेशमा पनि खसहरूको प्रभाव नफैलियोस् भन्ने प्रयास गरेको अनुमान हुन्छ । गोपालवंशावलीकारले 'श्रीनेपालसमस्त-मण्डलमहीत्राता' भनी आनन्ददेवको वर्णन गरेका हुनाले उक्त कुराको आभास पाइन्छ । उपर्युक्त ताम्रपत्रमा आनन्ददेवलाई 'नेपालाधिपति' भन्नामा पनि सोही अभिप्राय रहेको देखिन्छ । अहिले नेपालका वास्तविक अधिपति आनन्ददेव हुन् भन्ने दर्साउन उक्त पदवीको प्रयोग गरिएको बुझिन्छ । किनभने यसभन्दा अगाडिका अभिलेख, हस्तलेखित ग्रन्थहरूमा तात्कालिक राजालाई 'नेपालाधिपति' भनी जोड दिइएको पाइँदैन । आनन्ददेवका पालाको यसै अभिलेखमा सर्वप्रथम 'नेपालाधिपति' को प्रयोग भएको हामी पाउँछौँ । यस प्रसङ्गमा पछि मल्लकालमा 'नेपालाधिपति' पदवी लिनाका लागि भक्तपुर, कान्तिपुर, ललितपुरका मल्लराजाहरूमा चलेको हानथाप स्मरणीय छ । त्यसै गरी आनन्ददेवमा 'नेपालाधिपति' भन्ने पदवी जोडिनामा पनि सोही आकूत (अभिप्राय) रहेको देखिन्छ ।

**'त्रिपुर' राजधानीको स्थापना**

आनन्ददेवले केन्द्रीय शासनलाई सुदृढ पारेको केही चर्चा माथि गरियो । आनन्ददेवको शासनकालमा भएको सबभन्दा महत्त्वपूर्ण कार्य भक्तपुरमा 'त्रिपुर' राजकुल (दरबार) बनाई त्यसलाई नेपालको 'राजधानी' को रूप दिनु हो । यस कुराको सम्झना गोपालवंशावलीकारले 'त्रिपुरसहितराजधानी प्रतिष्ठिता । राजकुलसमीपे सुवर्णपनालीकृता" भनी सङ्क्षिप्त रूपमा गरेका छन् । आनन्ददेवले 'त्रिपुर'लाई राजधानी बनाएपछि केही शताब्दीसम्म

नेपालको केन्द्र 'त्रिपुर' रह्यो । यसै हुँदा गोपालवंशावलीमा 'त्रिपुर' को चर्चा प्रशस्त ठाउँमा आएको छ । भक्तपुरमा राजधानी कायम गर्नाका साथसाथै भक्तपुरका आसपासका बस्तीहरू (सांगा, बनेपा आदि सातगाउँ)को उल्लेखनीय विकासकार्य पनि आनन्ददेवले गरेका थिए । गोपालवंशावलीमा यस कुराको चर्चा गरिएको छैन । तापनि भ.वंशावलीमा यस कुराको चर्चा परेको छ ।

यसबाहेक आनन्ददेवले भक्तपुरमा अनेक देवालय बनाएका थिए । गोपालवंशावलीकारले उक्त कुरा "तेन भक्तापुरे शिवगलस्थाने देवालये देवद्वयं च प्रतिष्ठितम् ॥ ताम्रशंखलीसंछादनम् । ... त्रिपुर सप्तगण्ठकूटकृत प्रतिष्ठितञ्च" भनी सङ्क्षेपमा लेखेका छन् ।

आनन्ददेवले नेपालभरि भूमिव्यवस्था लागू गरेको कुरा पनि गोपालवंशावलीकारले लेखेका छन् । त्यसले गर्दा जनतामा आनन्द छायो भन्ने कुरा 'संतापदुखाग्नि अपीडिताहृदयानि' भनी गोपालवंशावलीकारले लेखेका छन् । शान्तिसुरक्षा कायम गरी आनन्ददेवले आफ्नो राज्यमा चोरीलाई निर्मूल पारेको कुरा गोपालवंशावलीकारले "चोरकदम्वकम् निहत्य कृता महात्मन कृतम्" भनी प्रशंसात्मक रूपमा व्यक्त गरेका छन् । गोपालवंशावलीकारले पछि स्थिति मल्लका पालामा उनले चोरी निर्मूल पारेको कुरा पनि यसै गरी लेखेका छन् ।

सङ्क्षेपमै भए पनि गोपालवंशावलीकारले आनन्ददेवका पालाको अर्को उल्लेखनीय कुराको पनि चर्चा गरेका छन् । त्यो हो; 'सुधनपाल' नामक नाटिका तयार गराई नचाएको । 'तेन शुकदिने नाटिकसुधनपाल कृतवान्' । यही परम्परामा पछि राजदरबारमा हुने विवाह, व्रतबन्ध आदि हरेक ठूलठूला उत्सवका अवसरमा नयाँनयाँ नाटक रची नचाउने चलन नै चलेको थियो । राष्ट्रिय अभिलेखालयमा यस्ता अप्रकाशित नाटकग्रन्थहरू प्रशस्त छन् ।

यसै सिलसिलामा आनन्ददेवका समयको धार्मिक क्रियाकलापको पनि अलिकता उल्लेख गर्नु उपयुक्त हुन्छ । माथि उद्धृत हस्तलिखित ग्रन्थका पुष्पिकावाक्यमा दुई ठाउँमा आनन्ददेवमा 'परमशैव' (शिवका ठूला उपासक) भन्ने पदवी जोडिएको छ । हुनत लिच्छविकालदेखिका विशेष गरी अंशुवर्माका पालादेखिका नेपालका शासकहरूले 'पशुपतिपादानुध्यात' आदि विशेषण जोडी पशुपतिप्रति ठूलो आस्था व्यक्त गरेको हामी पाउँछौं । तैपनि सोझै 'परमशैव' भन्ने पदवी मध्यकालका शासकहरूले लिएको हामी कम पाउँछौं । आनन्ददेवभन्दा अगाडिका राजाहरूको प्रशस्तिमा यो पदवी लिइएको ज्यादै कम पाइन्छ । आनन्ददेवका पालाका हस्तलिखित ग्रन्थमा भने उनलाई 'परमशैव' भनिएको हामी पाउँछौं । यसमा त्यसबेला एक शङ्कराचार्यले नेपालमा आई शैवधर्मको प्रचार गरेको कारण रहेको थियो । स्वयम् आनन्ददेवले राजकुमार छँदा ती शङ्कराचार्यबाट 'दीक्षा' लिएका

थिए । यो कुरा ने.सं. २६२ को हाल राष्ट्रियसङ्ग्रहालय छाउनीमा रहेको शिलालेखबाट थाहा पाइन्छ । त्यसमा 'आमर्दक' मठका शङ्कराचार्यले नेपाल आई आनन्ददेव आदि राजकुमारहरूलाई दीक्षा दिएको वर्णन परेको छ- "अस्यां श्रीरघुवंशमौक्तिकमणि ... आनन्ददेवः करैः उच्चैः शक्तिधरः कुमारपदवीं प्राप्तोपि तैर्दीक्षितः ।" एक प्रख्यात शङ्कराचार्यसँग दीक्षा लिएका हुँदा आनन्ददेवलाई 'परमशैव' भनिएको रहेछ भन्ने यताबाट खुलेको छ । उक्त अभिलेखको वर्णनअनुसार आनन्ददेव राजकुमार छँदानै शक्तिशाली थिए भन्ने कुराको सङ्केत पनि पाइन्छ ।

जे होस्; आनन्ददेव तात्कालिक नेपालका एक निर्माताका रूपमा थिए भन्ने कुरा माथिको विवरणबाट थाहा पाइन्छ । त्यसैले गोपालवंशावलीकारले आनन्ददेवप्रति विशेष आस्था दर्साएका हुन् ।

**रुद्रदेव**

आनन्ददेवपछि ने.सं. २८७ मा रुद्रदेव गद्दीमा बसे भन्ने कुरा गोपालवंशावलीकारले यसरी व्यक्त गरेका छन्- "राजा श्रीरुद्रदेव वर्ष ८ मा १ तेन पञ्चपुरदक्षिणसालाखण्डचोक प्रतिष्ठिता सुवर्ण्णपनाली च" । यी रुद्रदेव आनन्ददेवकै भाइ हुन्; यिनको जन्म ने.सं. २२८ मा भएको थियो । राजा हुँदा रुद्रदेव साठी वर्ष पुग्नै लागेका थिए । यो कुरा गोपालवंशावलीबाट थाहा पाइन्छ । जस्तै- संवत् (२२८) माघशुक्ल-त्रयोदशी रेवतीनक्षत्रे श्रीसीहदेवपरमेश्वरस्य जात (पुत्र) श्रीरुद्रदेवस्य जात । राजा अस्त अस्त ६७ । आठ वर्ष शासन गरी सतसठ्ठी वर्षका उमेरमा रुद्रदेवको मृत्यु भयो भन्ने गोपालवंशावलीको यस वर्णनअनुसार रुद्रदेव गद्दीमा बस्दा साठी वर्ष पुग्नै लागेका थिए भन्ने थाहा पाइन्छ । यी रुद्रदेवका पालाका अभिलेख, हस्तलिखित ग्रन्थहरू केही पाइएका छन् । त्यताबाट गोपालवंशालीकारको लेखाइ ठीक छ भन्ने देखिन्छ । अब विचारार्थ रुद्रदेवका पालाका अभिलेख, हस्तलिखित ग्रन्थको सङ्क्षिप्त उद्धरण यहाँ दिनु उचित हुन्छ ।

**(१) अभिलेख**

१. सम्वत् २८८ फाल्गुणकृ-
२. ष्णाष्टम्याम् ...
३. कादि म ...
४. रुद्रदेवस्य विजयराज्ये मेतम्
५. ... ............ ............
६. ............ पुनर्जन्महेतोः ...
७. मातापितापुत्रादिदिवङ्गता । स-
८. त्वान् तेषाम् नरकादिदुः
९. खोपशान्तये संप्रदत्तमिति

[ने.सं. २८८ (वि.सं. १२२४) फाल्गुन कृष्ण अष्टमीका दिन .... रुद्रदेवको विजयराज्यमा ...... पुनर्जन्म होस् भन्नाका लागि आमाबाबु छोरा आदि दिवङ्गत प्राणीहरूको नरक आदि दुःख हटून् भन्नाका लागि यो धारा बनाई दान दिइएको हो ।]

(२) सम्वत्सरे २८९ पौष्यशुक्लदशम्याम् बुधदिने । राजाधिराजपरमेश्वरश्रीरुद्रदेवराज्ये श्रीयङ्गलदक्षिणटोलकेधिवासिन...

(३) आकाशग्रहहस्तसङ्गिनि शते नेपालसम्वत्सरे
पौषमासे तिथौ च पञ्चदशमे शुक्ले रवेर्वासरे ।
कीर्त्तिं कृत्तिभिरस्तु भद्रकरणे श्रीरुद्रदेवे नृपे
श्रीरामाधक्य ... लिखितम् ...

## (४) अभिलेख

१. ॐ सम्वत् २९१ कार्तिकशुक्लाष्टम्याम् राजाधिराज परमेश्वरराज्ये श्री।रुद्रदेवस्य

२. जगदानन्दकारिणः अष्टम्यां कार्त्तिके शुक्ले प्रतिष्ठादिविधानतः ।

[ने.सं. २९१ (वि.सं. १२२७) कार्तिक शुक्ल अष्टमीका दिन, संसारलाई आनन्द दिने राजाधिराज परमेश्वर श्रीरुद्रदेवले राज्य गरिरहनुभएको बेलामा (यस जलद्रोणीको) प्रतिष्ठा विधिपूर्वक गरियो ।]

## (५) अभिलेख

१. ॐ अब्दे याति भुजग्रहाक्षिगुणिते मासे तथा
२. कार्त्तिके रुद्राह्वे नृपतौ च शासति भुवं चन्द्रो जया–
३. द्यः सुधीः । पार्श्वे पट्टिकया सहामलजलद्रो–
४. णीमिमां दत्तवान् मागोन्मार्जनगोष्ठिका–
.. सु निहितं क्षेत्रञ्च तृरोपणम् ॥ तत्पट्टि–
६. का पटलाच्छादनाय च शिवकाचतुष्टयम्

[ने.सं. २९२ (वि.सं. १२२८) कार्त्तिक महिनामा, राजा रुद्रदेवले शासन गरिरहनुभएको बेलामा, बुद्धिमान् जयचन्द्रले सफा पानी आउने यो जलद्रोणी (टुटेधारा) र नजिकै पाटी बनाई दान गरे । बाटो बढार्ने गोष्ठीमा तीन रोपनी खेत दान गरे । त्यो पाटीको छाना हाल्न चार शिवका (मुद्रा विशेष) दान दिए ।]

## (६) अभिलेख

१. सम्वत् २९२ ज्येष्ठपूर्णम्यां श्रीराजाधिराजरुद्रदेवविजयराज्ये ॥०॥

२. ........................ नेन सर्वजन्तु सुखी भवतु ॥

[ने.सं. २९२ (वि.सं. १२२९) ज्येष्ठ पूर्णिमाको दिन, राजाधिराज श्रीरुद्रदेवको विजयराज्यमा । ... यसबाट सबै प्राणीहरू सुखी होऊन् ।]

## (७) अभिलेख

१. वं स्वस ग्वल अधिक संव–
२. त् न्य शस्त्र रगुपति रुद–
३. रदेव राजा विजयरपत्वं

[ॐ ने.सं. २९३ (वि.सं. १२३०) मा रघुपति रुद्रदेव राजाको विजयराज्यमा (यो राखिएको हो) ।]

(८) सम्वत् २९३ वैशाखकृष्णचतुर्थ्याम् राज्ञः श्रीमद्रुद्रदेवस्य विजयराज्ये स्वपरार्थहेतोः श्रीमच्चित्रविहारस्थित अजितश्रीज्ञान स्वयमेवालेखि धर्मसमुच्चयपुस्तकमिदमिति

(९) सम्वत् २९४ चैत्रशुक्लपूर्णिमास्यां सोमदिने उत्तरफाल्गुणनक्षत्रे । श्रीपरमेश्वर''रमभट्टारक महाराजाधिराज श्रीमद्रुद्रदेवस्य विजयराज्ये ।

(१०) महाराजाधिराज श्रीरुद्रदेवस्य राज्ये । सम्वत् २९५ अग्रहण पूर्णमास्याम् आदित्यदिने लिखापितम् .

यी तात्कालिक सामग्रीले ने.सं. २८७ देखि २९५ सम्म नेपालमा रुद्रदेवको शासन चल्यो भन्ने कुरा प्रमाणित गर्छ । रुद्रदेवको शासनकाल छोटो भए पनि विकासशील रह्यो भन्ने थाहा पाइन्छ । धारा, पाटी, पौवा बनाई जनताले राखेका रुद्रदेवका पालाका अभिलेख नै पाँच वटा प्राप्त भएका छन् । यसबाट त्यसबेला सार्वजनिक कामकुरामा जनतासमेत सक्रिय रहेको सङ्केत पाइन्छ । पाटीपौवा बनाई ने.सं. २९२ (वि.सं. १२२८) मा रुद्रदेवका पालामा जयचन्द्रले कुँद्न लगाएको माथि उद्धृत अभिलेखले तात्कालिक लौकिक जीवनमा 'गोष्ठीप्रथा' को स्थानबारे समेत महत्त्वपूर्ण प्रकाश पारेको छ । हाम्रो यहाँ लिच्छविकालदेखि नै धार्मिक र लौकिक कामकुरा चलाउन अनेक 'गोष्ठी'हरू बनेका थिए । उपर्युक्त अभिलेखमा बाटो बढार्ने गोष्ठीमा जयचन्द्रले तीन रोपनी खेत राखेको उल्लेख परेको छ । "हामीले आफू बस्ने ठाउँका बाटाहरू बढारेर सफा राख्नुपर्दछ; यसो भए निरोगी बन्न यताबाट मद्दत हुन्छ; एक जनाले मात्र गरेर यो काम हुने होइन, एउटा व्यवस्था बाँधी पालोपालो गरी यो काम चलाउनुपर्छ" भन्ने भावनाले त्यसबेला 'बाटो बढार्ने' गोष्ठी बनेका रहेछन्; यस्ता गोष्ठी चलाउन आयस्ताको आवश्यकता पर्ने हुनाले यस्ता गोष्ठीमा हुनेपुग्नेले केही दिनु असल हो, पुण्यको काम हो भन्ने धारणा पनि त्यसबेला बसेको रहेछ; यसै हुनाले जयचन्द्रले पाटी पौवा बनाउँदा 'बाटो बढार्ने' गोष्ठीमा पनि खेत दान दिएका हुन् भन्ने कुरा उक्त अभिलेखबाट बुझिन्छ ।

आफ्नो छोटो शासनकालमा राजा रुद्रदेवले पनि केही निर्माणकार्य गरेका थिए । गोपालवंशावलीको वर्णनअनुसार रुद्रदेवले पञ्चपुरको दक्षिणलङ्को 'खण्डचोक' बनाई प्रतिष्ठा गरेका थिए । साथै उनले सुन्धारा

पनि भनाएका थिए । उनका पालाका अभिलेखमा 'जगद्आनन्दकारी' आदि विशेषण उनमा लागेको हुनाले उनको शासनकाल सुखमय रहेको देखिन्छ ।

**अमृतदेव**

रुद्रदेवपछि अमृतदेव राजा भए भनी गोपालवंशावलीकारले लेखेका छन् । अमृतदेवको शासनकाल ३ वर्ष ११ महिना रह्यो भनेर पनि गोपालवंशावलीमा लेखिएको छ– "राजा श्रीअमृतदेव वर्ष ३ मा ११ तेन पञ्चपुर उत्रशाला खण्डचोल प्रतिष्ठता, महामारी दुर्भिक्षं भवति" (२५ पत्र)

यी अमृतदेव रुद्रदेवका भाइ हुन् । ने.सं. २३३ आश्विन (वि.सं. ११७०)मा यिनी गद्दीमा बसेका थिए । यसरी गद्दीमा बस्दा अमृतदेव ६२ वर्ष नाघिसकेका थिए । ३ वर्ष ११ महिना शासन गरेपछि ६६ वर्षको उमेरमा उनको मृत्यु भयो । गोपालवंशावलीकारले अमृतदेवका जन्म, मृत्युका तिथिमिति यसरी टिपेका छन्– "सम्वत् २३३ अश्विनी शुक्लतृतीया विषाशनक्षत्र श्रीसीहदेवप्रमेश्वरस्य पुत्र श्रीअमृतदेवस्य जात ॥ राजा अस्त वर्ष ६६ भाद्रप्दकृष्णनवम्याम् ॥" (३१ पत्र)

अमृतदेवका पालाका हस्तलिखित ग्रन्थ, अभिलेख केही पाइएका छन् । त्यताबाट गोपालवंशावलीकारको भनाइ ठीक छ भन्ने देखिएको छ । विचारार्थ ती अभिलेख हस्तलिखित ग्रन्थको सङ्क्षिप्त उद्धरण यहाँ गरिएका छन् ।

**(१) अभिलेख**

१. ओं सम्वत् २९५ वैशाखशुक्लतृतीयायां राजाधि–
२. राज श्रीअमृतदेवस्य विजयराज्ये । श्रीपशुपतिमृगस्थलां
३. विजैकत्त्रिभारी । दिवंगतपुत्रजैद्रव्यजीवस्य उदेसेन ज–
४. लद्रोणिं दान कृता । जस्य स्वर्ग्गत्वब्रह्मत्वविष्णुत्वरुद्रत्व–
५. संप्राप्तये । तेन दानपुंनेन मात्रा सुखी भवतु । शुभमिति ।

[ने.सं. २९५ (वि.सं. १२३२) वैशाख शुक्ल तृतीयाका दिन, राजाधिराज श्रीअमृतदेवको विजयराज्यमा । श्रीपशुपति मृगस्थलीमा बस्ने विजयकर्त्री भरीले दिवङ्गत छोरा जयद्रव्यजीवलाई लक्ष्य गरीकन जलद्रोणी बनाई दान गरिएको हो । जसबाट स्वर्ग, ब्रत्मत्व, शिवत्व, विष्णुत्व प्राप्त होस् । यो दान पुण्यले आमालाई सुख होस् । शुभ होस् ।]

(२) सम्वत् २९६ चैत्रशुक्लपूर्णिमास्याम् । राजाधिराज परमेश्वर श्रीअमृतदेवस्य विजयराज्ये पुस्तकोयं लिखितमिति ।

(३) सम्वत् २९६ जेष्ठ शुक्ल चतुर्थ्याम् पुनर्व्वसुनक्षत्रे बृहस्पतिदिने इदं पुस्तकं लिखितमिति राजाधिराज परमेश्वर श्रीमदमृतदेवराजस्य विजयराज्ये ॥

## (४) अभिलेख

१. ॐ स्वस्ति ऋतुग्रहसमायुक्ते सम्वत्सरशतद्वये ।
ज्येष्ठमासासिताष्टम्यां राज्ये श्र्यमृतभूपते: ॥
२. भ्रातुर्विजयदेवस्य स्वर्ग्गसम्प्राप्तिहेतवे ।
श्रीविशाखादिदेवेन जनन्या मधुकश्रिय: ॥
३. आज्ञां स्रजमिवाधाय मूर्ध्ना दोलाचलस्थिते : ।
कृष्णस्य विधिवद्भक्त्या विष्णोरर्चा निवेदिता ॥
४. पुण्येनानेन लोकोयं सुखी भवतु सर्व्वदा ।
परार्थकरणायैव प्रवृत्तिर्हि महात्मनाम् ॥

[ने.सं. २९६ (वि.सं. १२३३) ज्येष्ठ कृष्ण अष्टमीका दिन, श्रीअमृतदेव राजाको राज्यमा, दाजु विजयदेवको स्वर्गप्राप्ति होस् भनी श्रीविशाखदेवले आमा मधुकश्रीको आज्ञाशिरोपर गरी विष्णुउपर भक्ति राखी दोलाचलमा (चाँगुमा) कृष्णको मूर्ति विधिपूर्वक स्थापना गरे । यस पुण्यले संसार सधैं सुखी होस् । ठूला मानिसको काम अर्काको भलाइका लागि नै हुन्छ ।]

गोपालवंशावलीकारको वर्णनअनुसार अमृतदेवको चार वर्ष जतिको छोटो शासनकालमा महामारी, दुर्भिक्ष (अनिकाल) भयो भन्ने रहेको छ । तैपनि अमृतदेवले आफ्नो शासनकालमा पञ्चपुरको उत्तर लङ्को खण्डचोक बनाई प्रतिष्ठा गराएका थिए । जनतातर्फबाट पनि देवतास्थापना आदि गर्ने काम भएको थियो भन्ने कुरा माथि उद्धृत अभिलेखबाट थाहा पाइन्छ । माथि उद्धृत अभिलेखमध्ये चाँगुको ने.सं. २९६ को अभिलेखचाहिँ राजपरिवारले नै राख्न लगाएको हो । त्यसमा राजा अमृतदेवको राज्यमा श्रीविशाखदेवले आमा मधुकश्रीको आज्ञाअनुसार भाइ विजयदेवको स्वर्गप्राप्ति होस् भनी कृष्णमूर्ति स्थापना गरेको कुरा परेको छ । यी विशाखदेव राजा रुद्रदेवका छोरा हुन् । यो कुरा गोपालवंशावलीबाट थाहा पाइन्छ– "सम्वत् (२७६?) द्विराशाढ शुक्ल द्वादशी जेष्ठानक्षत्र सोमार श्रीरुद्रदेवस्य पुत्र श्रीविशाषदेव जात अस्त वर्ष २६ ॥" (३२ पत्र)

अब यस प्रसङ्गमा आनन्ददेवदेखि अमृतदेवसम्ममा उत्तराधिकारी परम्परामा आएको अन्तरबारे अलिकता चर्चा गर्नु आवश्यक देखिन्छ । आनन्ददेव, रुद्रदेव र अमृतदेवहरू तीनै जना दाजुभाइ हुन् । यी तीनै जना सिंहदेव (शिवदेव)का छोराहरू हुन् भन्ने चर्चा माथि गरिसकेको छ । त्यसबेलाको 'द्वैराज्य" परम्पराअनुसार तीनै छोराहरू संयुक्त रूपमा राजा घोषित हुन पनि सक्थे । तर त्यसो नगरी दाजुभाइहरूले क्रमश: राज्य गरेको यसबेला देखिएको छ । यस नयाँ प्रयोगको परिणाम पनि राम्रै देखिएको छ । तर अमृतदेवपछि यो परम्परा फेरि चल्न सकेन ।

**सोमेश्वरदेव**

६६ वर्षका उमेरमा अमृतदेवको मृत्यु भएपछि सोमेश्वरदेव राजा भए भनी गोपालवंशावलीकारले लेखेका छन् । "राजा श्रीसोमेश्वरदेव वर्ष ४ मा ३" भनी गोपालवंशावलीकारले सोमेश्वरको शासनकाल छोटो देखाएका छन् । तात्कालिक हस्तलिखित ग्रन्थबाट पनि यस कुराको पुष्टि हुन्छ । विचारार्थ सोमेश्वरदेवका पालाका हस्तलिखित ग्रन्थका पुष्पिकावाक्य यहाँ उद्धृत गरिन्छन्–

(१) सम्वत्सरे नवाधिकनवतिशतद्वये मासमार्ग्गशिर शुक्लसष्टमे राजाधिराज परमेश्वर रघुकुलतिलकश्रीसोमेश्वरदेवस्य विजयराजे लिखितमिदम् .

(२) देयधर्मोयं परमोपाशकरज्जलजीवस्य ... । राजाधिराज परमेश्वर परमभट्टारक श्रीसोमेश्वरदेवस्य विजयराजे । सम्वत् ३०० पौषपूर्णमास्यां

(३) सम्वत् ३०० फार्गुनशुक्लपूर्णिमास्यायाम् बुधदिने ... श्रीसोमेश्वरदेवस्य विजयराज्ये ॥

(४) सम्वत् ३०१ कार्त्तिकशुक्लद्वितीयायाम् बुधदिने श्रीमहाराजाधिराजश्रीसोमेश्वरदेवस्य विजयराज्ये ।

यी सोमेश्वरदेव युवराज महेन्द्रदेवका छोरा हुन् । यिनि ने.सं. २४२ (वि.सं. ११७८) मा जन्मेका हुन् । यस कुराको उल्लेख गोपालवंशावलीकारले यसरी गरेका छन्– "सम्वत् २४२ फाल्गुणशुक्लत्रयोदशीमघनक्षत्र श्रीमहेन्द्रदेवस्य पुत्र श्रीसोमेश्वरदेव जातः ॥ राजा अस्त वर्ष– ३ ॥" (३२ पत्र) यसरी गद्दीमा बस्दा यी सोमेश्वरदेव पनि साठी वर्ष पुग्न लागेका थिए । त्यसैले यिनले धेरै काल शासन गर्न पाएनन् ।

आफ्नो छोटो शासनकालमा पनि सोमेश्वरदेवले केही निर्माणात्मक कार्य गरेका थिए । गोपालवंशावलीकारको वर्णनअनुसार सोमेश्वरदेवले योद्यंको ठूलो देवालयमा सुन्दर काष्ठशिल्प भर्न लगाए । त्यहीँ दक्षिणतिर प्रधान विद्यापीठ राख्न लगाए । त्यहाँ सदावर्त्तको पनि बन्दोबस्त गर्न लगाए । उक्त कुरासम्बन्धी गोपालवंशावलीको मूल वाक्य यस प्रकारको छ– "तेन कृत्य योद्यं बृहद्देवालये अतिसुन्दरकाष्ठशिल्पि कृता तत्रेव दक्षिणविद्यापीठमहाप्रधानम् पुन सत्रकृतञ्च ॥" (२५ पत्र) ।

**गुणकामदेव**

सोमेश्वरदेवपछि गुणकामदेव राजा भए भनी गोपालवंशावलीकारले लेखेका छन् । राजा गुणकामदेवको राज्यकाल तीन वर्ष भनी उल्लेख भएको छ– "राजा श्रीगुणकामदेवपुष्पाभिसेष कृत्य राज्य वर्ष ३" । (२५ पत्र) गोपालवंशावलीको यस वर्णनको पुष्टि तात्कालिक हस्तलिखित ग्रन्थबाट

अलि हुँदैन । विचारार्थ गुणकामदेवका पालाका हस्तलिखित ग्रन्थको पुष्पिकावाक्य यहाँ उद्धृत गरिन्छन्–

१. सम्वत् ३०७ फाल्गुनकृष्णषष्टम्याम् श्रीगुणकामदेवस्य विजयराज्ये लिखितमिदम्

२. विख्याते त्रिशते वरणबाणयुते नेपालसम्वत्सरे माघमासे श्रीगुणकामदेवराज्ये ।

३. श्रीमद्गुणकामदेवसम्भुज्य नेपालदेशरक्ष्य स्वस्ति सम्वत् ३१६

यताबाट सामेश्वरदेवपछि गुणकामदेव राजा भए भन्ने गोपालवंशावलीकारको भनाइ ठीक छ भन्ने देखिन्छ । तर गोपालवंशावलीकारले लेखेको गुणकामदेवको राज्यकाल भने मिल्दैन भन्ने देखिएको छ । उनको राज्याभिषेक ने.सं. ३०५ मा भएको थियो भन्ने कुरा केशरपुस्तकालयमा रहेको सङ्क्षिप्त गोपालवंशावलीमा लेखिएको छ । गोपालवंशावलीकारले यी गुणकामदेव कसका छोरा हुन्; उनको जन्म कहिले भयो आदि कुराहरू कुनै उल्लेख गरेका छैनन् ।

तात्कालिक हस्तलिखित ग्रन्थबाट यसताका लक्ष्मीकामदेव भन्ने राजा पनि शासन गर्दै थिए भन्ने देखिन्छ । गोपालवंशावलीकारले भने यसताका भएका लक्ष्मीकामदेवको चर्चा गरेका छैनन् । विचारार्थ लक्ष्मीकामदेवका पालाका हस्तलिखित ग्रन्थका पुष्पिकावाक्य यहाँ उद्धृत गरिन्छन्–

१. सम्वत् ३१३ कार्त्तिककृष्णे आदित्यवारे । राजाधिराज परमेश्वर श्रीलक्ष्मीकामदेवस्य विजयराज्ये । स्वस्ति श्रीललितपट्टनात् ...

२. सम्वत् ३१३ द्विराषाढपूर्णमास्याम् । श्रावणनक्षत्रम् । बृहस्पतिवासरे ॥ श्रीनेपालमण्डले राजाधिराजपरमेश्वरऊर्ध्वपट्के: श्रीमत्श्रीलक्ष्मी-कामदेवस्य विजयराज्ये श्रीयम्वुकमायां मखनटोल्लकाधिवासिन:

३. सम्वत् ३१५ ... सोमदिने पुनर्वसुनक्षत्रे । राजाधिराज परमेश्वर परमभट्टारक श्रीलक्ष्मीकामदेवस्य विजयराज्ये ।

४. सम्वत् ३१७ श्रावणशुक्लतृतीयायाम् । शनिश्चरवारे । राजाधिराज परमेश्वर श्रीमल्लक्ष्मीकामदेवस्य विजयराज्ये ।

यी हस्तलिखित ग्रन्थबाट यसताका लक्ष्मीकामदेव पनि राजा भएका थिए भन्ने प्रमाणित हुन्छ । तर गोपालवंशावलीकारले भने लक्ष्मीकामदेवको चर्चा गरेका छैनन् ।

**विजयकामदेव**

गुणकामदेव, लक्ष्मीकामदेवसँगै शासन गरिरहेका अर्का राजा विजयकामदेव हुन् । ने.सं. ३१२ देखि ३२० सम्मका विजयकामदेवका पाला:का हस्तलिखित ग्रन्थ, अभिलेख आदि पाइन्छन् । यी गुणकामदेव,

लक्ष्मीकामदेव र विजयकामदेव दाजुभाइ हुन् भन्ने अनुमान हुन्छ । त्यसैले एकै समयमा यिनीहरूले एक किसिमको 'द्वैराज्य" कायम गरेको देखिन्छ । तर यसबेलाका कुनै पनि हस्तलिखित ग्रन्थ, अभिलेख आदिमा 'द्वैराज्य' को स्पष्ट उल्लेख भने पाइँदैन ।

"राजा श्रीविजयकामदेव वर्ष ७" भनी गोपालवंशावलीकारले गुणकामदेवपछि विजयकामदेवको चर्चा गरेका छन् । यिनी कसका छोरा हुन्; यिनको जन्म कहिले भयो भन्ने कुरा गोपालवंशावलीकारले लेखेका छैनन् । जेहोस्; यसताका विजयकामदेवले पनि राज्य गरिरहेका थिए भन्ने कुरा तलका हस्तलिखित ग्रन्थ, अभिलेख आदिबाट थाहा पाइन्छ–

(१) सम्वत् ३१२ वैशा(ख शु)क्ल तृतीया बृहस्पतिदिने राजाधिराज परमेश्वर परमभट्टारक श्रीविजयकामदेवस्य विजयराज्ये ।

(२) सम्वत् ३१५ चैत्रशुक्लपूर्णमास्यां सोमवासरे चित्रानक्षत्रे हर्षनयोगे । राजाधिराज परमेश्वर परमभट्टारक श्रीमद्विजयकामदेवस्य विजयराज्ये विप्र श्रीजयब्रह्मशर्मणः लिखितमिदम् पुस्तकम् ।

(३) सम्वत् ३१६ प्रथमाषाढशुक्लैकादश्यां सोमवारे । राज्ये श्रीविजयकामदेवस्य । भद्र श्रीहरिचन्द्रशर्मस्य पुण्यवैवृद्धिनार्थेन श्रीमद्देव्याया स्तव दैवज्ञश्रीरत्नचन्द्रेण लिखितम् ।

(४) श्रीयङ्गलोत्तरटोलकेधिवासिनौ भार्या उदेलच्छिभ्यारी स्वामी श्रीथकुरका । ... सम्वत् ३१६ द्विराषाढपूर्णमास्य बृहस्पतिवासरे ... राज्ये राजाधिराज परमेश्वर श्रीमद् विजयकामदेवस्य विजयराज्ये ॥

(५) श्रीमद् विजयकामदेवस्य राज्ये सम्वत् ३१७ वैशाख पूर्णमास्याम्

**(६) अभिलेख**

१. ... नयभ ... थमिन्धयो ... गादयव–

२. ... वात्स ... खिविक ... क्षयविक्षिप्तता

३. ... दुःसा ... श्रीनृसिंह : । शश्वद् दुःखक्षतानाम्प्रभ–

४. ... रि धराय ... धरणीनुद्धरन्नागधाम्नः । दद्या–

५. ... त्रिभिरहं वि... मनश्रीपर ... माभिलषित वोऽप्रमे

६. ... विरथपरश्रीजृम्भ ... वासः ...........

७. ... न्नुपमिति ... रणकरस्तस्य तीरस्म –

८. ... आसीत्सुतोस्य स रसायनसोम –

९. ....................... धर्मरती विलो .....

१०. ............... यज ...... ययता ॥

११. ...... दत्र व ........ आत्मनापि – मलायति ...

१२. ... कन्धराहार ... सुतोस्य पुरुषोत्तमसोमसर्मा यस्य – ति:
१३. ... गृह्यत .... यस्त्यविरतम्प्रमदावस्श्रीश्च । ये वयञ्चोभ ...
१४. ... तामृतश्री: । दुख– प्रकृतिजलैकवसतिर्नित्यप्रशन्नाकृति: पुन्य
१५. ... गति: प्रोल्लाससत्सन्तति: । रागाद्यन्तकमूर्तिरुत्तमकृतिर्मै ...
१६. दिरागायति: । षट्कर्माभिरतिस्त्रिविकममतिर्नैपुण्यसत्पद्धति: । श्रीमत्पश्चि-
१७. (मप)वतेन्द्रशिखरप्रासादवेदीलसद्द्वारे श्रीहरिदत्तभूपतिकृतन्नाराय
१८...स्त्युभौ सिंहौ चक्रककम्बुकन्धरकलालङ्कारकान्तौ शिवौ ताम्राङ्गा-
१९. (विह) ढौकितौ जगदघध्वन्साय तेनानघौ ॥ मम सुकृतबलेनानेन नन्दन्तु
२०. ... हरिवषुषि लयन्ते प्राप्नुवन्तु प्रकामम् । पितृभिरथ जनन्या सार्द्धमन्ते
२१. ... स्मत्पितर इति समन्तात्प्रार्थनाङ्कुर्वतोच्चै : आकाशनयनदहने या
२२. (ते ने) पालवत्सरे राज्ये । माघसितशौरिदिवसे राज्ञ: श्रीविजयकामदेवस्य
२३. .. लसत्पदसुवर्णवतीम्प्रशस्तिं सार्थामिमामिह महीमिव माधवेन । स
२४. ... कलौ दिवि सत्कृतां श्रीदामोदरेण विबुधा मुदमाप्नुवन्तु ॥ ॥

यी हस्तलिखित ग्रन्थ, अभिलेखबाट ने.सं. ३२० सम्म विजयकामदेव राजा भएका थिए भन्ने प्रमाणित हुन्छ ।

**अरि मल्ल**

विजयकामदेवपछि अरि मल्ल राजा भए पनि गोपालवंशावलीकारले यसरी उल्लेख गरिएका छन्– "राजा श्रीअरिमल्लदेव वर्ष २५ मा १० तस्य राजे महामारी दुर्भिक्षम्भवति दम्मेन कुद्ववद्वयतण्डुलम् ॥" (२५ पत्र) तात्कालिक हस्तलिखित ग्रन्थ आदिबाट पनि विजयकामदेवपछि अरि मल्ल राजा भए भन्ने थाहा पाइन्छ । अरि मल्ल गद्दीमा बसेपछि 'मल्लयुग' सुरु हुन्छ । यसभन्दा अगाडि गद्दीमा बसेका राजाहरूले आफूलाई 'मल्ल' भनेका पाइँदैन । उनीहरूले आफूलाई 'सूर्यवंशी'मात्र लेखेको पाइन्छ । आफूलाई स्पष्ट रूपमा 'मल्ल' लेख्ने यसताकाका पहिला शासक अरि मल्ल नै हुन् । यसरी मध्यकालको केन्द्रको राजगद्दीमा नयाँ राजवंशको उदय भएको यताबाट देखिन आएको छ । तर यस नयाँ परिवर्तनलाई गोपालवंशावलीकारले विशेष रूपमा लिएका छैनन् । अरि मल्ल कसरी

गद्दीमा बस्न पाए भन्ने कुरा गोपालवंशावलीकारले उल्लेख गरेका छैनन् । साधारण रूपमा मात्र यस घटनालाई लिइएको छ । यसबाट अरि मल्लले गद्दीमा बस्न कान्ति गर्नुपरेको वा विशेष सङ्घर्ष गर्नुपरेको देखिँदैन । पुरानो 'देव' कहलाएको राजवंशसँग अरि मल्लहरूको सम्बन्ध रहेको हुनाले अरि मल्लले सजिलैसँग गद्दीआरोहण गरेको देखिन्छ ।

'मल्ल' उपाधिधारी गद्दीनसिन शासकमा अरि मल्ल पहिला भए पनि यसभन्दा एक शताब्दी जति पहिले नै 'मल्ल'हरू केन्द्रमा चल्तापुर्जा प्रभावशालीरूपमा देखापरिसकेका थिए । उदाहरणार्थ ने.सं. २३१ (वि.सं. ११६८) मा डोय (तिरहुतेहरू)लाई नर मल्लले धपाएको घटनालाई देखाउन सकिन्छ । गोपालवंशावलीकारले सो घटनाको चर्चा यसरी गरेका छन्–

"सम्वत् २३१ भाद्रपद कृष्ण सप्तमी तवलछेंस तव ...
श्रीश्रीनरमलदेव पोहस खण्डन लाक्व डोययछि म्वण्ड डचंङा"
(३२-३३ पत्र)

[ने.सं. २३१ (वि.सं. ११६८) भाद्रकृष्ण सप्तमी ... श्री श्री नर मलदेव पोहले डोयहरूलाई (तिरहुतेहरूलाई) खड्गले टाउको काटे ।]

हाल 'राष्ट्रिय सङ्ग्रहालय' छाउनीमा रहेको ने.सं. २६२ को अभिलेखबाट त्यसबेला 'देव' उपाधिधारी आनन्ददेवहरू र 'मल्ल' उपाधिधारी यशो मल्लहरू समान तहका राजकुमारका रूपमा थिए तथा ती दुवै थरीले सँगसँगै शङ्कराचार्यसँग दीक्षा लिएका थिए भन्ने थाहा पाइन्छ । उदाहरणार्थ त्यस अभिलेखको एक अंश यहाँ उद्धृत गरिन्छ–

"अस्यां श्रीरघुवंशमौक्तिकमणि ... आनन्ददेवः करैः
उच्चैः शक्तिधरः कुमारपदवीं प्राप्तोपि तैर्दीक्षितो ...
वसन्तदेवो विज्ञानी धीमान् सोमेश्वरस्तथा ।
यशोमल्लश्च तैरेव कुमारा दीक्षिता अमी ॥"

[यस सहरमा श्रीरघुकुलमा श्रेष्ठ भएका ... राजकुमार पदमा रहे पनि ठूला शक्तिशाली भएका आनन्ददेवलाई उहाँ शङ्कराचार्यले दीक्षा दिनुभयो ।

उहाँ शङ्कराचार्यले विद्वान् वसन्तदेव, बुद्धिमान् सोमेश्वरदेव तथा यशो मल्ल यी राजकुमारहरूलाई पनि दीक्षा दिनुभयो ।]

यस अभिलेखमा अरू राजकुमारहरूको भन्दा आनन्ददेवको बढी वर्णन परेको छ । यी आनन्ददेव शिवदेवका छोरा हुन् । वसन्तदेव र सोमेश्वरदेवचाहिँ शिवदेवका नाति हुन् । यी दुई युवराज महेन्द्रदेवका छोरा हुन् । गोपालवंशावलीकारले यिनीहरूको चर्चा गरेका छन् । यशो मल्ल कसका छोरा हुन् भन्ने कुरा गोपालवंशावलीकारले उल्लेख गरेका छैनन् । तर यशो मल्लका छोराको जन्म ने.सं. २७२ मा भयो भन्ने उल्लेख भने

गोपालवंशावलीमा परेको छ– "सम्वत् २७२ फाल्गुनशुक्लदशमी पुनर्वसुनक्षत्र श्रीजसमलदेवस्य पुत्र श्रीअनङ्गमलदेवस्य जात अस्त वर्ष २०"।

यसबाट कुमार यशो मल्लदेखि गोपालवंशावलीकार अपरिचित थिएनन् भन्ने थाहा पाइन्छ।

**उभय राजकुल**

यसताका केन्द्रमा दुई राजकुलको अस्तित्व स्पष्ट रूपमा देखापर्न थालेका थिए; आफूलाई 'देव' मात्र लेख्ने पुरानो राजवंश र 'मल्ल' भनी लेख्ने अर्को राजवंश। यी दुई राजवंशमा नजिकको सम्बन्ध रहेको हुँदा पछि यी दुई राजवंशमा एकान्तर रूपमा गद्दीमा बस्ने विचित्र प्रथा पनि पछि केही कालसम्म प्रचलित भएको थियो। गोपालवंशावलीमा ने.सं. २१९ तिरका पाटनका एक जना भारादारको चर्चा गर्दा "नेपालया विक्षात, महाप्रभुत उभयराजकुल उधरण धारणसमर्थः" भनी लेखिएको छ। यसबाट त्यसताका 'उभयराजकुल' (दुई राजकुल) खडा भइसकेको सङ्केत पाइन्छ। पछि ने.सं. ४६७ मा राजदेवलाई गद्दीमा राखेको वर्णनका सिलसिलामा पनि 'उभयराजकुलसानुमतेन सम्वत् ४६७ श्रावणवदि ४ श्रीजयराजदेवस्य राजा कृत्य" भन्ने उल्लेख गोपालवंशावलीमा गरिएको छ। जयार्जुनदेवलाई राज्यच्युत गरी स्थिति मल्ल गद्दीमा बसेपछि सो 'उभयराजकुल' प्रथाको अस्तित्व समाप्त भएको थियो।

माथि उद्धृत ने.सं. २६२ को अभिलेखबाट त्यसताका उभयराजकुलको अस्तित्व कायम भइसकेको स्पष्ट सङ्केत पाइन्छ। त्यसमा आनन्ददेव, वसन्तदेव र सोमेश्वरदेवबाहेक यशो मल्लको पनि वर्णन परेको छ। ती राजकुमारहरूले सँगसँगै शङ्कराचार्यसँग दीक्षा लिएका थिए। यसबाट उभय राजकुलमा नजिकको सम्बन्ध रहेको थियो भन्ने सङ्केत पाइन्छ। साथै सो अभिलेखमा उभय राजकुलका कुमारहरूको वर्णन समान रूपमा गरिएको छ।

यति कुरा गर्नाका तात्पर्य केन्द्रमा 'मल्ल'हरूको उपस्थिति निकै पहिलेदेखि भइसकेको थियो भन्नाका लागि हो। तर 'मल्ल'हरूमा विधिवत् गद्दीमा बस्नेहरूमा अरि मल्ल पहिला हुन्।

यी अरि मल्ल ने.सं. २७४ (वि.सं. १२१०) मार्गमा जन्मेका हुन्। उनका बाबु श्रीजयशि मल्लदेव हुन्। गोपालवंशावलीकारले सो कुरा यसरी लेखेका छन् – "सम्वत् २७४ मार्गशिरकृष्ण .... नक्षत्र श्रीजयशिमलदेवस्य पुत्र श्रीअरिमलस्य जातः राजा भोगवर्ष १५ अष्त वर्ष ६२ मा ११" (३२ पत्र) यसबाट गद्दीमा बस्दा अरि मल्ल परिपक्व उमेरका थिए भन्ने थाहा पाइन्छ। उनको मृत्युचाहिँ ६३ वर्ष पुग्नै लागेका बेला भएको थियो। गोपालवंशावलीकारको यस भनाइको पुष्टि तात्कालिक हस्तलिखित

ग्रन्थबाट पनि हुन्छ । अरि मल्लका पालाका हस्तलिखित ग्रन्थ प्रशस्त पाइएका छन् । तिनमा केहीको सङ्क्षिप्त उद्धरण यहाँ गरिन्छन् ।

(१) राज्ञः श्रीमदरिमल्लदेवस्य विजयराज्ये । सम्वत् ३२१ कार्त्तिकशुक्लदशम्यां शनिश्चरवारे पूर्वभद्रनक्षत्रे

(२) श्रेयोस्तु सम्वत्सरे शतत्रयएकविंशत्यधिक पौषकृष्णत्रयोदश्यां गुरुदिने मूलनक्षत्रे व्याघातयोगे श्रीनेपालराजाधिराजपरमेश्वरपरममाहेश्वर– पशुपतिभट्टारकस्य । श्रीअरिमल्लदेवस्य विजयराज्ये श्रीपञ्चावत-देशीयविषयाधिपतिरानकश्रीश्रीधरसिंहवर्त्तमाने ।

(३) सम्वत् ३२२ कार्त्तिकशुक्लनवम्यां आदित्यवासरे राज्ये श्रीमद्-अरिमल्लदेवस्य विजयराज्ये लिखनं समाप्तीकृतम् ।

(४) शिखिनेत्रयुते वह्नौ गते नेपालवत्सरे ।
राज्ये ह्यरिमल्लदेवस्य ख्याते सुकीर्त्तिमालिनः ।
मासे दुस्थितिसितपक्षे दशम्या बुधवासरे ।

(५) यातेब्दे त्रिशते स च षट्सहिते भूयो विंशत्य– श्रावणे मासे द्वादशीतिथौ श्रीअरिमल्लदेवनृपे ...

(६) राजाधिराजपरमेश्वरपरमभट्टारकश्रीमदरिमल्लदेवस्य विजयराज्ये । सम्वत् ३३१ श्रावण शुदि ७ ।

(७) सम्वत् ३३६ पौषकृष्णाष्टम्यां बृहस्पतिवासरे विशाखनक्षत्रे राजाधिराजपरमेश्वरश्रीमदरिमल्लदेवस्य विजराज्ये

(८) स्वस्ति । श्रीमन्नेपालेश्वरः । समस्तराजवलीविराजित-महाराजा-धिराजपरमेश्वरपरममाहेश्वर । श्रीपशुपतिभट्टारकावधानाद् भक्तिजलप्रक्षालितांतःकरण । सकलशास्त्रपरिमलित । सिद्धांत-तंत्ररहस्यागमार्घविद् । श्रीमद्विमलप्रबोधपाद–प्रसादाल्लब्धा-भिषेकषडन्वयाधार्य । निर्ज्जितारिव्रात । प्रतापलंकेश्वर । रघुवंशकुलतिसर्वजनहृदयानंदकर । दीनदुःखितजनाशापरिपूरक । अनेकगुणनिधान । श्रीमद् अरिमल्लदेवप्रवर्धमानविजयराज्ये । ने.सं. ३३६ जेष्ठ कृष्ण ७

यी प्रमाणले गोपालवंशावलीकारले दिएको अरि मल्लको राज्यकाल ठीक छ भन्ने देखिएको छ । गोपालवंशावलीकारको भनाइअनुसार यी अरि मल्लको राज्यकालमा महामारी, अनिकाल फैलियो; एक द्रम्मले दुई कुरुवा चामलमात्र पाइने भयो भन्ने रहेको छ । अरि मल्लको शासनकालमा जनताले धारा, पौवा, पाटी आदि बनाई कुँदाएको अभिलेख एउटा पनि पाइएको छैन । यो अनिकालकै परिणाम हो भन्ने देखिन्छ ।

**अभय मल्ल**

अरि मल्लपछि उनका छोरा अभय मल्ल गद्दीमा बसे । अभय मल्लको जन्म ने.सं. ३०३ मा भएको थियो । गद्दीमा बस्दा अभय मल्ल ३४ वर्षका मात्र थिए । अभय मल्ल बढी उमेरसम्म बाँचे । यसकारण अभय मल्लको राज्यकाल लामो रहेको छ । तर अभय मल्लको राज्यकालमा अनिकाल, भूकम्प आदि दैवीप्रकोप हुँदा देशमा निकै कठिनाई उत्पन्न भएको थियो । गोपालवंशावलीकारले अभय मल्लको राज्यकालमा भएका घटनाको वर्णन गर्दा अनिकाल, भूकम्प आदिलाई नै प्राथमिकता दिएका छन् ।

अभय मल्ल को हुन् र उनको जन्म कहिले भयो भन्नेबारे गोपालवंशावलीको मूल वाक्य यहाँ उद्धृत गर्नु उचित देखिन्छ– "स ३०३ तमदशमी श्रीअरिमलदेवस्य पुत्र श्रीअभयमलदेवस जात । राजा भोग वर्ष ३९ अस्त वर्ष ७२ मा ७ आषाढशुदिमष्टमी ॥" (३५ पत्र) अर्को ठाउँमा अभय मल्लबारे गोपालवंशावलीकारले यसो लेखेका छन्– "राजा श्रीअभयमलदेव वर्ष ४२ मा ६ तस्य राजे महामारी दुर्भिक्ष प्रजा कष्टीभवतिः तस्य सान्तिकृते, वर्ष प्रति लक्षहोम, पक्षश्राध कृत्यः श्रीपशुपतिभटारकाय महास्नान केलासपूजनम्कृतम्" (२५ पत्र) ।

यहाँ गोपालवंशावलीकारले एक ठाउँमा अभय मल्लको राज्यकाल ३९ वर्ष लेखेका छन् र अर्को ठाउँमा ४२ वर्ष लेखेका छन् । तात्कालिक हस्तलिखित ग्रन्थहरू केलाई हेर्दा अभय मल्लको शासनकाल ३९ वर्ष नै ठीक हो भन्ने देखिन्छ । विचारार्थ अभय मल्ल पालाका हस्तलिखित ग्रन्थ, अभिलेखमध्ये केहीका सङ्क्षिप्त उद्धरण यहाँ प्रस्तुत छ–

(१) सम्वत् ३३७ ज्येष्ठशुक्लपूर्णमास्यां सोमदिने । श्रीराजाधिराज परमेश्वर परमभट्टारक श्रीमत् अभयमल्लदेवस्य विजयराज्ये लिषितमिति ।

(२) सम्वत् ३३८ मार्ग्गशिरकृष्णनवम्यां शुकदिने राजाधिराज–परमेश्वर-श्रीमद्अभेमल्लदेवविजयराज्ये पुस्तकम् लिखितमिदम्

(३) खाब्धिलोके गते वर्षे चेत्रे पञ्चदशे दिने
भृगौ च श्रीमतो राज्येभयमल्लस्य लेखनम् ।

(४) राजाधिराज परमेश्वर परमभट्टारक रघुवंश(तिलक) श्रीमद् अभयमल्लदेवस्य विजयराज्ये । कुमार श्रीअनन्तमल्लदेवस्य पुस्तकमिदं लिखापितम् । सम्वत् ३४४ कार्तिकशुक्लपूर्णमास्यां बृहस्पतिवासरे ॥

(५) सम्वत् ३५८ फाल्गुण–मास्या अङ्गारदिने ॥ राजाधिराज परमेश्वर परमभट्टारक श्रीमद्अभयमल्लदेवस्य विजयराज्ये लिखितमिति

### (६) अभिलेख

१. ॐ श्रेयोस्तु ॥ सम्वत् ३५३ कार्तिककृष्ण–
२. राज्ञः श्रीश्यभयमल्लदेवस्य विज(य)राज्ये ॥ श्री–
३. सूतीगल जल कुलक्ष्न युक्त मुहान लस ...
४. स्यनक .. युते प्रमुङा चित्तन जुया
५. ... जलँ ल्होङा जुरो । शुभमस्तु जगताम्

[कल्याण होस् । ने.सं. ३५३ (वि.सं. १२८९) कार्तिक कृष्ण ... राजा श्रीअभय मल्लदेवको विजयराज्यमा । सूतीगलको जलद्रोणीका लागि कुवाको मुहान बिग्रेको हुनाले ... सो बनाउने विचार मनमा आएको हुनाले यो जलद्रोणीको जीर्णोद्धार गरिएको हो । संसारको शुभ होस् ।]

(७) नेपालिक संवत् ३६५ मार्गशिरशुक्लसप्तम्याम् अश्लेषनक्षत्रे अंगारवासरे । श्रीराजाधिराज पूज्य परमेश्वर श्रीश्रीअभयमल्लदेवस्य विजयराज्ये ॥

(८) शैलरशरामायुतो वह्नवत्सरे वर्त्तते । माघसितेनङ्गदिने जिनमाता प्रतिष्ठिता । राजाधिराज ... श्रीमद् अभयमल्लदेवविजयराज्ये । देयधर्मोयम् श्रीललितपुरनगरे श्रीमानीस्थारमुकदचांनिवासी हरिपालठाकुरस्य–

### (९) अभिलेख

१. ... भट्टारकाणां देयधर्म्मोऽयं प्रव(र) महायायिन श्रीचन्द्रम ... महापण्डित श्रीश्रीविभूतिचन्द्र प– ..
२. रमोपासिकी भिक्षुणी श्रीमलयश्रीरीनाम्नाया यदत्र पुण्यं तत् भवत्वाचार्योपाध्याय मातापितृपूर्वगमं कृत्वा सकलसत्त्व ....
३. ज्ञानफलप्राप्तये । श्रेयोस्तु । सम्वत् ३६८ माघकृष्णनवम्यां तिथौ ।राजाधिराज परमेश्वर परमभट्टारक श्रीश्रीअभयमल्ल–
४. ......................

[....ठूलो महायानका अनुयायी .... महापण्डित श्रीश्रीविभूतिचन्द्र, ठूलो उपासना गर्ने भिक्षुणी श्रीमलयश्रीको यो दानधर्म हो । यसबाट जो पुण्य भएको छ; त्यसबाट आचार्य (मूल गुरु) उपाध्याय (गुरु), आमा बाबुलगायत सारा प्राणीहरूलाई (अनुत्तर) ज्ञानको फल प्राप्त होस् ।

कल्याण होस् । ने.सं. ३६८ (वि.सं. १३०४) माघ कृष्ण नवमीका दिन राजाधिराज परमेश्वर परमभट्टारक श्रीश्री अभय मल्लको विजयराज्यमा । ...]

(१०) सम्वत् ३७२ चैत्रकृष्णद्वादशी सोमवासरे । श्रीमत् राजाधिराज परमेश्वर श्रीश्रीअभयमल्लदेवविजयराज्ये

(११) राजाधिराज परमेश्वर श्रीमद् अभयमल्लदेवस्य विजयराज्ये लिखन समाप्तीकृतमिति । सम्वत् ३७३ मार्गशीर्षशुक्लद्वितीयायाम् शुक्लवासरे स्वातिनक्षत्रे श्रीनोगल्लके वैश्यश्रीदिवाकरवर्म्मंमहाविहारभिक्षु-वज्राचार्येण वीरमतिना स्वहस्तेन लिखितमिति

(१२) महाराजाधिराज परमेश्वर परमभट्टारक श्रीमद् अभयमल्लदेवस्य राज्ये । श्रीभक्तपुरीनिवासिन जयभरामस्यायाः निमित्तेन भल्लोक ... नेपालसम्वत्सरे बाणशैलहरावक (=३७५) मासे चैत्रशुक्लत्रयोदश्यां सोमवासरे ॥

(१३) सम्वत् ३७५ चैत्रकृष्णद्वादशी सोमवासरे श्रीराजाधिराज परमेश्वर श्रीश्रीअभयमल्लदेवस्य विजयराज्ये लिखितमिदम्

यी तात्कालिक प्रमाणहरूबाट ने.सं. ३३६ देखि ने.सं. ३७५ सम्म जम्मा ३९ वर्ष अभय मल्लले राज्य गरेको प्रमाणित भएको छ । यति लामो कालसम्म अभय मल्लले शासन गरे पनि उनको राज्यकालमा शान्ति, समुन्नति भने हुन सकेन । यसमा केही अंश दैवीआपद् कारण रहेको थियो भने केही अंशमा तात्कालिक राजनीति पनि कारण रहेको थियो । गोपालवंशावलीकारले अभय मल्लको वर्णन गर्दा 'तस्य राजे महामारी दुर्भिक्ष प्रजा कष्टभवति' भन्ने कुरालाई जोड दिई लेखेका छन् । हुन पनि महामारी अनिकालले गर्दा एकपटक ने.सं. ३३९ तिर आधा प्रजा नै मरेको कुरा गोपालवंशावलीकारले यसरी टिपेका छन्–

"सम्वत् ३३९ आषाढनली भाद्रपद व अनावृष्टि महादुर्भिक्ष अर्द्धभाग लोकक्षय ॥ सम्वत् ३४० कार्त्तिकन ज्येष्ठटो दम्मन तेवछि धारेके दुभिख जुवः" (३३ पत्र)

[ने.सं. ३३९ (वि.सं. १२७६) आषाढदेखि भाद्रसम्म नै पानी परेन; ठूलो अनिकाल भयो; आधा लोकको क्षय भयो । ने.सं. ३४० (वि.सं. १२७६) कार्तिकदेखि (वि.सं. १२७७) ज्येष्ठसम्म एक द्रम्मको ४ मानामात्र चामल पाइने गरी अनिकाल पर्‍यो ।]

यसरी आफ्नो शासनकालको सुरुमै राजा अभय मल्लले ठूलो दैवीआपद्को सामना गर्नुपर्‍यो । जम्मा प्रजाको आधा भाग अर्थात् कुल आवादीको आधा भाग मर्नु राष्ट्रिय दृष्टिले कम आपद् होइन । तात्कालिक लोकधारणाअनुसार दैवीआपद्को शान्तिका लागि देवताको पूजाआजा गर्नु नै एक प्रमुख उपाय ठानिएको हुनाले अभय मल्लले उक्त आपद् शान्त पार्न नेपालका अधिपति देवता पशुपतिमा प्रतिवर्ष लक्षहोम, महास्नान गराउने, कैलाशपूजा, पक्षश्राद्ध आदि विधिविधान गराएका थिए ।

अनावृष्टि, महामारी, अनिकालबाहेक अभय मल्लका शासनकालमा कहिले भूकम्प भयो भने कहिले ठूलो हिउँ परी पशु, बस्तुभाउ कुल जम्माको आधा मर्नेजस्ता दुर्घटना भएको पनि गोपालवंशावलीकारले लेखेका छन्। जस्तै –

"सम्वत् ३४४ पौष्य शुक्ल प्रतीपदा ... थो कोन्हु भूमिकम्प वव। ... सम्वत् ३५० माघ ... तव चाप्व गाक्व अर्द्धपशु आदि शिक्व: ॥" (३४ पत्र)

"स ३६२ माघ कृष्ण पञ्चमी चा, तव च्वाप्वं गाक्व न्हसन्हुलिछिं कोथ्यंग्व पसु शिक्व, " (३८ पत्र)

"स ३७५ आषाढ शुक्ल तृतीया पुनर्व्वसु सोमवार: जोग ध्रुव: तव भुंकम्प वव: ... अनेक देवल छें डोक्व विजयराज श्रीअभयमलदेवस आदिन प्रजा शिक्व त्रिभागस छ भाग ॥" (३८ पत्र)

कहिले फेरि असाध्य पानी परेर कैयौं दिनसम्म घरबाट बाहिर नै निस्कन नहुने घटना पनि अभय मल्लका पालामा भएका थिए। यसको चर्चा पनि गोपालवंशावलीमा यसरी परेका छन्।

"सम्वत् ३४० भाद्रपद शुक्ल अष्टमी तवक्वल वास वव, दिन पेन्हु छेंन पीलुय मजीव ॥" (३४ पत्र)

"ॐ स ३६४ आषाढ कृष्ण अमावाशी तव क्वल वास वव प्यंन्हु छेनं पींलुये मजिव महामारी दुभिक्ष जुव:" (३८ पत्र)

फेरि अर्कोपटक ने.सं. ३५२ मा पनि अभय मल्लका पालामा ठूलो अनिकाल परेको थियो। यसको टिपोट पनि गोपालवंशावलीकारले गरेका छन्–

"स ३५२ चेत्रादि श्रीअभयमल्लदेवस विजयराजे महाद्रूभिक्ष तण्डुल कुडवद्वय दम्मेन, लवन तेल प्ल मेकं, लुं प्ल मुल्य दम्म प्ल २ ॥। वोह कर्ष दम्म २०, पद्दिपो दम्म ७२ खष्टखण्डा दम्म २४ दक्षिटो जुव लोकक्षय जुव त्रिभगस छ भाग, थ्व क्षणस पलाखचो श्रीउदयशीहदेवस महाथ उदमाल भास तिपुर ग्वह्न भोतपन्त" (३९ पत्र)

यसरी अभय मल्लका पालामा लामो कालसम्म दैवीआपद् देखापरिरह्यो भने अर्कोतिर आन्तरिक कलह र बाह्य सङ्घर्षले पनि केन्द्रको शासनलाई कमजोर बनाउन थाल्यो। मुख्य गरी तिरहुते (सिम्रौनगढे) राजाहरूले केन्द्रको राजकाजमा असर पार्ने, हमला गर्ने आदि गर्न थाले। उता पश्चिमका खसराजाहरू पनि पूर्वतिर बढ्ने अवसर खोज्न लागे। यस

विषयमा प्रकाश पार्नुभन्दा पहिले अब सिम्रौनगढराज्य र खसराज्यका अवस्थाबारे अलिकता प्रकाश पार्नु उपयुक्त हुन्छ ।

**तिरहुते (डोय)राज्य र खसराज्य**

लिच्छविकालदेखिकै शासकहरूले विकेन्द्रीकरणको नीति लिई स्थानीय सङ्गठनलाई स्वशासन दिने कियाकलापले गर्दा केन्द्रमा सैन्यशक्तिको आवश्यकता त्यति रहेको थिएन र पछि केन्द्रमा कमशः सैन्यशक्तिमा कमी आउन थाल्यो । लिच्छविकालमा एकातिर पञ्चायत–सङ्गठनहरूलाई हरकिसिमका अधिकार सुम्पी जनतालाई स्थानीय प्रशासनमा सकिय रूपमा भाग लिन लगाउने गरिएको थियो भने अर्कोतिर सैन्यशक्ति पनि सुदृढ थियो । चिनियाँ वृत्तान्त र लिच्छविकालका अभिलेखहरूको तुलनात्मक अध्ययनबाट उक्त कुरा स्पष्ट हुन्छ । तर मध्यकालमा यो अवस्था रहेन । आवश्यकता नभई सैन्यमा किन खर्च गर्ने भन्ने धारणाले केन्द्रमा कमशः सैन्यशक्तिमा कटौती गरिएको अनुमान हुन्छ । जे होस्, मध्यकालमा केन्द्रमा सैन्यशक्ति घटेको कुरामा शङ्का छैन । यसको परिणामस्वरूप वि.सं.को बाह्रौं शताब्दीमा पुग्दा नेपालको राजनैतिक अवस्थाले नयाँ मोड लिन थाल्यो । केन्द्रका शासकहरूले पश्चिममा कालीगण्डकीभन्दा परका प्रदेशमा नियन्त्रण राख्न सकेनन् र कमशः टाढाका ती प्रदेशमा केन्द्रको प्रभुत्व छुट्न थाल्यो । यस अवसरबाट फाइदा उठाई विकमको बाह्रौं शताब्दीको सुरुतिर कर्णालीप्रदेशमा खसराजा नागराजले एक स्वतन्त्र राज्य खडा गरे । यसको मूल राजधानी सिंजामा रह्यो । यसको लगत्तैपछि भनेजस्तै दक्षिण तराईभेगमा र पूर्वी तराईभेगमा पनि अर्को स्वतन्त्र राज्य खडा भयो । वि.सं. ११५४ मा डोयराजा नान्यदेवले सिमरा–वनगढ (सिम्रौनगढ)लाई राजधानी बनाई उक्त राज्य खडा गरेका थिए । केन्द्रमा शासकहरूमा कमजोरी आएको हुनाले उनीहरूले आत्मरक्षातिर मात्र ध्यान दिन थाले । नयाँ खडा भएका उक्त दुई राज्य भने अनेक दृष्टिले विकसित र बलिया हुँदै गए ।

नान्यदेव कर्नाटवंशी थिए; सुरुमा उनी महासामन्त थिए भन्ने कुरा "भारतवार्त्तिका" नामक हस्तलिखित ग्रन्थको पुष्पिकावाक्यमा परेको "महासामन्ताधिपति मिथिलेश्वर कर्णाटकुलभूषण धर्माधिभूपति" भन्ने पदवीले देखाउँछ । यताबाट चालुक्य राजाले उत्तर भारतमा आक्रमण गरेताका नान्यदेव मिथिला (तिरहुत) भेगका महासामन्त बनाइएका थिए । पछि अवसर पाई नेपालको 'सिमरा' भेगमा राजधानी बनाई उनले एक स्वतन्त्र राज्य स्थापना गरे । नान्यदेवले सिमरा-वनगढमा डोयराज्य खडा गरेताका नेपालको केन्द्रमा हर्षदेव राजा थिए । उनी बलिया शासक नहुँदा उनले यस नयाँ राज्यको स्थापनामा प्रतिरोध गर्न सकेनन् ।

नान्यदेवले सिमरा-वनगढमा राज्यस्थापना गरेको कुराको चर्चा गोपालवंशावलीकारले गरेका छैनन् । तर गोपालवंशावलीकार नान्यदेव र उनका वंशजहरूका गतिविधिदेखि अपरिचित थिएनन् । गोपालवंशावलीकारले यी तिरहुते शासकहरूलाई 'डोय' भन्ने संज्ञा दिएका छन् । गोपालवंशावलीकारले नान्यदेवको नाम उल्लेख एक ठाउँमा गरेका छन् । उनका छोराको जन्मका सिलसिलामा सो नामोल्लेख यसरी गरिएको छ- "स. ३५२[+] भाद्रपद कृष्ण नवमी डोय श्रीनानेदेवस पुत्र जात श्रीअर्जुनदेव" [ने.सं. २५२ (वि.सं ११८९) भाद्र कृष्ण नवमीका दिन डोय श्रीनान्यदेवका छोरा श्रीअर्जुनदेवको जन्म भयो ।]

सिमरा–वनगढमा डोयराज्य खडा भएदेखि नै यी डोयहरूले नेपालको केन्द्रमा पनि आँखा गाड्न थालेका थिए । यस कुराको पुष्टि गोपालवंशावलीमा उल्लिखित निम्नलिखित उदाहरणबाट हुन्छ–

> "सम्वत् २३१ भाद्रपद कृष्ण सप्तमी तवलछेंस ... श्रीश्रीनरमलदेव पोहस खण्डन लाक्व डोययछि म्वण्ड ड्यङा" (३२-३३ पत्र)

[ने.सं. २३१ (वि.सं. ११६८) भाद्र कृष्ण सप्तमी ... श्रीश्री नर मल्लदेव पोहले डोयहरूलाई खड्गले काटे ।]

यताबाट नान्यदेवकै पालामा डोयहरूले यहाँ आक्रमण गरेका थिए । तर तिनीहरू असफल भएका थिए भन्ने थाहा पाइन्छ । तर पछिपछि केन्द्र कमजोर हुँदै गएपछि डोयहरूले अझ बढी प्रभाव पार्ने चेष्टा गरेका थिए ।

**डोयराजा रामसिंहको आक्रमण**

नान्यदेवका पनाति रामसिंह सिम्रौनगढका चल्तापुर्जा शासकहरूमध्ये एक पर्छन् । यिनको जन्म ने.सं. ३०३ (वि.सं. १२४०) मा भएको थियो । गोपालवंशावलीकारले सो कुरा यसरी टिपेका छन्– "सं. ३०३ चैत्रशुक्लत्रयोदशी श्रीनरसिंहदेवस्य पुत्र श्रीरामसिंहदेव जातः । डो ठाकुर ॥" [ने.सं. ३०३ (वि.सं. १२४०) चैत्र शुक्ल त्रयोदशीका दिन श्रीनरसिंहदेवका छोरा श्रीरामसिंहदेवको जन्म भयो । डोय ठाकुर]

अभय मल्लका शासनकालमा अनिकाल, भूकम्प आदि दैवीआपद् र आन्तरिक सङ्घर्षले केन्द्र कमजोर भएको मौका छोपी यी डोयराजा रामसिंहले नेपालउपत्यकामा दुई पटक आक्रमण गरेको उल्लेख गोपालवंशावलीमा परेको छ । पहिलो आक्रमण ने.सं. ३४४ पौषमा गरिएको थियो; दोस्रो आक्रमण ३६४ मा गरिएको थियो । तर ती दुवै

---

[+] सार्नेको गल्तीले ने.सं. २५२ हुनुपर्नेमा ३५२ लेखिन गएको छ । मूलप्रतिमा २ जस्तो पनि छ । अङ्क अलि अस्पष्ट छ ।

आक्रमण असफल भएका थिए । गोपालवंशावलीकारकै शब्दमा ती आक्रमणको वर्णन यस प्रकार छ–

"सम्वत् ३४४ पौष्य शुक्ल प्रतीपदा ... गद्द चाल्वं अलापरिनन काया तल मीं डव थो कोन्हु भूमिकम्प वव ॥ गुमास ... जास्यं विसचोन्दव ॥ ... वङा रामसिह राजाटों ॥" (३४ पत्र)

"सं. ३६४ ज्येष्ठ कृष्ण प्रदीपदा खंडाधार गुंस डोय लासन वल्यम् धाद्द याङ तल म्वण्ड डचंङा द्वलआद्द रामसिंह राजास कटकः चोछे जगतब्रम्ह भाटो धाद्दस डव । लिंज जय जुव जात्रा याङ लास्यं वया राजा श्रीअनर्घमलदेवस" (३६ पत्र)

[ने.सं. ३६४ (वि.सं. १३०१) ज्येष्ठ कृष्ण प्रतिपदाका दिन खण्डाधार डाँडोमा डोयहरू लड्न आए । (उनीहरूलाई) रोकेर राखियो । धेरै मानिस काटिए । ... राजा रामसिंह लड्न आएका थिए । रोकिराख्नेहरूमा चोछेंका भारादार जगतब्रह्म पनि थिए । पछि जित भयो । (अनि) राजा श्री अनर्घ मल्लदेव जात्रा गरी फर्केर आए ।]

यस वर्णनबाट वि.सं. १३०१ मा स्वयं डोय राजा रामसिंह यहाँ उपत्यकामा लड्न आएका थिए, तर हारेर फर्के भन्ने बुझिन्छ । यसको डेढ वर्षपछि पनि फेरि डोयहरूले नेपाल–उपत्यकामा आक्रमण गरेका थिए । त्यहाँ राजा रामसिंहको उल्लेख त परेको छैन । तर सो आक्रमण पनि रामसिंहकै पालामा भएको हो भन्ने देखिन्छ । उक्त आक्रमणको वर्णन गोपालवंशावलीमा यसरी गरिएको छ–

"सं. ३६६ मार्गशिर शुक्ल सप्तमी कंपा हाथार भोयोथलिटो वव डोय फुङा, तल म्वण्ड डचंङालिं जय जुवः ॥" (३८ पत्र)

[ने.सं. ३६६ (वि.सं. १३०२) मार्ग शुक्ल सप्तमीका दिन कंपा (कपन) बाट लड्दै भायोथलि (भुंथली) सम्म आएका डोयहरू घेरिए; धेरै मानिस काटिएपछि जित भयो ।]

यहाँ उल्लिखित ठाउँ कपन र भुंथली दुवै गोकर्णभेगमा पर्दछन् । यसरी रामसिंहको सैन्य यसपाला पनि उपत्यकाभित्र पसेको तर हारेर फर्केको यताबाट देखिन्छ ।

रामसिंहका पालामा लेखिएको एक हस्तलिखित ग्रन्थ पनि पाइएको छ । विचारार्थ त्यसको पुष्पिकावाक्य यहाँ उद्धृत गरिन्छ–

"राजाधिराजगणलक्ष्मणसेनदेवस्य सम्वत् ६७ मार्गवदि ५ रवौ परमभट्टारकेत्यादि राजवलीपूर्वत् श्रीमद्रामसिंहदेवभुज्यमाने तिरभुक्तौ शाल्मलीवनपाटके लिखिता भगवती प्रज्ञापारमिता लिखिता पण्डितमालाधरेणेति"

राजा अभयमल्लको पालामा यसरी बाह्य आक्रमण हुनामा आन्तरिक सङ्घर्ष कारण रहेको थियो । यस विषयको चर्चा पनि यहाँ गर्नु उपयुक्त हुन्छ । ने.सं. ३५० देखि ने.सं. ३७५ सम्म केन्द्रमा निकै गडबडीको युग रह्यो । यसबीच पाटन, पलाञ्चोक, बनेपा, नुवाकोट आदि ठाउँमा अनेकपटक विद्रोह भए । गोपालवंशावलीमा यस कुराको उल्लेख परेको छ । उदाहरणार्थ केही घटनाको चर्चा यहाँ गर्नु वाञ्छनीय छ ।

"सम्वत् ३५० माघ शुक्ल सप्तमी यह्नं ग्वह्नन पुङा..." (३४ पत्र)

[ने.सं. ३५० (वि.सं. १२८६) माघ शुक्ल सप्तमीका दिन देउपाटनले ललितपुरमा घेरा हाल्यो ।]

यताबाट अभय मल्लका राज्यकालमा भएको आन्तरिक कलहको सङ्केत पाइन्छ । यहाँ देउपाटनले ललितपुरउपर सैनिक कारबाइ गरेको कुरा परेको छ ।

अभय मल्लका शासनकालमा सबभन्दा बढी गडबडीको केन्द्र पलांचोक रह्यो । गोपालवंशावलीकारको वर्णनबाट उक्त कुरा थाहा पाइन्छ–

"स ३५२ चेत्रादि ... थ्व क्षणस पलाखचो श्रीउदयशीहदेवस महाथ उदमाल भास तिपुर ग्वह्न भोंत पन्त । वंद्यं नवक्वाठ फनपींछिपन्त । थ्वतेस सङ धाह्न करवा, पलाखचोन । लिस्यं वङाव चण्डेस्वर चोस क्वाठ डङ व्येनाप्पाया वा काया, ... पलाखचोटोवु सोया, धूनी तल मे चोया ॥" (३९ पत्र)

"सम्वत् ३५५ चैत्र शुक्ल द्वादशी पलाखचो वानिंडोल वंट चारवारे रिंङन चोंगु ... प्रमुखन तिपुरण लुंकास्य फङ हया, वद्य भारोपनि म्वण्ड डचम्ङा पलाखचोन ॥" (३४ पत्र)

"सम्वत् ३६१ श्रावण कृष्ण चतुर्थी दिन पलाखचो जैसिंह पोहसन डङ मिं तव खङा ॥" (३३ पत्र)

"सम्वत् ३६४ अश्विनि कृष्ण द्वितीया चाङ वोन वम्ङ, पलाखचोस, अमरु महाथटो म्वण्ड डचंङा लाख साला ए याह्य कुट क्वाट ठङा लिच्छिस विजय जुव, जात्रा याङ लास्यं वया हाथार ॥" (३३ पत्र)

यसै गरी अभय मल्लका पालामा बराबर आन्तरिक गडबडी, पारस्परिक सङ्घर्ष भइ नै रहे । गोपालवंशावलीकारले यस्ता अनेक घटना टिपेका छन् । विचारार्थ केही त्यस्ता घटनाका उद्धरण यहाँ दिइन्छन्–

"सम्वत् ३६१ जेष्ठ शुक्ल अष्टमी यम्वु याट्म्बहार क्वाठ चाल्यका, यह्नं कीर्तिपाल भारोसन" (३३ पत्र)

"सम्वत् ३६२ ... पुह्नीशि कुन्हु चा, पालखुह्वि तव कितपाल भासन देश लुह्वि याङास, गामलान पिंपाल फङ ध्वस्त प्वं चाल ... लि माक्व छें पाल भारोस ज्वङा जिह्नुलिव ह्लान विया राज युदिशि: शिवज्ञान भारोस देशसन" (३३ पत्र)

"३६२ पौष्य शुक्ल पञ्चमी तिपुरण सङ्को पुङा मचाल्व, येछिमी अफह्व याङ बुङवो । थ्वयां खुह्नुलिव फनपीं श्यन्द वम्ङा ..." (३३ पत्र)

"स ३६२ जेष्ठ कृष्ण चवदश उभय भ्वन्तन चाय क्वाठ वाहन काया" (३८ पत्र)

"स ३६२ द्विराषाढ कृष्णाष्टमी गुन्दे क्वाठ गोछे क्वाठ चाल्व क्वाछे कितपाल भारोस ज्वङ हाव ढिङा ॥ श्रावन सुदि १ बन्धनमुक्ति । यथ भोत जेह्व प्वहस पिंलीया त्रिपुरण ॥" (३८ पत्र)

यसरी अभय मल्लका शासनकालमा एकातिर अनावृष्टि, अतिवृष्टि, महामारी, भूकम्प आदि प्राकृतिक प्रकोप भए भने अर्कोतिर बाह्य आक्रमण आन्तरिक कलह आदि भए । ने.सं. ३७५ आषाढ शुक्ल तृतीयादेखि एक पक्षसम्म बराबर भइरहेको भूकम्पका मारमा परी आषाढ शुक्ल अष्टमीका दिन स्वयम् राजा अभय मल्लको नै मृत्यु भएको थियो । तर सबभन्दा विचारणीय कुरा, अभयमल्लको मृत्यु हुनुभन्दा पहिले नै उनका उत्तराधिकारी जयदेवको 'पट्टबन्ध' विधान भइसकेको थियो । यस कुराको टिपोट पनि गोपालवंशावलीकारले गरेका छन् । यसको चर्चा तल जयदेवको प्रकरणमा गरिएको छ ।

**जयदेव**

ने.सं. ३७५ चैत्रसम्मका अभय मल्लका पालाका हस्तलिखित ग्रन्थ पाइएका छन् । ने.सं. ३७५ आषाढ शुक्ल तृतीयादेखि १५ दिनसम्म बराबर भइरहेको भूकम्पका मारमा परी अभय मल्लको मृत्यु भयो । तर यसभन्दा अगाडि नै अर्थात् ने.सं. ३७४ मा नै अभय मल्लका उत्तराधिकारी जयदेवको 'पट्टबन्ध' विधान भइसकेको थियो । गोपालवंशावलीकारले यस कुराको वर्णन यसरी गरेका छन्–

"स ३७४ अशुनि कृष्ण द्वितीया अश्विनि हर्षन आदीतवार ग्वलम् ढंछें आदिन पाटाबन्ध श्रीजेदेव रायस उदयात्प घटि छ राजस्यम्रगी समूह ङत ॥ सुनोलापत्र छत्रः हीराधार छत्र न्हकनछत्र । कनक दण्डछत्र, शीहध्वज ॥ ढोक २ खिजा ८ तव काहलपा १६ ट्वाक काहल २४ छत्रधर ३ गुरीछेश

> राजासन खण्ड खण्डागाह ल्हाय । पाटका टाये: भ्वत भद्दीद्विसके । गोतीपनिस्य कोटाये ॥" (३९ पत्र)

[ने.सं. ३७४ (वि.सं १३११) आश्विन कृष्ण द्वितीया आदित्यवार अश्विनीनक्षत्र हर्षणयोगका दिन देउपाटन, ढंछें आदिले उदयदेखि ६ घडी बितेपछि श्रीजयदेव राजाको पट्टबन्ध गरियो । राजसामग्री सम्पूर्ण (पाँचै) राखिएका थिए । सुनौलापत्र छत्र, हीराधार छत्र, न्हकनछत्र, कनकदण्डछत्र सिंहध्वज । ढोक २, खिंजा ८, ठूला काहल १६, ट्वाक काहल २४, छत्रधर ३ । गुरीछेंमा राजाद्वारा ढालतरबार राख्ने कार्य भयो । बनेपाकी भद्विद्वी (देवी) कहाँ पताका टाँगियो । गोतियाहरूले कोटाय् गरे ।]

यसरी अभय मल्ल जीवित छँदै जयदेवको राजकीय पट्टबन्ध गर्ने काम भएको थियो भन्ने यताबाट बुझिन्छ । यसबाट यसताका आन्तरिक कलह पराकाष्ठामा पुगेको थियो भन्ने सङ्केत पाइन्छ । यसको लगत्तैपछि जयदेवले विद्रोह गरेको उल्लेख पनि पाइन्छ–

> "स ३७४ अश्विनि कृष्ण चतुर्दशी चा, नेपिं टोखा भ्वन्त श्रीजयदेव प्वहसन क्वाठस चोङ्ग्व लुं बिस्यं कुलन काया ।" (३८ पत्र)

गोपालवंशावलीकारले "राजा श्रीजयदेव वर्ष २ मा ८ तस्य राजे बृहद्भूमिचालनं महासन्तापम् महा(मा)रि दुर्भिक्ष प्रजा क्षय भवति" भनी लेखेका छन् । यसरी राजा जयदेवको राज्यकाल तीन वर्ष पनि रहेन । दुई वर्ष चानचुनको यस शासनकालमा पनि एकातिर भूकम्प आदि दैवीआपद् आइपऱ्यो भने अर्कोतिर गृहकलह पनि स्पष्ट रूपमा देखापऱ्यो । अभय मल्लका पालामा भएको केन्द्रको कमजोरीलाई यसले झन् बढायो ।

जयदेवको शासनकाल छोटो भएको र गडबडीपूर्ण पनि भएको हुनाले उनका पालाका हस्तलिखित ग्रन्थ कम पाइएका छन् । अभिलेख त पाइएको नै छैन । गोपालवंशावलीकारले गरेको जयदेवको वर्णनको चर्चा गर्नुभन्दा पहिले उनका पालाका हस्तलिखित ग्रन्थको चर्चा गरिन्छ–

> "राजाधिराजपरमेश्वरश्रीजयदेवराज्ये सम्वत् ३७७ ज्येष्ठशुदि १५ ॥" (कारण्डव्यूह)

अर्को ने.सं. ३७७ भाद्रको हस्तलिखित ग्रन्थमा पनि जयदेवको चर्चा परेको छ । यताबाट जयदेवले दुई वर्ष चानचुन राज्य गरे भन्ने गोपालवंशावलीकारको भनाइको पुष्टि हुन्छ ।

ने.सं. ३२४ कार्तिक कृष्ण एकादशीका दिन यी जयदेवको जन्म भएको हो । राजा हुँदा जयदेव पचास वर्ष नाघिसकेका थिए । तैपनि यिनले शासनको बागडोर राम्ररी सम्हाल्न सकेका थिएनन् । यिनको शासनकालमा

भएका आन्तरिक गडबडीको चर्चा गोपालवंशावलीकारले यसरी गरेका छन्–

"सम्वत् ३७५ श्रावणकृष्ण सप्तम्म्या भरणि अङ्गारवार पुह भारोसनो, काय भारोसनो, खुस्यं वंङा श्रीजयशीहमलदेव प्वहस पिलिया ॥" (३८ पत्र)

"स ३७६ वेशाष कृष्ण द्वितीया जिलावुक्वटों श्रीजेदेव राजास वो ह्वङयो ग्वह्न याङ तस्यं श्रीजयशीहदेव प्वहस ख्वपं दुंवीया दिवस ॥" (३७ पत्र)

"स ३७६ श्रावण शुक्ल अष्टमी चा भोन्त श्रीजयभीमदेव प्वहसन श्रीयुराभारसन भण्डसालस जाया, तव २ मिं पिंलिस्यं हङा, तल वस्तु लुह्नपं काया, यंवु यङ्गल वो युरा भारसवो छिवी तिपुर राजकुल वो मनिगल वो छिंवी त्यंखाशीधारे लोडव जासन लिव ॥"(३७ पत्र)

"स ३७६ अशुनि शुद्धि चतुर्थी वहारक्वाठ कुल याङा, भ्वंत श्रीजयभीमदेवस यूरा भारस पिल्लीस्यं हया ॥ स्वन्हुलिव श्रीजशिमाल प्वहस्यं नन्दल लुह्निपा ॥" (३७ पत्र)

"स ३७६ माघ कृष्ण तृतीया चा निपीं क्वाठ काया श्रीजयदेव प्वहसन सन्तीलिकाया श्रीजयभीमदेवसन चोछें आनन्द भाटो चेस्यं स्याङा" (३८ पत्र)

"स ३७७ अश्विनि कृष्ण द्वादशी श्रीजयशीहमलदेव प्वहसन पींक्वाठ दुम्बीया दिनः भ्वन्त श्रीजयभीमदेव युरा भारसन कासनता, लि कास्यम् ॥" (३७ पत्र)

यताबाट जयदेवको शासनकालमा उनका उत्तराधिकारी जयभीमदेव र जयशीह मल्लदेवले राजा जयदेवलाई मिची आफ्नो प्रभाव बढाउन थालेको स्पष्ट देखिन्छ ।

फेरि अर्को विचारणीय कुरा, जयदेवको 'पट्टबन्ध' समारोह पहिलोपटक अभय मल्ल जीवित छँदै भएको थियो । फेरि आन्तरिक गडबडीका बेला पनि पछि दुईतीनचोटि 'पट्टबन्ध' समारोह भएको वर्णन गोपालवंशावलीकारले गरेका छन् । जस्तै–

"स ३७६ द्विराषाढ शुक्ल द्वादशी श्रीजयदेवराज मनंटुठिस नागपटाबन्धन विधि विधानः । नह्नी प्याखन माल्व, साल्य– ना शालोठेमाल्व । थ्वया सम्बछ्र श्रावण शुक्ल द्वादशी श्रीजयदेवराजसवुं एन्दलसं पटाबन्ध जुरोम् उदयात्पर घटि १८ ॥" (३९ पत्र)

"स ३७७ मार्गशिर पूर्णिमा मृगशिर आदीतवार उद्यात्पर घटि १९ वृष लग्न श्रीजयदेव राजास ग्वल्वं राजलंखुस मनसर पटबन्ध याङा विधान यावम् प्रजा भोद्द बियमाल्व ... ओ बेरस थ्व गोतपनिस्यं द्दडोकोलाय टेवः महाथसालपी, चाम्रगाहपी, खण्डागाहपी पतीहारपि कठियापी उपाध्याछि जोतिकछि कद्दिहामाछि देवसछि थ्वते वंसाद्दस ओय ॥ पाटन छुक्व राजास सूतक चोङे राजवाशस ॥ राजास टोटवाढ जुकाले, प्रजान ल्हुये गोत्रदान जुरों ॥" (३७ पत्र)

यसरी जयदेवले आफ्नो प्रभुत्व कायम रहोस् राष्ट्रमा शान्ति रहोस्; विघ्नबाधा हटोस् भन्ने अभिप्रायले प्रमुख तीर्थस्थलमा अनेक किसिमले 'पट्टबन्ध' समारोह गराएका थिए भन्ने यताबाट देखिन्छ ।

**जयभीमदेव**

जयदेवपछि जयभीमदेव गद्दीमा बसे भनी गोपालवंशावलीकारले लेखेका छन् । "पुष्पाभिसेक राजा श्रीजयभीमदेव वर्ष १३ मा ३ तेन पूर्व्वशिखर नारायनस्य भण्डार ताम्रसंखलीत्यादि ग्रशिता । तेन प्रवाहिता पूर्व्व-राजधारणीचुतेन कृतम् । तेन पञ्चपरीशामा विध्वंशीकृतम् अन्नसुलभम् ।" (२६ पत्र) यसरी गोपालवंशावलीकारले जयभीमदेवलाई असल राजाका रूपमा चित्रित गरेका छैनन् । उनका पूर्ववर्ती राजाका पालामा जस्तो भीमदेवका पालामा प्राकृतिक प्रकोप पनि भएको थिएन; अन्न सुलभ भएको थियो । तर स्वयम् जयभीमदेव नै लोभी प्रकृतिका हुनाले उनले 'देवस्व' मास्ने कार्यसमेत गरेका थिए भन्ने कुरा गोपालवंशावलीकारको माथिको वर्णनबाट सङ्केत पाइन्छ । हुन पनि यसताकाका शासकहरू राष्ट्रको हितभन्दा आफ्नो स्वार्थतिर नै बढी ढल्केको हामी पाउँछौं । यी जयभीमदेवले सत्तामा आउनुभन्दा पहिले नै अनेकपटक लुटपाट मच्चाएको उल्लेख माथि उद्धृत गोपालवंशावलीकारको वर्णनमा परिसकेको छ । यही प्रवृत्तिअनुसार आफू गद्दीमा बस्दा पनि उनले चाँगुनारायणको भण्डार नास्नु आदि कार्य गरेका देखिन्छन् । यसरी यसताका केन्द्र अनेक दृष्टिले कमजोर बन्दै गइरहेको आभास पाइन्छ ।

जयभीमदेवका पालामा दुई हस्तलिखित ग्रन्थ र एक अभिलेख प्राप्त भएका छन् । विचारार्थ तिनको उद्धरण यहाँ उल्लेखयोग्य छ ।

(१) "अशीत्यधिकसंयाते संवत्सरशतत्रये ।
मासि चैत्रे सिते पक्षे पञ्चम्यां भृगुवासरे ।
महामताच्चिंःपीयूषं श्रीमल्लक्ष्मीमतं हितम् ।
धीमतः सङ्ख्यपालस्य पुण्यज्ञानविवृद्धये ।
कायस्थोदयहर्षेण हर्षेण लिखितं द्रुतम् ॥...

महाराजाधिराजपरमेश्वरपरममहेश्वरपरमभट्टारकश्रीमज्जयभीम-देवराज्ये ॥

(२) "नेपालिक सम्वत् ३८१ श्रावणकृष्णएकादश्याम् पुष्यनक्षत्रे वरियानयोगे सोमदिने ... । राजाधिराजपरमेश्वरश्रीमद्राजा जय-भीमदेवस्य विजयराज्ये ।

(३) **अभिलेख**

१. ॐ नमः ॥ शून्याय मोहांधकारमग्नानाम् जनाणां ज्ञानरश्मभि कृतमूधरनं जेन तन्नममि शिवभास्करम् ॥

२. सम्वत् ३८१ पौसीशुक्लदिवाअष्टम्याम् श्रीश्रीपरमेश्वरपरम-श्रीश्रीभीमदेवस्य विजयराज्ये । श्रीफ–

३. नपिंगविषयाधिपतिमहासामन्तश्रीजेतरामजीवस्य नगरेतिः ॥ पविलिटोलकाधिवाशी यमभलछां

४. दानपति अजशीहकेन कृत भवतिः ॥ देवापिः ॥ पितरोपिः ॥ जीवापि शमस्तानां दान कृ (त) भवतिः ॥ शुभ ॥

[सूर्यलाई नमस्कार । अज्ञानरूपी अन्धकारमा डुबेका मानिसहरूलाई ज्ञानरूपी किरणले उद्धार गर्ने, शिव (कल्याण गर्ने) स्वरूप सूर्यलाई ढोग्दछु ।

ने.सं. ३८१ (वि.सं. १३१७) पौष शुक्ल अष्टमीका दिन श्रीश्रीपरमेश्वर परम(भट्टारक) श्रीश्री जयभीमदेवको विजयराज्यमा ।

श्रीफनपिंग (फर्फिङ) विषयका अधिपति महासामन्त श्री जैतरामजीवले (पालन गरिएको) सहरका यबिलि टोलमा बस्ने यमभलछेंका दानपति अजसिंहले यो जलद्रोणी बनाएका हुन् । यस दानबाट देवता, पितृ र अरू सारा प्राणीलाई आनन्द होस् । शुभ होस् ।]

"यदा नेपालभूपाल जयभीमे विभावति ।
रसमङ्ग(ल)संयुक्त बह्नि सवन्तदापयोः ।
कार्तिकमासे सिते पक्षे पञ्चम्यां गुरुवासरे ।
कायस्थोदयहर्षेण लिखितं द्रुतम् ॥"

यी तात्कालिक प्रमाणहरूबाट यसताका जयभीमदेव शासन गर्दै थिए भन्ने सिद्ध हुन्छ । गोपालवंशावलीमा यी जयभीमदेवको शासनकालमा घटेका केही घटना टिपिएका छन् । अब तिनको चर्चा यहाँ गरिन्छ ।

"स ३७८ चैत्र शुद्धि त्रयोदशी हस्त बुधवार श्रीजयभीमदेव राजासवो श्रीजयशीहमलदेवजु व राजास वो उभेसन पलखचोदेश तेल चोंङा, चा धाह्न याङाव बुङवो मीं येच्छि शिक्वम्" (३६ पत्र)

"स ३७९ कार्त्तिक कृष्ण दितीया श्रीजयशीहमलदेवजु व रायसन दुसंत्रकं चायौक्वाठ काया सनियलसकुलाह तेजभारो राजकुल देकव, जसव्रम राजा, लखिंधर रावुत, माधव भारो ओ जगत जसमाल भारो थ्वतेस्यनु बल तङा ॥" (३६ पत्र)

"स ३७९ कार्तिक कृष्ण अमावशी ग्वलंस केलासपुजा याङा कसंदेश भाक्व ब्राम्मनसन: ॥" (३६ पत्र)

गोपालवंशावलीका यी वर्णनअनुसार जयभीमदेवका शासनकालको सुरुमै पलाञ्चोकले विद्रोह गऱ्यो जयभीमदेवले सो विद्रोह स्वयम् गई दबाउने काम गरे; यस काममा जयभीमदेवलाई जयशीह मल्लले मद्दत गरे । त्यसबेला जयशीह मल्ल पनि राजासरह प्रभावशाली थिए; उनलाई पनि गोपालवंशावलीकारले यसैबेला 'राजा' नै भनेका छन् । यसरी यसबेला एक किसिमको 'उभयराज्य' (द्वैराज्य) चलेको थियो भन्ने यताबाट बुझिन्छ ।

जयभीमदेवले एकातिर देवस्व मासेका थिए भने अर्कोतिर देउपाटनमा ने.सं. ३७९ मा अर्थात् आफ्नो शासनकालको सुरुमा 'कैलाशपूजा' गराएका थिए भन्ने थाहा पाइन्छ ।

**जयसिंह मल्लदेव**

जयभीमदेवपछि जयसिंह मल्लदेव गद्दीमा बसे; उनको पुष्पाभिषेक गरिएको थियो; उनले दुई वर्ष ७ महिनामात्र शासन गरे पनि उनको शासनकालमा जनताले सुख पाए; अनेक धर्मकार्य भए भन्ने कुरा गोपालवंशावलीकारले यसरी लेखेका छन्– "पुष्पाभिषेक राजा श्रीजयशीहमल्लदेव वर्ष २ मा ७ तेन प्रजा अपीडितम्. राष्ट्र सुखीभवति ॥ श्रीपशुपति भटारकस्य सुवर्ण्णमेखला प्रढौकितम् । पुन: अनेकार्थरत्नघटितचतुर्क्कण्ठी कोषजात्रा कृतम् संप्रदत्त कृतम् ॥ तत्र देशानामने सत्र दातव्यं सर्व्वदा ॥" यसबाट जयसिंह मल्लदेवले राष्ट्रलाई सुखी बनाएको, पशुपतिनाथलाई सुनको मेखला चढाएको, फेरि अनेक किसिमका रत्न जडिएको चतुर्कण्ठीकोष चढाई जात्रा गरेको, राष्ट्रका नाउँमा सधैं सदावर्त्त दिने प्रथा चलाएको कुरा थाहा पाइन्छ ।

यी जयसिंह मल्ल ने.स. ३४९ (वि.सं. १२८६) वैशाखमा जन्मेका हुन्; उनका बाबु जगतनेक मल्लदेव हुन् । गोपालवंशावलीकारले यो कुरा यसरी लेखेका छन्– "स ३४९ वैशाषकृष्णनवमी श्रीजगतनेकमलदेवस्य पुत्र श्रीजयशीहमलदेव जात" (३५ पत्र) यसरी गद्दीमा बस्दा जयसिंह मल्ल बयालीस वर्षका थिए । तर गद्दीमा बस्नुभन्दा पहिलेदेखि नै यी जयसिंह मल्ल प्रभावशाली र चल्तापुर्जा भई निस्केका थिए । जयभीमदेवकै पालामा यिनी एक किसिमले संयुक्तशासकका रूपमा रहेका थिए भन्ने कुराको चर्चा माथि गरिसकिएको छ । जयभीमदेव आफ्ना नीतिले गर्दा अलि बदनाम

छन् भने यी जयसिंह मल्ल भने आफ्ना कार्यले गर्दा केही यशस्वी रहेका छन् ।

जयसिंह मल्लको कार्यकाल छोटो हुँदा यिनका पालाको हस्तलिखित ग्रन्थ एउटामात्र पाइएको छ–

> "सम्वत् ३९१ अश्विनि ...(द)शम्यां तिथौ अङ्गारदिने लिखितमिति । राजाधिराजपरमेश्वरश्री(जयसिं)हमल्लदेव-कारितम् । श्वक्ववेहारश्रीभिक्षुदेवमना लिखितं"

यसरी जयसिंह मल्लको प्रभुत्व यस तात्कालिक सामग्रीबाट प्रमाणित हुन्छ । तर जयसिंह मल्लको हातबाट अनन्त मल्लको हातमा प्रभुत्व कसरी गयो; बीचमा के घटना घट्यो, बुझ्न सकिएको छैन । यी जयसिंह मल्लको मृत्यु ने.सं. ४०८ मा मात्र भएको थियो । यो कुरा "स ४०८ मार्गशिर शुक्ल प्रदीपदा श्रीजयसीमलदेवस अस्त दिनः" (४० पत्र) भनी गोपालवंशावलीकारले लेखेका छन् । तर अनन्त मल्ल भने ने.सं. ३९५ मा गद्दीमा बसिसकेका थिए । गोपालवंशावलीकारले बीचको घटनाबारे किन बोलेनन्; यो बुझ्न सकिएको छैन ।

गोपालवंशावलीकारले जयसिंह मल्लका छोराहरूका जन्म, मृत्युको उल्लेख गरेका छैनन् । तिनमध्ये एक जनाको चर्चा यहाँ गर्नु उपयोगी देखिन्छ । यी जयसिंह मल्लका छोरा जयतुङ्ग मल्ल हुन् । तिनको जन्ममितिको उल्लेख गोपालवंशावलीकारले यसरी गरेका छन्- "स ३८६ मार्गशिरकृष्णषष्ठी पूर्व्वाषाढनक्षत्र प्रीतियोग चन्द्रवार श्रीजयसीहदेवस्य पुत्र श्रीजयतुंगमलदेवस्य जातः अस्त वर्ष ४६ मा ५ जेष्ठशुक्लषष्टमी आदीतवार बेला संध्याबेला ॥" यी जयतुङ्ग मल्लका छोरा जयरुद्र मल्ल हुन् । युवक रुद्र मल्लले तात्कालिक राजनीतिमा महत्त्वपूर्ण भूमिका खेलेका थिए । यसको चर्चा तल यथास्थानमा गरिने छ ।

**अनन्त मल्ल**

जयसिंह मल्लपछि अनन्त मल्ल गद्दीमा बसे; यिनले ३२ वर्ष १० महिना राज्य गरे भन्ने कुरा गोपालवंशावलीकारले लेखेका छन्– "पुष्पाभिषेक राजा श्रीअनन्तमलदेव वर्ष ३२ मा १०" । यसरी अनन्त मल्लले ने.सं. ३९५ देखि ने.सं. ४२८ सम्म शासन गरेको देखिएको छ । हस्तलिखित ग्रन्थ आदि तात्कालिक सामग्रीबाट पनि उक्त कुराको पुष्टि हुन्छ । विचारार्थ अनन्तमल्लका पालाका केही हस्तलिखित ग्रन्थका पुष्पिकावाक्य यहाँ उद्धृत गर्नु उचित हुन्छ –

(१) इषुनाथ तथा वह्नि सम्वत्सरे गते सति ।
मासे चैत्रशित्ये पक्षे नवम्यां बुधवासरे ॥

महाराजाधिराजपरमेश्वरपरमभट्टारकश्रीश्रीमदनन्तमल्लदेवस्य विजयराज्ये द्विजवरश्रीधर्माधिकारजसब्रह्मस्य पुस्तक ...

(२) सम्वत् ३९८ भाद्रवशुक्लएकादश्या । राजाधिराजपरमेश्वरश्रीअनन्तमल्लदेवस्य विजयराजे । पाङ्गाग्रामाधि[illegible]सिन द्विजशिरपतिकस्य पुस्तकसिद्धम् ।

(३) सम्वत् ३९९ फाल्गुणशुक्लनवम्यायां लिखितम् । राजा[illegible]राजश्रीश्रीअनन्तमल्लदेवस्य विजयराज्ये ।

(४) ... श्रीमत्पशुपतिस्थाने दक्षिणस्या दिशाश्रित । दैवज्ञजैतशीहेन लिखितं स्वात्मभव । सम्वत् ४०० भाद्रपदशुक्लचतुर्थ्यां शु[illegible]वासरे श्रीपशुपतिस्थाने । श्रीमद्अनन्तमल्लदेवस्य विजयराज्ये श्रीराजामण्डल्यां दैवज्ञस्य ...

(५) महाराजाधि[illegible]जपरमेश्वररघुवंशतिलकश्रीमद्अनन्तमल्लदेवस्य राज्ये लिखापितमिति । सम्वत् ४०२ भाद्रपदशुक्लपञ्चम्यान्तिथविति ।

(६) श्रीनेपालमण्डलकाष्ठमण्डपाधिवाशिन रत्न उपाध्यायेन लिखितम् । श्रेयोस्तु । सम्वत् ४०३ फाल्गुणशुक्लपूर्णमास्याम् शनिश्चरवासरे । श्रीमहाराजाधिराजपरमेश्वरपर[illegible]भट्टारकश्रीश्रीअनन्तमल्लदेवस्य विजयराजे लिखितं पुस्तकमिदम् ।

(७) श्रीललितपुर्या महानगर्यां श्रीनवम्लके श्रीमद्इन्द्रियदेवराज्ञ संस्कारित श्रीययमनोहरवर्ण्णमहाविहाराधिवाशी गृहाश्रमभिक्ष्वाचार्यकायस्थसुगतरक्षितेन लिखितमिदम् ... श्रीनेपालहायण ४०४ फाल्गुणीशुक्लपक्षे त्रियोदश्यान्तिथौ मघ[illegible]क्षत्रे धृतियोगे बृहस्पतिदिने लिखितेति । श्रीमतः राजाधिराजरघुवंशावतार श्रीश्रीमद्अनन्तमल्लराजे लिखितमिति ॥

(८) सम्वत् ४१७ फाल्गुनकृष्णदशम्यां मङ्गलवासरे लिखनं समाप्तमिदमिति राज्ये श्रीमद्अनन्तमल्लदेवस्येति ॥

(९) श्रीमदनन्तमल्लदेवविजयराज्ये । सम्वत् ४२३ माघ(कृष्ण)चतुर्थ्यायां बुधवासरे लिखितमिदम्

(१०) सम्वत् ४२८ फाल्गुनकृष्णप्रतिपद्यायां तिथौ चित्रनक्षत्रे ध्रुवयोगे शनिश्चरवासरे लिखितमिति ॥ राजाधिराजपरमेश्वरश्रीश्रीमदनन्तमल्लदेवस्य विजयराज्ये श्रीयं(ब) महानगरश्रीशातीगलकेयूरथ्यायां द्वकोच्छवास्तव्य दैवज्ञश्रीजसधवलदर्शनेन लिखितम् ।

यी तात्कालिक प्रमाणबाट ने.सं. ३९५ देखि ने.सं. ४२८ सम्म अनन्त मल्लले राज्य गरे भन्ने सिद्ध भएको छ ।

अनन्त मल्लका बाबु राजदेव हुन्; अनन्त मल्ल ने.सं. ३६६ वैशाखमा जन्मेका थिए भन्ने कुरा गोपालवंशावलीकारले यसरी लेखेका छन्–

> "स ३६६ वैशाषशुक्लपञ्चमी श्रीराजदेवस्य पुत्र श्रीअनन्तमलदेवस जातः राजभोग वर्ष ३५ (३२) मा ११ श्रावणकृष्णत्रयोदशी अस्तदिनः ॥" (३५ पत्र)

यसरी गद्दीमा बस्दा अनन्त मल्ल ३८ वर्षका थिए भन्ने देखिएको छ। बत्तीस वर्षको लामो कालसम्म अनन्त मल्लले शासन गरे पनि उनको शासनकालमा देशमा सुखशान्ति, सुव्यवस्था रहेन । एक किसिमको गृहकलहजस्तै भएको हुँदा केन्द्रबाट गुहार मागेकाले पश्चिमबाट खसहरूले र डोय (तिरहुते)हरूले उपत्यकामा आक्रमण गरेका हुनाले केन्द्रको शासन झन्झन् शिथिल हुन थालेको थियो । गोपालवंशावलीकारको शब्दमा "तेन कृत दम्भव्यवहारेण प्रजा कष्टीभवति" अर्थात् अनन्त मल्लले चलाएको 'द्रम्म' (तात्कालिक मुद्रा) ले गर्दा प्रजाहरूलाई कष्ट भयो भन्ने रहेको छ । एकातिर राजनैतिक अस्तव्यस्तता रह्यो भने अर्कोतिर आर्थिक कष्टको पनि त्यसबेला जनताले सामना गर्नुपरेको थियो ।

अब अगाडि बढ्नुभन्दा पहिले राजपरिवारमा देखापरेको आन्तरिक कलहको चर्चा गर्नु उचित हुन्छ ।

**युवराज जयादित्य**

एक वंशका 'राजा' हुँदा अर्को वंशकालाई "युवराज" बनाउने त्यसबेलाको 'उभयराजकुल' को एकान्तर पद्धतिले गर्दा अनन्त मल्ल गद्दीमा बस्दा जयादित्यदेव युवराज बनाइएका थिए । युवराज जयादित्यदेव राजा अनन्त मल्लभन्दा आठ वर्षले जेठा थिए । राजाभन्दा युवराज जेठा भएको यो उदाहरण केही अनौठो छ तापनि यो तात्कालिक 'उभयराजकुल' व्यवस्थाको परिणाम हो । गोपालवंशावलीकारले राजा अनन्त मल्ल र युवराज जयादित्यदेव दुवैको जन्ममितिको उल्लेख गरेका छन् । तिनमा अनन्त मल्लको जन्म ने.सं. ३६६ मा भएको हो; त्यसको चर्चा माथि गरिसकिएको छ । जयादित्यदेवको जन्मचाहिँ ने.सं. ३५८ मा भएको हो; उनी राजा जयभीमदेवका छोरा हुन् । यस कुराको उल्लेख गोपालवंशावलीकारले यसरी गरेका छन्– "सं. ३५८ ज्येष्ठशुक्लप्रदीपदा श्रीजयभीमदेवस्य पुत्र श्रीजयादीतयुवरायस जात ॥" (३५ पत्र) यसरी युवराज जयादित्यदेव राजा अनन्त मल्ल भन्दा आठ वर्षले जेठा हुनाले राजकाजमा जयादित्यदेवको केही प्रभाव जमेको थियो । तर आफ्नै सहोदर भाइ जयानन्ददेवसँग नै जयादित्यदेवको मेल हुन सकेको थिएन । आफ्नो प्रभाव बढाउने काममा सहोदर आनन्ददेवबाट बाधा पर्ने सम्भावना देखी जयादित्यदेवले जयानन्ददेवलाई ने.सं. ४०१ तिर कैद गरी पलाञ्चोकमा थुनेर राखे । बाह्र वर्षभन्दा बढी समयसम्म जयानन्ददेव पलाञ्चोकमा थुनामा परे । गोपालवंशावलीकारले यस कुराको वर्णन यसरी गरेका छन्– "जौरा श्रीजयादित्यदेवेन सहोदर श्रीजयानंददेव निगडबंधनं करोतिः वर्ष १२

मा ३" (२६ पत्र) । ने.सं. ४१३ (वि.सं. १३४९) फाल्गुनमा युवराज जयादित्यदेवको मृत्यु भयो । यसको पाँच महिनापछि आनन्ददेव बलैले कैदबाट उम्की बाहिर निस्के । यो कुरा थाहा पाई जयादित्यदेवका छोरा जयशक्तिदेव पलाञ्चोकमा पुगे; अनि काका आनन्ददेवलाई नेल ठोकी फेरि कैदमा हाले । गोपालवंशावलीकारले उक्त कुरा यसरी उल्लेख गरेका छन्-

"स ४१३ फाल्गुण शुक्ल अष्टमी श्रीजयादीतदेवस अस्त" (४४ पत्र)

"स ४१३ श्रावण शुक्ल त्रयोदशी चा पलाखचोस बंधनस च्वोङ्गव जयानन्ददेवस थव बलन मुक्ति जुवटोम् । लिचोस जयशक्तिदेवश पलाखचो वंङ ल्हंङवु निवद्धकं ताटों" (४० पत्र)

जयादित्यदेवका छोरा जयशक्तिदेव यसबेला १७ वर्षका युवक थिए । ने.सं ३९६ मा उनको जन्म भएको थियो । गोपालवंशावलीकारले यो कुरा यसरी टिपेका छन्- "स ३९६ वेशाषकृष्णषष्ठी श्रीजोराजः जयादीतदेवस्य पुत्र श्रीजयशक्तिदेवस जातः । अस्त वर्ष ३९ मा ५ कार्त्तिक शुक्ल षष्ठी" (३६ पत्र) । १७ वर्षका मात्र भए पनि जयशक्तिदेवले जयानन्ददेवलाई फेरि नेल ठोकेको कुरा माथिको उद्धरणले देखाउँछ । यसपछि आनन्ददेव कैदबाट कहिले र कसरी छुटे; त्यसको उल्लेख गोपालवंशावलीकारले गरेका छैनन् । तर पछि रुद्र मल्लको प्रभावले जयानन्ददेव गद्दीमा बसेका थिए । यसको चर्चा तल यथास्थानमा गरिनेछ ।

यसबेला राजपरिवारमा भित्रभित्र कलह चलिरहेको थियो भन्ने सङ्केत उपर्युक्त घटनाबाट पाइन्छ । गोपालवंशावलीमा उल्लिखित अरू घटनाबाट उक्त कुराको पुष्टि हुन्छ । यस्ता आन्तरिक कलहबाट अरूले फाइदा उठाउनु स्वाभाविक छ । त्यसैले यसताका पश्चिमका खसहरू र दक्षिणका डोयहरूले नेपालउपत्यकामा अनेकपटक आक्रमण गरेका थिए । यसबारे अलिकता प्रकाश पार्नु समुचित देखिन्छ ।

**खस राजा जितारि मल्लको आक्रमण**

विक्रमको बाह्रौं शताब्दीको सुरुतिर कर्णालीप्रदेशमा खसराजा नागराजले एक स्वतन्त्र राज्य खडा गरेका थिए । कर्णालीप्रदेशको यस खसराज्यमा एक से एक योद्धा शासक पैदा भएका थिए । तिनमा काचल्ल, अशोकचल्ल, जितारि मल्ल आदि उल्लेखनीय थिए । काचल्ल र अशोकचल्लले सैन्यशक्तिको भरमा आफ्नो राज्यक्षेत्र पश्चिम र दक्षिणतिर निकै विस्तार गरे । काचल्लले वि.सं. १२८० मा कर्तुपुर (कुमाउँ, गढवालभेग) जितेका थिए । राज्यक्षेत्र विस्तार गर्ने यस अभियानलाई अशोकचल्लले पनि जारी राखे । अशोकचल्लपछि गद्दीमा बस्ने जितारि मल्ल पनि त्यत्तिकै योद्धा भई निस्के । पूर्वजहरूले सिंजाका पश्चिम, पश्चिमोत्तर र दक्षिणतिर आफ्नो राज्यक्षेत्र विस्तार गरेका थिए । जितारि मल्लले चाहिँ पूर्वतिर आफ्नो प्रभाव

फैलाउने प्रयास गरे । हुन त पाएदेखि काचल्ल, अशोकचल्लहरूले पनि पूर्वतिर आफ्नो प्रभुत्व फैलाउन चाहेका थिए होलान् । तर त्यसबेला केन्द्र त्यति कमजोर थिएन । जितारि मल्लको समयमा भने केन्द्रमा भित्रभित्र एक किसिमले गृहकलह नै सुरु भइसकेको थियो । उता सिम्रौ गढका डोयराजाहरू केन्द्रका राजकाजमा प्रभाव फैलाउने प्रयासमा थिए । यसो हुनाले जितारि मल्लले पूर्वतिर बढ्ने अवसर गुमाएनन् ।

खसराजा जितारि मल्लले लगातार तीनपटक नेपालउपत्यकामा आक्रमण गरेका थिए । यसको वर्णन गोपालवंशावलीकारले गरेका छन् । पहिलो आक्रमण वि.सं. १३४४ पौषमा भएको थियो । खससैन्य पूर्वतिर बढ्दै आई नेपालउपत्यकाभित्र पसेपछि पहिलो मुकाबिला स्वयम्भूको डाँडोनिर भएको देखिन्छ । योभन्दा पहिले नुवाकोट आदि ठाउँमा पनि शायद खससैन्यसँग मुकाबिला भएको हुन सक्छ । तर गोपालवंशावलीकारले यसको उल्लेख गरेका छैनन् । स्वयम्भूको डाँडोनिर चाहिँ निकै लडाइँ भएको थियो । यस लडाइँमा आठ सय जति जितारि मल्लका खससैन्य हताहत भए । तैपनि जितारि मल्ल पछि हटेनन् । आखिर यहाँका बासिन्दाहरूले जितारि मल्लको सैन्यसँग हाकाहाकी नलडी उनीहरूलाई कायल पार्न अर्कै बाटो लिए । त्यसबेला नेपालउपत्यकामा अरू किसिमका दुर्ग (किल्ला) का साथसाथै वनदुर्गहरू पनि निकै थिए । बाहिरबाट हमला हुँदा अरू किल्ला तोडी शत्रु सहरबस्तीभित्र पस्न समर्थ भएमा यहाँका सारा बासिन्दाहरू रसद लुकाई यस्तै वनदुर्गभित्र पस्दथे । जितारि मल्लसँगको यस युद्धमा पनि नेपालउपत्यकावासीहरूले आत्मरक्षाको यही बाटो लिए । यसरी रसदपानी नपाउँदा जितारि मल्लको सैन्यलाई धेरै दिन यहाँ टिक्न गाह्रो भयो र जितारि मल्ल स्वदेश फर्केर गए । यति भएपछि यहाँका बासिन्दाहरू फेरि पहिलेजस्तै आ-आफ्ना ठाउँमा रहन लागे ।

यसको चौध महिनापछि वि.सं. १३४५ फाल्गुनमा फेरि दोस्रोपटक जितारि मल्लले नेपालउपत्यकामा आक्रमण गरे । यसपालिको जितारि मल्लको आक्रमण पहिलो आक्रमणभन्दा भयङ्कर थियो । यहाँका किल्लाहरू तोड्नका लागि खससैन्यले गाउँका गाउँ आगो लगाइदियो । यति गरी यहाँका प्रसिद्ध देवता पशुपतिनाथ, स्वयम्भूनाथ, रातो मछिन्द्रनाथको दर्शनपूजन गरी जितारि मल्ल आनन्दसँग फर्केर गए ।

यसको एक वर्षपछि वि.सं. १३४६ फाल्गुनमा तेस्रोपटक जितारि मल्लले नेपालउपत्यकामा आक्रमण गरे । नुवाकोट कब्जा गरी उनी देउपाटनमा पसे । उनी यसभन्दा अगाडि बढ्न सकेनन् । अनि यसपालि पनि जितारि मल्लको सैन्यले गाउँका गाउँ आगो लगाइदियो । एक महिनासम्म जितारि मल्लको सैन्य पाटनमा किल्ला घेरेर बस्यो । परन्तु किल्ला फुटेन । यसपछि के घटना भयो, सो थाहा पाइएको छैन ।

अब उपर्युक्त कुरा गोपालवंशावलीकारकै शब्दमा सुनौं जुन यस प्रकारको छ–

"जौरा श्रीजयादित्यदेवेन, सहोदरश्रीजयानंददेवनिगडबंधनं करोति: वर्ष १२ मा ३ पश्चात् खशिया ववः ॥ राजा जयतारि प्रथम प्रविष्टः सम्वच्छर चारि सय आठ पौषमासे साह्मगुस्थाने खशिया अबूठ सय पातयित्वा, राष्ट्र सर्व्व वने सेवितम्. खशिया तेन पलायितम्. लोक स्वस्थेन स्वस्थानस्थितम् ॥ तस्य सम्वच्छर प्रवर्त्तते फाल्गुण मास शुक्ल त्रयोदशी । पुनः द्वितीय जयतारी प्रविष्टः ॥ ग्रामादि अग्निदाहं करोति स्यँगुचेत प्रस्थयति बुग्मलोकेश्वरद्रशनम् श्रीपशुपतिप्रसनम् स्वस्थेन स्वराष्ट्रगमनम्भवति ॥ सम्वच्छर चारि शय नव ॥" (२६ पत्र)

[युवराज श्री जयादित्यदेवले सहोदर श्री जयानन्ददेवलाई कैद गरे । १२ वर्ष ३ महिना । पश्चिमबाट खशिया आए । ने.सं. ४०८ (वि.सं. १३४४) पौषमा जयतारि (जितारिमल्ल) पहिलोपटक पसे । सिम्भूमा आठ सय खशियालाई सिध्याई सारा राष्ट्र वन पसे । त्यसकारण खशिया भागे । दुनियाँ आनन्दसँग आफ्नोआफ्नो ठाउँमा बसे ।

त्यसको एक वर्ष बित्यो । फाल्गुन महिनामा फेरि दोस्रोपल्ट जयतारि (जितारिमल्ल) पसे । गाउँहरूमा आगो लगाइदिए । सिम्भूको चैत्यमा गए । बुङ्मतीका लोकेश्वरको दर्शन गरे । पशुपतिलाई खुशी पारे । ने.सं. ४०९ (वि.सं. १३४५) मा आनन्दसँग आफ्नो देश फर्के ।]

"स ४१० फाल्गुण कृष्ण प्रदीपदा जयतारि वस्यलिं तेल नवक्वाठ काया, बुगन्देवल पयिसरपम्भण्डार दुंता । ग्वल्वंस पछिम द्वारण दुम्बिस्यन् थव लान अङ्गाल बिस्यम् स्वान छाया उपहाथ पछिम द्वारस टया, थ्वलिव गाम द्वाको मे चोया, लिंछि यङ्गंस गङ्ग याङ माङ्ग, गङ्ग मचाल्व ॥" (४० पत्र)

[ने.सं. ४१० (वि.सं. १३४६) फाल्गुन कृष्ण प्रतिपदाका दिन जितारि मल्ल आई नुवाकोट दखल गरे; बुङ्मतीको देवलमा (रातो मछिन्द्रनाथकहाँ) गई कोष चढाए; देउपाटनमा पश्चिम ढोकाबाट पसे । यसपछि ... फूल चढाइयो । उप्रहाथ (?) पश्चिम द्वारमा राखियो । यसपछि गाउँहरूमा आगो लगाइदियो । एक महिनासम्म ललितपुरमा किल्ला जमाई बसे । किल्ला फुटेन ।]

सङ्क्षिप्त रूपमा लेखिएको हुनाले यहाँ जम्मै घटना खुल्न सकेको छैन । पहिलो आक्रमणमा जितारि मल्ल असफल भई फर्केको स्पष्ट छ । त्यसैले 'खशिया पलायितम्' भनी यहाँ फूर्तिसाथ लेखिएको छ । तर दोस्रो

आक्रमणमा उपत्यकाका बासिन्दाहरूले कुन रूपमा मुकाबिला गरे, सो यहाँ खुल्दैन । जितारि मल्ल आनन्दसँग आफ्नो देशमा फर्केर गए भनी यहाँ लेखिएको हुनाले उपत्यकाका शासकहरूले उनलाई केही आर्थिक रकम उपहार दिई फर्काएको बुझिन्छ । त्यसताका यस्तो चलन चलेको थियो । तिरहुतेहरूले यहाँ आक्रमण गर्दा उनीहरूलाई आर्थिक रकम दिइएको थियो । यसका लागि प्रजासँग कर उठाइएको थियो । तेस्रो आक्रमणमा पनि कुरा खुलस्त छैन । ललितपुरमा घेरा हाली बसे: किल्ला फुटेन भनी लेखिएको छ । यसपछि के भयो सो अस्पष्ट छ । शायद पहिलेजस्तै केही आर्थिक लाभ गरी जितारि मल्ल स्वदेश फर्के होलान् ।

जयादित्यदेवले जयानन्ददेवलाई कैद गरेका सिलसिलामा खसराजा जितारि मल्लको आक्रमणको वर्णन गोपालवंशावलीकारले गरेका हुनाले यी दुईमध्ये एकका पक्षले जितारि मल्लसँग गुहार मागेको कुरा प्रसङ्गबाट स्पष्ट देखिन्छ । जयादित्यदेवका पक्षले पछि डोय (तिरहुते)हरूसँग गुहार मागेको कुराको वर्णन गोपालवंशावलीकारले स्पष्ट रूपमा गरेका हुनाले जितारि मल्लसँग गुहार जयानन्ददेवका पक्षले मागेको कुरा प्रसङ्गबाट देखिन आएको छ ।

**डोय (तिरहुते)हरूको आक्रमण**

'सिमरा' मा सुदृढ 'वनगढ' बनाई नान्यदेवले नयाँ राज्य स्थापना गरेको कुराको चर्चा पहिले गरिसकिएको छ । यो राज्य पनि सैनिक शक्तिका दृष्टिले केही बलियो थियो । यी नान्यदेवहरू 'डोय' कहलाएका थिए । यस राजवंशमा गाङ्गदेव, रामसिंह, हरसिंहदेव आदि केही योग्य राजाहरू पैदा भएका थिए । उत्तरभारतमा मुसलमानी शासन कायम भएको हुँदा त्यहाँ हिन्दूधर्म सङ्कष्टमा थियो । त्यसबेला यस तिरहुतराज्यले हिन्दूधर्मलाई केही प्रश्रय दियो; त्यसको पुनरुत्थान गर्ने केही प्रयत्न यसले गऱ्यो । यस प्रसङ्गमा यस राज्यले केही विद्वान्लाई पैदा गऱ्यो तथा यहाँका कलाकारहरू नयाँ शैली लिएर अघि बढे । यसरी तिरहुतको यो डोयराज्य अनेक दृष्टिले समृद्ध बन्दै गयो ।

वाग्वतीको किनारैकिनार नेपालउपत्यकामा पस्ने बाटोघाटोको सुविधा हुनाले डोयहरूले सुरुदेखि नै नेपालउपत्यकामा प्रभाव फैलाउने चेष्टा गरेका थिए । वि.सं. ११६८ मा पहिलोपल्ट डोयहरूले यहाँ आक्रमण गरेका थिए । तर हारेर फर्कनुपरेको थियो । वि.सं. १३०१-२ मा डोयराजा रामसिंहले उपत्यकामा ठूलो आक्रमण गरेका थिए । गोकर्णसम्म उनी पसेका थिए । तर यसबेला पनि उनीहरूको हार भयो ।

अहिले अनन्त मल्लका पालामा राजपरिवारमा कलह भइरहेका बेलामा भने डोयहरूले यहाँ आफ्नो प्रभाव जमाउने केही अवसर पाए । खसराजा जितारि मल्लको आक्रमणको लगत्तैपछि तिरहुतेहरूले यहाँ आक्रमण गरेका

थिए । गोपालवंशावलीकारले यो कुरा "पुनः तिरहुतिया प्रविष्टः सम्वछ्र चारिशयएकारह माघमासे" (२६ पत्र) भनी उल्लेख गरेका छन् । केशरपुस्तकालयमा रहेको सङ्क्षिप्त गोपालवंशावलीमा यस घटनालाई "सम्वत् ४११ माघमास तिरहुतियाभगतग्रामे प्रविष्ट" भनी लेखिएको छ । यताबाट जितारि मल्लको आक्रमणको लगत्तैपछि अर्का पक्षले (जयादित्यका पक्षले) डोय (तिरहुते)हरूलाई बोलाइल्याएको स्पष्ट छ । ज्यादै सङ्क्षिप्त रूपमा टिपिएको हुनाले यताबाट कुरा राम्ररी खुल्दैन । तर यसको ९ वर्षपछि राजा अनन्त मल्ल र जयशक्तिदेव स्वयम्ले डोयहरूलाई बोलाइ ल्याई यहाँ आक्रमण गराएको टिपोट गोपालवंशावलीकारले अलि विस्तृत रूपमा गरेका छन् । विचारार्थ त्यसको उद्धरण यहाँ दिनुपरेको छ–

> "स ४२० प्वसला गाक्व अमावास्या कोन्हु चा असनिमण्टो जारवा दिवस क्वाठ डंङा मशिलासला गाक्व द्वादशी कोन्हु डोय हाथारण भङ्गरपं ववः तिपुर दल वयि असनिमम्भङ्ग चेतला थोव पञ्चमी भरणि बृहप्तिवार कुन्हु खण्ड खुरि धाया खापींथलि नयं मितिलीं नये फास्यं डोय हथार ओम्ङवो, दिवस संती चुनिगल दुपुंद वव मचाल्व । वाद्यंनिम बखुरिबहिरिस डोय म्वण्ड डयंङा म्ह ७ त्यंख्याद्वोल म्ह ३, बलुंखा जलधुनि नया ब्रह्मपुरटो दुपुंङता । थ्वतेस तिपुरण डण्ड मन्द्रपाल गु ... प्रजायाके हस्यकं बिलं रोवप्रति दम्म ६ सार बिल दम्म ३ छेखाप्रति दम्म ४, चङ्गुणला थोव सति कोन्हु डोय लास्यं वग्व, वटकढिया दलचो ... सलछें जयजु पंडियास भोन्त श्रीजयशक्तिदेवस श्रीअनन्तमल्लदेवस डोय हवः ॥" (४०–४१ पत्र)

[ने.सं. ४२० (वि.सं १३५६) पौष कृष्ण अमावास्याका दिन राति डोयहरू असनिमंमा लड्न आए । त्यहाँ ठाना हालियो । माघ कृष्ण द्वादशीका दिन डोयहरू लड्दै, जित्दै आए; त्रिपुर र असनिमं दखल गरे । फाल्गुन शुक्ल पञ्चमी भरणीनक्षत्र बृहस्पतिवारका दिन खण्डखुरी भन्ने ठाउँबाट खापिंथली कब्जा गरी मितिली कब्जा गर्न डोयहरू लड्दै आए । भोलिपल्ट चुनिगलमा पस्न खोजे; तर खुलेन । वाद्यंनिमं बखुरीबहीमा सात जना डोयहरू काटिए । त्यंखाडोलमा तीन जना काटिए । वलुंखा जलधुनी कब्जा गरी डोयहरू ब्रह्मपुरमा पनि पसे । यति भएपछि तिपुरले दण्ड तिर्‍यो । मन्द्रपालले ...रोपनीपिच्छे ६ द्रम्म सारबिल ३ द्रम्म, घरपिच्छे ४ द्रम्मका दरले प्रजासँग उठाई (डोयहरूलाई) बुझाइदिए । चैत्र शुक्ल सप्तमीका दिन लड्न आएका डोयहरू फर्के । ... सलछेंका पण्डित जयजु, बनेपाली श्रीजयशक्तिदेव, श्री अनन्त मल्लदेवद्वारा डोयहरूलाई बोलाइल्याउने काम भएको थियो ।]

यस वर्णनबाट वि.सं. १३५६ मा डोयहरूले नेपालउपत्यकामा आक्रमण गरी दण्डका रूपमा प्रजासँग पैसा उठाएका थिए तथा डोयहरूले यहाँ आफ्नो प्रभाव केही फैलाएका थिए भन्ने थाहा पाइन्छ । यहाँ डोयहरूसँग गुहार माग्नेमा राजा अनन्त मल्ल र जयशक्तिदेवको पनि उल्लेख परेको छ । यसरी राजा र राजपरिवारका व्यक्तिले डोयहरूलाई साथ दिएको देखिएकोले निकै ठूलो रहस्य यसभित्र लुकेको छ भनी सजिलैसँग अनुमान गर्न सकिन्छ । गोपालवंशावलीकारले जम्मै घटना खुलस्त रूपमा दिएका छैनन् । तैपनि राजपरिवारमा हुन लागिरहेको उग्र आन्तरिक कलहलाई यी घटनाले औंल्याउँछन् । राजा अनन्त मल्ल अलि कमजोर प्रकृतिका देखिन्छन् । उनले राजपरिवारभित्रै हुन लागेको आन्तरिक कलहलाई दबाउन सकेनन्; उनले भारादारहरूलाई पनि राम्ररी कज्याउन सकेका थिएनन् । उल्टो आन्तरिक कलहमा एक पक्षलाई दबाउन स्वयम् राजाले नै बाह्य शक्तिलाई बोलाई आतङ्क मच्चाउन लगाएको विचित्रको उदाहरण हामी यहाँनिर पाउँछौं । यी घटनाका प्रमुख सूत्रधार युवक जयशक्तिदेव हुन् । जयादित्यदेवको मृत्युपछि उनका छोरा युवक जयशक्तिदेव चल्तापुर्जा भई शक्तिशाली हुँदै आएका थिए । जयशक्तिदेवकी आमा विस्मादेवी तिरहुते देखिन्छिन् । जयशक्तिदेवकै प्रभावमा परी राजा अनन्त मल्लले पनि डोयहरूको (तिरहुतेहरूको) साथ दिएको देखिन्छ ।

यसबेला एकातिर खसहरू र डोयहरूको आक्रमण भएका थिए भने अर्कोतिर राजा अनन्त मल्लको शासनकालमा ठाउँठाउँमा विद्रोह, कलह भएका थिए । गोपालवंशावलीकारले यस कुराको पनि वर्णन गरेका छन् । अब ती आन्तरिक कलहको पनि केही चर्चा गर्नु उचित हुन्छ–

> "स ४१७ माघ शुक्ल दितीया युथनिमं श्रीजयतुंगमलदेवस वो शोंत जयशक्ति प्वहस वो तोसन स्वंखा हाथार चलरपका वन ङन्दुन चाल्यका, लुन्हु लुह्निपा, मे चोया, यह्नं हाथार फुङा ॥ ॥" (४० पत्र)

> "स ४१९ भार्द्दप्द शुक्ल त्रयोदशी बुधवार कोन्हु, तिपुर ग्वह्न यह्न त्रिभेसन तंङ यङ्गल यंम्बु फनपिम् थ्वते ग्वह्न याङ, वंप्याछे जारवा दिवस ॥" (४० पत्र)

> "स ४२३ वैशाष शुक्ल तृतीया ङचमगुंक्व ... तिपुर मनिगल हाथार थाकुलटो तेल । उभय दल भङ्गपं वव धाह्नन: ॥" (४१ पत्र)

> "स ४२५ आषाढ शुक्ल पञ्चमी ख्वप्वंन हाथार ह्याङ फनपीञ्चाल्व मे चोस्यं यं पस गह्न बन्धरपं चोंङा, तिपुर मनिगल स्वन्देस नवक्वाठ थ्वतेछिपन्त याङ यङन लुं कास्यङ्गा ल्हाया ॥" (४१ पत्र)

"स ४२५ श्रावण शुक्ल द्वितीया भोन्तन चोछेंप जारवा वीद्यापीठिस तिपुरण तेल लं अन्त्र याङ उभय खाह जुव चोभोतलिचेल वंङ्खटो ॥" (४१ पत्र)

"स ४२७ पोष शुक्लाष्टमी वंध्याछे क्वाट कुलन न्हिस चालका श्रीभोत जयशक्तिदेवसन, कुलि ढंङाव, ङंह्मसनिव थमु वङा कुलि जास्यम् जयशक्तिदेवस; कुल राक्ट जयचन्द फनपीन वव । क्वाठनायक शिरकेश मुलमीस ८.स्थानस ज्कर ल्वाङ माङा, थ्वसकोचन चान्हुलिव मोक्वटों पह्नदिन ठङाटों ॥" (४१-४२ पत्र)

यी माथिका वर्णनबाट अनन्त मल्लको शासनकालमा आन्तरिक कलह स्पष्ट रूपमा देखापरेको थियो भन्ने स्पष्ट थाहा पाइन्छ । विशेष गरेर राजा अनन्त मल्लको कमजोरीबाट जयशक्तिदेवले आफ्नो प्रभाव बढाएका थिए । यस अवस्थाले गर्दा स्वयम् राजा अनन्त मल्ल विरक्त भएका थिए । यसैले उनी ने.सं. ४२७ (वि.सं. १३६४) मा आफ्ना सारा सम्पत्ति पशुपतिनाथलाई चढाई एक किसिमले राजकाजबाट सन्न्यास लिएझैं गरी बनेपा गई बसेका थिए । यसको एक वर्षपछि उनको मृत्यु भयो । उनको दाहसंस्कार गर्ने कुरामा कचिङ्गल उठ्यो । चार दिनसम्म दाहसंस्कार हुन सकेन । त्यसपछि मात्र राजदीपमा ल्याई उनको दाहसंस्कार गरियो । यस विषयमा गोपालवंशावलीकारका मूल वाक्य यस प्रकार छन्–

"स ४२७ श्रावन शुद्धि सप्तमी श्रीअनन्तमलदेवस प्रभुतन थव भण्डीरिगण भारा पशुपतिसके दुन्तम् भण्डार पिङ्गाया, तिपुर सास्यं देवभण्डार लिकाढरपम् श्रीपशुपतिस दोहरपा भोंत वङ दछिलिव अभाग जुवटोम्, प्येन्हुटो संस्कार मजुव ... राजदीप यङाटोम् ।" (४२ पत्र)

[ने.सं. ४२७ (वि.सं. १३६४) श्रावण शुक्ल सप्तमीका दिन श्री अनन्त मल्लदेवले आफ्नो प्रभुत्वद्वारा आफ्नो भण्डारका सारा सरसामान झिकी पशुपतिनाथलाई चढाए; तिपुरको देवभण्डार झिकी त्यो पनि पशुपतिनाथलाई चढाई बनेपा गए । यसको एक वर्षपछि (वि.सं. १३६५ श्रावण कृष्ण त्रयोदशीका दिन) उनको मृत्यु भयो । चार दिनसम्म दाहसंस्कार हुन सकेन ... यसपछि राजदीपमा लगी दाहसंस्कार गरियो ।]

यसरी राजा अनन्त मल्लको अन्त भयो । उनको राज्यकालमा देशमा स्थिरता, सुखशान्ति रहेन तापनि उनले आफ्नो शासनकालमा केही निर्माणकार्य, विशेष गरी धार्मिक कार्य गरेका थिए । गोपालवंशावलीकारले यस कुराको चर्चा यसरी गरेका छन्–

"तेन ... श्रीपशुपतिभटारकाय ध्वजारोहन कृता ॥" (२६ पत्र)

> "सं. ४१७ आषाढ शुक्ल पञ्चमी श्रीपशुपति भटारकसके ध्वजा स्थापित श्रीअनन्तमलदेवस्य विजयराज्य: ॥" (४० पत्र)

**जयानन्ददेव**

ने.सं. ४२७ श्रावणमा एक किसिमले राजपाट त्याग गरी अनन्त मल्ल बनेपामा गई बसेपछि केही काल यहाँ राजनैतिक अराजकताजस्तै छायो । त्यसबेला जयशक्तिदेवले अधिकार हत्याउने प्रयास गर्न थालेका थिए । यस कुराको चर्चा गोपालवंशावलीकारले गरेका छन् । अर्कोतिर तुङ्ग मल्लले आफ्नो प्रभुत्व जमाउने प्रयास गरेको हामी पाउँछौं । यो कुरा गोपालवंशावलीकारको यस वर्णनबाट थाहा पाइन्छ–

> "स ४२८ चेत्र कृष्ण त्रयोदशी खात्यं व थ्वोचास थाकन, थ्व क्वाठ जा कोन्हुवु तिपुर श्रीजयतुंगमलदेवसन थ्व सम्वच्छ्रसवु न्हिप्यक्वाठन नवलिङ्गक्वाठ नवक्वाठन चाल्यका भोन्त लकस चाल्व ॥" (४२ पत्र)

तर जयशक्तिदेव, तुङ्ग मल्लदेवहरूले आफ्नोआफ्नो प्रभुत्व जमाउन चेष्टा गरे पनि अनन्त मल्लको मृत्युपछि गद्दीमा जयानन्ददेव बसे । उनको राज्याभिषेकको स्पष्ट मितिसहितको उल्लेख पाइएको छैन । तर गोपालवंशावलीकारले "तत्रान्तरे राजा श्रीजयानन्ददेव प्रवर्तते अर्थात् त्यसबीच (अनन्त मल्लपछि) श्रीजयानन्ददेव राजा हुन्छन्" भनी लेखेका हुनाले अनन्त मल्लको मृत्युपछि जयानन्ददेव गद्दीमा बस्न सफल भएको कुरामा शङ्का छैन । यस कुराको पुष्टि तात्कालिक अभिलेख, हस्तलिखित ग्रन्थ आदिबाट हुन्छ । विचारार्थ जयानन्ददेवको शासनकालका अभिलेख र हस्तलिखित ग्रन्थका पुष्पिकावाक्यको उद्धरण पहिले यहाँ दिइन्छन्–

**(१) अभिलेख**

१. ॐ सम्वच्छरयुगे जाते चन्द्रव(न्हि)समन्विते ।  
वैशाखशुक्ले रोहिण्यां तृतीयायां गुरोर्दिने ॥  
राज्ये श्र्यानन्ददेवस्य .....

२. श्रीमद्देवधरचन्द्रेण जलद्रोणी प्रकल्पिता ॥  
तस्मिन् दिवंगते (दैवा)त्तस्य पुत्रेण श्रेयसे ।  
श्रीदिवाकरचन्द्रेण विहितेयं प्रणालिका ॥

[ने.सं. ४३१ (वि.सं. १३६८) वैशाख शुक्ल तृतीया बृहस्पतिवार रोहिणी नक्षत्रका दिन श्रीआनन्ददेवको राज्यमा ....

श्रीदेवधरचन्द्रले जलद्रोणी बनाएका थिए । दैवले गर्दा उनी स्वर्गे भएपछि उनका छोरा श्रीदिवाकरचन्द्रले विधिपूर्वक यो जलद्रोणी बनाएका हुन् ।]

(२) **अभिलेख**

१. ॐ नमः सारदायैः ॥ श्रेयोस्तु ...

२. ख कृष्णअष्टम्याम् घटि ३ वे नवम्यां ...

३. क्षेत्र घटि १४ प्र पूर्वभद्रनक्षत्रः वे घटि ...

४ विष्कंभयोगः बुधवासरेः ग्रकर्णे ...

५. ... होराया तदा उदयात् प्रतीघटि १८ वि...

६. सके प्रतिष्ठा वेलाः । वैशाखमासमसिते तिथि ...

७. सते चतुःचतुत्रिंशकाले सोम्येकवार गरकर्णसंज्ञे ...

८. सारदा जगतः मातृ पटिथिते ... राज ...

९. तकाममूर्ति श्रीश्रीमतजयानन्दनृपपप्रभृते ...

१०. ... मति भर्जि विभावभावजीर्ण्ण ... वर

११. म् । श्रीजोतकराम श्रीजगराम श्री ...

१२. दहलकरनविहृतिभृतः । स्वस्ति भवंति ... मितेक –

१३. स देसस्थानाधिपो श्रीनेवगल गनव ... भमस्तुः

[सरस्वतीलाई नमस्कार । कल्याण होस् । .... वैशाख कृष्ण अष्टमी ३ घडी उप्रान्त नवमी, ... नक्षत्र १४ घडी उप्रान्त पूर्वभाद्र नक्षत्र ... विष्कुम्भ योग, बुधवार गरकरण ... उदयदेखि १८ घडी ... बेलामा प्रतिष्ठा गरियो ।

ने.सं. ४३४ (वि.सं. १३७१) वैशाख कृष्ण (अष्टमी) तिथि बुधबार गरकरणमा संसारकी आमा भएकी सरस्वतीको प्रतिष्ठा गरियो । ... कामदेवजस्ता राम्रा राजा श्री आनन्ददेव आदिको ... श्रीजोतकराम श्रीजगराम ... । कल्याण हुन्छ । सो देशका स्थानाधिप श्रीनेवगल ... शुभ होस् ।]

(३) **अभिलेख**

१. ॐ श्रियोऽस्तु । सम्वत् ४३७ फालगुनवधि २ राजाद्धिराज-श्रीश्रीश्रीजयानन्ददेवस्यः धर्म्मवि–

२. जे भवति । रगुवंशावतारश्रीश्रीजयरुद्रमल्लदेवस्य लब्धवरिषं राज्यं भवति श्रीदेवगौब्राह्मन–

३. पात्रानां सुखाय भवति । यजमान भवति कछावतार-राजव्यद्यभलोभारोस मनोवांछा शिद्धिरस्तु । पूर्व्वदिवंगतपितादी–

४. नां स्वर्ग्गलोकसम्प्राप्तिमस्तु । वारिश्च प्रतिगृह्नाति जस्तु वारे प्रयच्छति उभौ दौ पुन्यकमानौ नियतं स्वरगगामिनौ शुभ ।

[कल्याण होस् । ने.सं. ४३७ (वि.सं. १३७३) फाल्गुन कृष्ण द्वितीया, राजाधिराज श्रीश्रीश्री जयानन्ददेवको धर्म विजयराज्यमा । रघुवंशमा जन्मेका श्रीश्री जयरुद्र मल्लदेवले राज्य गरिरहेका बेलामा ।

श्री देवता, गाई, ब्राह्मण र पात्रहरूको सुख होस् । यजमान ... राजवैद्य भलो भारोको मनको इच्छा पुगोस् । दिवङ्गत पितृहरूको स्वर्गलोकमा वास भइरहोस् ।

पानी पिउने र पानी पिलाउने दुवै पुण्यकर्म गर्नेहरू पक्का पनि स्वर्ग जान्छन् । शुभ होस् ।]

(४) सम्वत् ४३८ फाल्गुनिवदि १५ शुक्रदिने ... श्रीश्रीराजाधिराजपरमधार्मिकपरमभट्टारकश्रीश्रीजयानन्ददेवऐश्वर्यविजयराज्ये । श्रीमानीगल योषकोच्छं अरभीमम्या लिखितम् ॥

(५) सम्वत् ४३८ श्रावणशुक्लप्रतिपद्यां तिथौ असिलेषनक्षत्रे वरियानयोगे शुक्रवासरे शिंहरासिगते सावितरि कर्क्कटरासिगते चन्द्रमसि । राजाधिराजपरमेश्वरश्रीश्रीजयानन्ददेवस्य विजयराज्ये । ... लिखपितं केस्रब्रह्ममूलमीकेन स्वार्थपरार्थहेतुना ... । लिखितं द्विजश्रीजेतरामसूरश्रमेण ।

यी तात्कालिक प्रमाणहरूले यसताका जयानन्ददेव गद्दीमा बसे भन्ने कुरा प्रमाणित गर्छन् । माथि उद्धृत ने.सं. ४३१ को अभिलेखबाट त्यसबेला उनी गद्दीमा बसिसके भन्ने देखिन्छ । त्यसै साल जयशक्तिदेवले फेरि तिरहुतेहरूलाई बोलाइल्याई नेपालउपत्यकामा आक्रमण गराएका थिए । गोपालवंशावलीकारले यस कुराको टिपोट गरेका छन् ।

**फेरि डोयहरूको आक्रमण**

युवराज जयादित्यदेव उनका छोरा जयशक्तिदेव र जयानन्दको सङ्घर्ष भइरहेका बेला खसहरू र तिरहुतेहरूले दुई पक्षमध्ये एक पक्षको साथ दिई नेपालउपत्यकामा आक्रमण गरेको कुराको चर्चा माथि परिसकेको छ । तिरहुतेहरूलाई नेपालउपत्यकामा आक्रमण गराउन स्वयम् राजा अनन्त मल्ल र जयशक्तिदेवले बोलाएका थिए । अनन्त मल्ल राजकाजबाट हटेपछि जयशक्तिदेव र तुङ्ग मल्ल अघि बढ्न खोजेको कुराको चर्चा पनि माथि गरिसकेको छ । अनन्त मल्लको मृत्युपछि बापवैरी काका जयानन्ददेव गद्दीमा बसेका हुनाले यो कुरा महत्त्वाकाङ्क्षी जयशक्तिदेवलाई असह्य हुनु स्वाभाविक थियो । त्यसैले ने.सं. ४३१ मा जयशक्तिदेवले डोय (तिरहुते)हरूलाई बोलाइल्याई नेपालउपत्यकामा आतङ्क फैलाउने काम गराएका थिए । यसताका सिम्रौनगढको डोयराज्यमा योग्य शासक हरसिंहदेव शासन गर्दै थिए । महत्त्वाकाङ्क्षी डोयराजा हरसिंहदेवले नेपालउपत्यकामा प्रभाव फैलाउने अवसर गुमाएनन् । डोयहरूले एक

वर्षभन्दा बढी समयसम्म यहाँ आफ्नो प्रभाव फैलाए । गोपालवंशावलीकारले डोयहरूको उक्त आक्रमणको वर्णन यसरी गरेका छन्–

> "स ४३१ माघ कृष्ण चतुर्द्दशी स्वं पहर बेरस यह्न डोयन दुंचाल्यका, ठंटिविन मनिगलटो तेल्व लुंयिती गजुह्निदेव तम्वक सहया ब्राह्मणस पात्र समस्त बन्धी हया गलनो देश धोसरपा थ्वतेस दण्ड कासन, कटक वंयास माक्व माभ्यंपाट समस्त मे चोया. श्रीवेतनदेवस श्रीजयशक्तिदेवस मेगचन्दश ढ्वाका रवतस थ्वतेवुव प्वंस डोयन बोंङता, डोय बीङ हव श्रीजयशक्तिदेवस ॥"
>
> "स ४३२ कार्त्तिक शुक्ल द्वादशी उत्रभद्र रविवार ... समस्त देवालय आदिन अग्निदाह याङ धोश्रपा, जयशक्तिदेव थोस अफह्न बिस्यंमाङा प्रजा समस्त के ... डोयनवुं क्वयलागाक्व अ... कोन्हु ग्वलयां सर्व्व भण्डार कोस एकबीस कासन यंङा श्व लिव संङान वं, व्यनापेसन्थानं तरीटो म्वण्ड डचङा, फाल्गुनशुक्लाष्टमी कोन्हु डोय भास्य वङ्ग्व लिंस राज याये मफ्वास्यं ॥" (४२–४३ पत्र)

[ने.सं. ४३१ (वि.सं. १३६७) माघ कृष्ण चतुर्दशीका दिन तीन प्रहर जाँदा डोयहरूले ललितपुर खुलाए; डंठिबिबाट मनिगल (मङ्गलबजारभेगको ठाउँ) सम्म दखल गरे । सुन्धारा गजुह्निदेवता ... । ब्राह्मणहरू र सारा पात्रहरू (ललितपुरका तात्कालिक शासकहरू) पनि कैद गरिए । किल्ला आदि ठाउँहरू ध्वस्त पारिए । यति भएपछि डोयहरूले लड्न आउँदा लागेको खर्च दण्डका रूपमा (प्रजाहरूसँग) उठाए । जम्मै माभ्यंपाटमा आगो लगाइयो । श्रीवेतनदेव, श्रीजयशक्तिदेव, मेघचन्द्र, ढ्वाका राउत यी चार जनालाई डोयहरूले बोलाएर राखे (आश्रय दिए) । श्रीजयशक्तिदेवद्वारा डोयहरूलाई बोलाएर ल्याउने काम भएको थियो ।

ने.सं. ४३२ (वि.सं. १३६८) कार्तिक शुक्ल द्वादशी उत्तर भाद्र नक्षत्र आदित्यबारका दिन ... सारा देवलहरू आगो लगाइए: ध्वस्त पारिए । जयशक्तिदेवले यसबेला ... सारा प्रजा ... डोयहरूलाई ..... । कार्तिक कृष्णशुक्लद्वादशीका दिन देउपाटनका (पशुपतिनाथ मन्दिरका) सारा कोश, एक्काईसवटै झिकेर लगिए । यसपछि साँगातिर लागे । बनेपादेखि तरी (तराईभेग) सम्मका मानिस केही काटिए । फाल्गुन शुक्ल अष्टमीका दिन डोय भारादार यहाँ राज गर्न नसकी फर्केर गए ।]

यसबाट ने.सं. ४३१ (वि.सं. १३६७) मा डोयहरूले ललितपुरमा पसेर त्यहाँ आफ्नो अधिकार जमाएका थिए भन्ने थाहा पाइन्छ । ललितपुरका भारादार, प्रजाहरूले डोयहरूको प्रभुत्व खुरुक्क स्वीकार गरेनन् । यसो हुँदा

डोयहरूले ललितपुरका सारा पात्रहरूलाई कैद गरे तथा प्रजाहरूलाई दण्ड गरे। यसरी एक वर्षभन्दा बढी समयसम्म यहाँ डोयहरूको प्रभुत्व जम्यो। परन्तु उनीहरूले लब्धप्रशमन गरी विधिपूर्वक यहाँ प्रभाव जमाउने प्रयास भने गरेनन्। उनीहरूको त्यस्तो इच्छा पनि नभएको बुझिन्छ। त्यसैले डोयहरूले यहाँ देवलमा समेत आगो लगाउने, ध्वस्त पार्ने, देवस्वहरण गर्ने आदि काम गरे।

यसताकाका शासकहरूको मनोभावना विजित प्रदेशमा आफ्नो शासन विधिवत् कायम होस् भन्नेभन्दा विजित प्रदेशबाट बढीभन्दा बढी अर्थलाभ होस् भन्नेतिर नै बढ्ता ढल्केको देखिन्छ। पश्चिम कर्णालीप्रदेशका खसराजाहरूले अनेकपटक नेपालउपत्यकामा आक्रमण गर्दा पनि यहाँ आफ्नो शासन कायम होस् भन्ने प्रयास उनीहरूले गरेको देखिँदैन। कर उठाएर लान पाएकोमा नै उनीहरू सन्तुष्ट भएका देखिन्छन्। डोयहरूको पनि यस्तै नीति रह्यो।

पश्चिमका खसहरूको आक्रमणमा र डोयहरूको यस पछिल्लो आक्रमणमा एउटा कुरामा ठूलो अन्तर परेको देखिएको छ। खसहरूले यहाँ आक्रमण गर्दा गाउँका गाउँ आगो लगाउने आदि गरेका थिए। तापनि यहाँका देवमन्दिरमा आगो लगाउने, भत्काउने, देवस्वहरण गर्ने काम गरेका थिएनन्। अझ यहाँका प्रसिद्ध देवता पशुपतिनाथ, स्वयम्भूनाथ, रातो मछिन्द्रनाथ आदिको दर्शनपूजन गर्ने गरेका थिए। डोयहरूले चाहिँ पछिल्लो आक्रमण (वि.सं. १३६८)मा यहाँका देवमन्दिरमा आगो लगाउने, ध्वस्त पार्ने, देवस्वहरण गर्ने कामसमेत गरे। यो कुरा यस प्रसङ्गमा विचारणीय छ।

डोयहरूले यहाँ आक्रमण गर्दा डोयराजा हरसिंहदेव नै आएका थिएनन्; उनका विश्वस्त भारादारमात्र आएका थिए। गोपालवंशावलीकारले नेपालउपत्यकामा आक्रमण गर्ने ती भारादारको नामोल्लेख गरेका छैनन्; 'डोय भा' मात्र भनेका छन्। तर ती 'डोय भा' हरसिंहदेवका प्रसिद्ध मन्त्री चण्डेश्वर हुन् भन्ने देखिन्छ। यो कुरा 'विवादरत्नाकर' मा गरिएको चण्डेश्वरको वर्णनबाट अनुमान गर्न सकिन्छ –

"श्रीचण्डेश्वरमन्त्रिणा मतिमतानेन प्रसन्नात्मना
नेपालाखिलभूमिपालजयिना धर्मेन्दुदुग्धाब्धिना।
वाग्वत्याः सरितस्तटे सुरधुनीसाम्यं दधत्याः शुचौ
मार्गे मासि यथोक्तपुण्यसमये दत्तस्तुलापूरुषः॥
रसगुणभुजचन्द्रैः सम्मिते शाकवर्षे
सहसि धवलपक्षे वाग्वतीसिन्धुतीरे।
अदिततुलितमुच्चैरात्मना स्वर्णराशिं
निधिरखिलगुणानामुत्तरः सोमनाथः"

[नेपालका सारा राजाहरूलाई जितेका, बुद्धिमान्, प्रसन्न मन भएका, धर्मात्मा, मन्त्री श्रीचण्डेश्वरले गङ्गाजीजस्तो वाग्वती नदीको किनारमा मार्गशुक्लमा तुलादान गरे ।

शकसंवत् १२३६ (वि.सं. १३७१) मार्ग शुक्लमा वाग्वती नदीको किनारमा सारा गुणहरू भएका ... (चण्डेश्वरले) सुवर्णतुलादान गरे ।]

यहाँ हरसिंहदेवका मन्त्री चण्डेश्वरले आफूलाई 'नेपालका राजा जितेका' भन्ने विशेषण लगाएका हुनाले वि.सं. १३६७-६८ मा यहाँ नेपालउपत्यकामा आक्रमण गर्ने 'डोय भा' चण्डेश्वर हुन् भन्ने देखिन्छ । तल अर्को ठाउँमा गोपालवंशावलीकारले पछिल्लोपटकको आक्रमणमा 'चण्डेश्वर' को नामोल्लेख गरेका पनि छन् ।

**खस राजा रिपु मल्लको यात्रा**

डोय (तिरहुते)हरू यहाँ टिक्न नसकी प्रशस्त लुटमार गरी फर्केको लगत्तैपछि भनेजस्तै वि.सं. १३६९ फाल्गुनमा रिपु मल्लले नेपालउपत्यकाको यात्रा गरेको वर्णन गोपालवंशावलीकारले गरेका छन् । त्यहाँको वर्णनशैली हेर्दा खसराजा रिपु मल्लको यो यात्रा आक्रमणको रूपमा भएको जस्तो देखिँदैन । यहाँ आई रिपु मल्लले बुङ्मतीका मछिन्द्रनाथलाई महास्नान गराए; कोष चढाए; पशुपतिको पूजा गरे; स्वयम्भूको पूजा गरी भोज खुवाए । १८ दिन यहाँ उपत्यकामा बसी रिपु मल्ल फर्केर गए भनी गोपालवंशावलीकारले लेखेका छन् । गोपालवंशावलीकारका मूल वाक्य यस प्रकारका छन्–

> "स ४३३ फाल्गुण कृष्ण पाडो, खशिया राजा रिपुमलन बुगस न्हवनं याङ सह्नु आदिन दुंता, ग्वलम् भाद्दस प्रस चोङा, येन्देञ्चैत्यस बाह्रं सवती भोज याङा, दिन १८ बसरपा लिस्स ॥" (४३ पत्र)

[ने.सं ४३३ (वि.सं. १३६९) फाल्गुन कृष्ण प्रतिपदाका दिन खसराजा रिपु मल्लले बुङ्मतीमा महास्नान गराई कोष आदि चढाए । देउपाटनका भट्टारक (पशुपतिनाथ)लाई प्रसन्न पारे । कान्तिपुरका चैत्य (स्वयम्भूनाथ)मा पूजा गरी त्यहाँ बहालमा व्रतबन्ध गरे जति जम्मैलाई भोज खुवाए । १८ दिन बसी फर्केर गए ।]

रिपु मल्लको यात्राबारेको यस वर्णनमा यसपटक खससैन्य र उपत्यकावासीहरूका बीच युद्ध भएको कुनै सङ्केतसम्म पनि परेको छैन । यसकारण रिपु मल्लले यो यात्रा मित्रको मद्दतगारका हैसियतले गरेको देखिन्छ । तात्कालिक अवस्थामा दृष्टि दिइयो भने यस कुराको सहजै पुष्टि हुन्छ । रिपु मल्लको यात्राभन्दा केही समय पहिले तिरहुतेहरूले नेपाल–उपत्यकाका शासकहरूको गृहकलहबाट फाइदा उठाई एक पक्षको

(जयादित्यदेव, जयशक्तिदेवको पक्षका) मद्दतगार बनी उपत्यकामा आक्रमण गरेका थिए । यसपालिको तिरहुते आक्रमण निकै भयङ्कर र विध्वंसकारी थियो । तिरहुतेहरूको यस खतराबाट बच्न अर्को पक्षले खसराजा रिपु मल्लसँग 'गुहार' मागेका थिए भन्ने कुरा प्रसङ्गबाट स्पष्ट थाहा पाइन्छ । खसहरूसँग गुहार माग्ने पक्ष राजा आनन्ददेवको थियो । पहिले खस राजा जितारि मल्लसँगको गुहार पनि आनन्ददेवकै पक्षले मागेको थियो भन्ने कुरा माथि लेखिएको छ । यसताका आनन्ददेव गद्दीमा रहेका हुँदा जयशक्तिदेवलाई सो असह्य भई उनले तिरहुतेहरूलाई गुहारेका थिए । राजा आनन्ददेवले चाहिँ खसराजा रिपु मल्लसँग गुहार मागे ।

खसराजा रिपु मल्लले नेपालउपत्यकामा आएकै साल बुद्धजन्मस्थल लुम्बिनी र कपिलवस्तुको पनि यात्रा गरेका थिए । निग्लिहवाको स्तम्भलेखमा "ॐ मणिपद्मे हुँ ॥ श्रीरिपुमल्लश्चिरंञ्जयतु १२३४" लेखिएको छ । लुम्बिनीको अशोकस्तम्भमा पनि "ॐ मणिपद्मे हुँ । श्रीरिपुमल्ल-श्चिरञ्जयतु, संग्राम(म)ल्ल जयः" भनी कुँदिएको छ । यताबाट नेपालउपत्यकामा पस्नुभन्दा पहिले वा यताबाट फर्केर जाँदा रिपु मल्लले बुद्धको जन्मस्थल लुम्बिनीको दर्शन गरेको बुझिन्छ ।

यी रिपु मल्ल जितारि मल्लका भतिजा हुन् । पृथ्वी मल्लको दुल्लुको स्तम्भलेखबाट उक्त कुरा थाहा पाइन्छ ।

**रुद्र मल्ल**

उपर्युक्त अव्यवस्थाले नेपालउपत्यका कमजोर हुँदै गएका बेलामा यहाँ एक योग्य युवक अगाडि देखापरे । ती हुन् रुद्र मल्ल । रुद्र मल्ल राजा जयसिंह मल्लका नाति, जयतुङ्ग मल्लका छोरा हुन् । रुद्र मल्लको जन्म ने.सं. ४१६ (वि.सं. १३५२) मा भएको हो । गोपालवंशावलीकारले उनको जन्ममिति यसरी टिपेका छन्–

> "सम्वत् ४१६ मार्गशिरशुक्लत्रयोदशी अनुराध घटि १७ शुल ३७ अंगारवार श्रीश्रीजयतुङ्गमलदेवस्य प्रथमपुत्र श्रीश्रीजयरुद्र-मलदेवस्य जातः" (३९–४० पत्र)

यसरी रुद्र मल्ल राजपरिवारका व्यक्ति थिए तापनि गद्दीका सोझै हकदार भने थिएनन् । तर आफ्नो योग्यताले भरखरकै उमेरमा नै उनी अगाडि बढे । पहिले उनी राजा आनन्ददेवसँग संयुक्तशासक हुन पुगे । यो कुरा माथि उद्धृत देउपाटनको ने.सं ४३७ को शिलालेखबाट थाहा पाइन्छ । त्यसमा "राजाधिराजश्रीश्रीश्रीजयानन्ददेवस्यः धर्मविजं भवति । रगु-वंशावतारश्रीश्रीजयरुद्रमल्लदेवस्यः लब्धवरिषं राज्यं भवति" भनी लेखिएको छ । यताबाट यसताका रुद्र मल्ल राजा आनन्ददेवसँग संयुक्तशासक हुन पुगेको स्पष्ट छ । सर्वप्रथम रुद्र मल्लले रक्षाव्यवस्थामा दृष्टि दिए ।

ठाउँठाउँमा बलिया किल्लाहरू बनाउन लगाए । मूल राजधानी त्रिपुरलाई पनि एक गढका रूपमा उनले परिणत गरे । साथै मौकाको फाइदा उठाई बराबर विद्रोह गरिरहने स्थानीय शासकहरूलाई उनले केही अँठ्याए । आफ्ना नातेदार अरि मल्ललाई गद्दीमा राखेदेखि त रुद्र मल्लको प्रभाव झन् बढ्यो । यसरी यसताका केहीवर्ष नेपालउपत्यकामा शान्तिसुरक्षाको वातावरण पैदा भएको थियो । त्यसैले गोपालवंशावलीकारले माथि संस्कृत भागमा रुद्र मल्लबारे यस्तो लेखेका छन्–

> "तत्रान्तरे राजा श्रीजयानन्ददेव प्रवर्त्तते ॥ तदनन्तरे श्रीजयतुङ्गमलदेवस्य आत्मजः श्रीजयरुद्रमलदेवस्य प्रभुतेन स्वकुटुम्बश्रीजयारिमलदेवस्य पुष्पाभिषेकं कृत्यः राजा भक्तिमात्रन्ददो । स्मस्त नेपालश्रीजयरुद्रमल्ल इवः नवकोट-भुङती प्रजंतराजकृतम्' (२७ पत्र)

रुद्र मल्लको उदय नभएको भए केन्द्रको राज्यक्षेत्रभित्र नुवाकोट पनि रहने थिएन; गोरखासम्मका पश्चिमका क्षेत्रमा खसराजाहरूको प्रभुत्व जमेजस्तै नुवाकोटमा पनि खस वा अरूको प्रभुत्व जम्ने सम्भावना थियो; रुद्र मल्लको उदय भएको हुनाले नै नुवाकोटसम्मको नेपालमा शान्ति छायो भन्ने आशय गोपालवंशावलीकारले यहाँ व्यक्त गरेका छन् । हुन पनि गोपालवंशावलीकारको उक्त भनाइ निकै अंशमा सत्य थियो । अब रुद्र मल्लको कार्यकालमा भएका, गोपालवंशावलीकारले बयान गरेका कुराको चर्चा गरिन्छ ।

सोह्र वर्षको भरखरको चढ्दो उमेरमै रुद्र मल्लले शासनको बागडोर समालिसकेको सङ्केत गोपालवंशावलीकारको वर्णनबाट थाहा पाइन्छ । ने.सं. ४३२ मार्गमा बनेपाले नालाभेगमा कब्जा जमायो; त्रिपुरले (मूल राजधानीले) यसका विरुद्ध कारबाई गरी यस विद्रोहलाई दबायो । यो घटना रुद्र मल्लको विजयराज्यमा भएको हो भनी गोपालवंशावलीकारले यसरी लेखेका छन्–

> "४३२ मार्गशिर शुद्धि तृतीया स्वं पहरस भोंतन ङाल ... तिपुरन खण्डन फुङा ... विजयराजे श्रीजयरुद्रमलदेवस्य ..." (४३ पत्र)

यसताका गद्दीमा राजा जयानन्ददेव थिए । तर उनले राम्ररी कज्याई शासन गर्न सकेका थिएनन् । उपर्युक्त बनेपाको विद्रोह दबाउने कार्य रुद्र मल्लले गरेका थिए । त्यसबेला रुद्र मल्ल १६ वर्षका मात्र थिए । गोपालवंशावलीको उपर्युक्त वर्णनबाट त्यसबेला रुद्र मल्ल विधिवत् संयुक्तशासकका पदमा पुगिसकेका थिए भन्ने थाहा पाइन्छ । त्यसैले 'जयरुद्रमल्लदेवको विजयराज्यमा' भन्ने उल्लेख गोपालवंशावलीकारले गरेका हुन् । यसै गरी यसताका जयरुद्र मल्लले अरू विद्रोहलाई दमन

गरेको उल्लेख पनि गोपालवंशावलीमा परेको छ । जयशक्तिदेवको सहायताको लागि ने.सं. ४३१–३२ मा नेपालउपत्यकामा पसेका 'डोय' लाई धपाउने काममा पनि युवक रुद्र मल्लको हात रहेको थियो । ने.सं. ४३३ वैशाखमा डोयहरूलाई धपाई फर्केका रुद्र मल्ललाई ठूलो जात्रा गरी चुनिगलमा भित्र्याएको वर्णन गोपालवंशावलीकारले यसरी गरेका छन्–

> "स ४३३ वेशाख शुद्धि नवमी शुक्रवार डोन थं बिज्याङा श्रीजयरुद्रमलदेवस चनिग्ल महाजात्रा याङ बिज्याचकाटों" (४३ पत्र)

[ने.सं. ४३३ (वि.सं. १३७०) वैशाख शुक्ल नवमी शुकबारका दिन डोयहरूलाई (तिरहुतेहरूलाई) धपाई फर्केका श्री जयरुद्र मल्लदेवलाई ठूलो जात्रा गरी चुनिगलमा भित्र्याइयो।]

यताबाट रुद्र मल्लको प्रभाव बढ्नामा एक प्रमुख कारण डोयहरूलाई धपाइएकोले हो भन्ने थाहा पाइन्छ । रुद्र मल्लले बाह्य प्रभाव रोक्नाका साथै आन्तरिक विद्रोह दबाएको वर्णन पनि गोपालवंशावलीकारले गरेका छन्–

> "स ४३५ वेशाष शुक्ल पञ्चमी श्रीजयरुद्रमलदेवसन गोकर्ण्ण क्वाठस पुन्द वङा मचाल्व, जेष्ठ शुद्धि ५ शुक्रवार चाव्यसंनतो ॥" (४३ पत्र)

[ने.सं. ४३५ (वि.सं. १३७२) वैशाख शुक्ल पञ्चमीका दिन श्री जयरुद्र मल्लदेव गोकर्ण किल्लामा घेरा हाल्न गए । ज्येष्ठ शुक्ल पञ्चमी शुकबारका रातिसम्म किल्ला खुलेन ।]

गोकर्ण किल्लाले विद्रोह गरेको र सो दबाउन जयरुद्र मल्ल गएको वर्णन यहाँ परेको छ । गोकर्ण प्राचीनकालदेखिको प्रसिद्ध 'वनदुर्ग' हो । यसकारण गोकर्ण किल्ला खुलाउन एक महिना घेर्दा पनि नसकेको यताबाट थाहा पाइन्छ । पछि अन्तिम मल्लराजा जयप्रकाश मल्लका पालासम्म पनि गोकर्ण 'वनदुर्ग' रूपमा थियो भन्ने कुरा तात्कालिक ताम्रपत्रबाट थाहा पाइन्छ ।

> "स ४३८ मार्ग्गशिर शुद्धि ११ श्रीजयरुद्रमलदेवसन तलङ्गुम्पली नक्वाठ काया दिन" (४४ पत्र)
>
> "स ४३५ आषाढ कृष्ण ४ लिस्साखरस, नवक्वाठ दलखण्ड फुङा तिपुरण ॥" (४४ पत्र)
>
> "स ४३८ ... थ्व सम्वच्छलसवु तिपुरण नवक्वाठ पुन्दवम्ङा मचाल्व श्रीजयरुद्रमलदेवस्यम् ॥" (४५ पत्र)

यताबाट नुवाकोटले विद्रोह गरेको र नुवाकोटलाई कज्याउन रुद्र मल्ललाई निकै गाह्रो भएको स्पष्ट बुझिन्छ । यसै गरी केन्द्रलाई सुदृढ पार्न जयरुद्र मल्लले अनेक कदम उठाएका थिए ।

**जयारि मल्ल**

ने.सं. ४४० (वि.सं १३७७) चैत्रमा जयारि मल्लको अभिषेक गरियो । आनन्ददेवलाई हटाएर अरि मल्ललाई गद्दीमा राखिएको हो कि आनन्ददेवको मृत्युपछि अरि मल्ललाई गद्दीमा राखिएको हो; यो कुरा खुल्न सकेको छैन । गोपालवंशावलीमा ने.सं. ४४८ को एक घटनामा आनन्ददेवको उल्लेख आएको हुनाले आनन्ददेव पछिसम्म जीवित थिए कि भन्ने भ्रम पर्छ । तर लेखकको (सार्नेको) दोषले मात्र त्यस्तो भ्रम परेको हो । ने.सं. ४४८ को सो घटनामा रुद्र मल्लको पनि उल्लेख परेको छ । तर रुद्र मल्लको मृत्यु ने.सं. ४४६ मै भइसकेको कुरामा शङ्का छैन । यसकारण ने.सं. ४३८ को सट्टा लेखकको गल्तीले ४४८ लेखिन गएको हो । यसरी सरसर्ती हेर्दा आनन्ददेवको मृत्युपछि नै जयारि मल्ललाई गद्दीमा राखिएको हो भन्ने देखिन्छ । तर जयारि मल्ल गद्दीमा बस्नमा रुद्र मल्लको पूरा हात थियो भन्ने कुरा गोपालवंशावलीकारले "तदनन्तरे श्रीजयतुङ्गमलदेवस्य आत्मज: श्रीजयरुद्रमलदेवस्य प्रभुतेन स्वकुटुम्बश्रीजयारिमल्लदेवस्य पुष्पाभिषेकं कृत्य: राजा भक्तिमात्रन्ददौ । स्मस्त नेपालश्रीजयरुद्रमल्ल इव: नवकोटभुङतीप्रजंत राज कृतम् ॥" भनी लेखेका हुनाले स्पष्ट थाहा पाइन्छ । यी जयारि मल्ल राजा अनन्त मल्लका छोरा हुन्; ने.सं. ३९६ मा जयारि मल्लको जन्म भएको हो । गोपालवंशावलीकारले यस कुराको चर्चा यसरी गरेका छन्– "स ३९६ माघशुक्लद्वादशी पुनर्व्वसु प्रीतियोग बुधवार श्रीअनन्तमलदेवस्य पुत्र श्रीजयारिमलस जात ॥ अस्तवर्ष ६९" (३५ पत्र) । यसरी जयारि मल्ल राजा अनन्त मल्लका छोरा हुँदा गद्दीका हकदार त थिए नै । तैपनि त्यसबेलाको 'उभयराजकुल' को अवस्थाले गर्दा रुद्र मल्लको प्रभाव नभएको भए अरि मल्लले गद्दीमा बस्न पाउन गाह्रो भएको देखिन्छ । रुद्र मल्लको प्रभुत्वले गद्दीमा बसेका हुँदा राजा अरि मल्ल देखावटी राजामात्र थिए; शासनाधिकार जम्मै रुद्र मल्लको हातमा नै थियो । यो कुरा गोपालवंशावलीको वर्णनबाट थाहा पाइन्छ । यी अरि मल्ल गद्दीमा ने.सं. ४६४ सम्म बसे । ने.सं. ४६४ आश्विनमा ठूलो भूकम्प भएको थियो; त्यसै सिलसिलामा देउपाटनमा अरि मल्लको मृत्यु भएको थियो । यो कुरा गोपालवंशावलीकारले यसरी लेखेका छन्–

> "स ४६४ अश्विनि शुद्धि ७ स्वं पहरस, तव भुंकंप वव: थ्व संती ग्वलंस श्रीजयारिमलदेवस अस्त ॥" (५१ पत्र)

[ने.सं. ४६४ (वि.सं. १४०१) आश्विन शुक्ल सप्तमीका दिन तीन प्रहर जाँदा ठूलो भूकम्प भयो । यसको भोलिपल्ट देउपाटनमा श्री जयारि मल्लदेवको अस्त भयो ।]

शासनाधिकार रुद्र मल्ल र उनका उत्तराधिकारीको हातमा रहे तापनि पूरा राजकीय सम्मान भने राजा अरि मल्लले पाएका थिए । यो कुरा तात्कालिक हस्तलिखित ग्रन्थका पुष्पिकावाक्यबाट थाहा पाइन्छ । तिनको उद्धरण यहाँ प्रस्तुत छ–

१. “श्रेयोस्तु । सम्वत् ४५७ श्रावणकृष्णद्वादश्याम् पुष्यनक्षत्रे परिघयोगे शनिश्चरवासरे पुस्तकमिदं समाप्तमिति । परमभट्टारकपरमेश्वरपरमवैष्णवपरमदेवताधिदेवपरममाहेश्वररघुकुलतिलकभूपालपरम्परापरिणमित मौलिशिषप्रसूपितपादारविन्दश्रीपशुपतिदेवतावरलब्धप्रसादैकमहाराजाधिराजसप्रक्रियराजरतेन्द्रश्रीजयारिमल्लदेवनामविजयराजे नेपालमण्डले ... उत्तरविहारकुटुम्बोद्भवश्रीह्नालविहारे प्रधानाङ्गमहापात्रश्रीजयशीहमल्लवर्म्मण: सत्त्वार्थहेतुना स्वहस्तेन लिखितम् ॥”

२. “सम्वच्छलानां ग्रहवाण तथा युग फाल्गुन तमपक्षे पञ्चम्यां तिथौ श्रीजयारिमल्लदेवस्य विजयराज्ये । विष्णुदासेन लिखितम् ।”

३. “सम्वत् ४६२ कात्तिर्कशुक्लप्रदीपद्यायान्तिथौ बृहस्पतिवाशरे । राजाधिराजपरमेश्वरपरमभट्टारकरघुवंशावतारश्रीश्रीजयारिमल्लदेवस्य विजयराज्ये । श्रीलेम्वटीपटने.”

अरि मल्लबारे विचार गर्न सजिलो होस् भनी माथि केही तलसम्मका घटनाको चर्चा गरिए । तापनि अब अगाडि बढ्नुभन्दा पहिले अरि मल्ल गद्दीमा राखिनुभन्दा अघि पहिले र गद्दीमा राखिएपछि जयरुद्र मल्लले गरेका अरू केही कार्यको उल्लेख गर्नु उपयुक्त हुन्छ ।

ने.सं. ४३९ आश्विनमा रुद्र मल्लले राजवास किल्ला बनाएका थिए । तर यसको दुई वर्ष जतिपछि खसहरूले सो राजवास किल्ला ध्वस्त पारिदिएका थिए । यस कुराको उल्लेख गोपालवंशावलीकारले यसरी गरेका छन्–

> “स ४३९ आश्विनिकृष्ण सप्तमी ... रुद्रमलदेवसन राजवासक्वाठ डंङा यह्न तिभएस विहवहिसन: ॥ (४३–४४ पत्र)
>
> “स ४४१ चेत्र शुदि द्वितीया खशिया व्यष्टन लासन राजवासक्वाठ ठोङा तिपुरया ॥” (४४ पत्र)

यसै गरी रुद्र मल्लले त्रिपुरलाई पर्खालले घेरी ‘गढ’को रूप दिने काम पनि गरेका थिए । गोपालवंशावलीकारले यो कुरा यसरी लेखेका छन्–

"स ४४४ माघ शुदि ७ तिपुर प्राकार डंजोका वन्दे अटहस्यं चेत्र मासनटो सेवस्म अट छेचका श्रीजयरुद्रमलदेवसन ॥" (४५–४६)।

**सिम्रौनगढको ध्वंस र हरसिंहदेवको मृत्यु**

यसबीच उता 'सिमरा-वनगढ' को डोयराज्यमा एउटा ठूलो खतरा आइपऱ्यो । वि.सं. १३८१ मा दिल्लीका बादशाह गयासुद्दीन तुगलक बङ्गालको विद्रोह दबाई प्रशस्त फौजसाथ तिरहुत नजिकैको बाटोबाट दिल्ली फर्कँदै थिए । त्यसबेला सिमरा-वनगढका राजा हरसिंहदेव थिए । तुगलकको फौज बढ्दै आइरहेको खबर आएपछि हरसिंहदेवहरूले आफूमाथि आक्रमण हुन लाग्यो भन्ने सम्झे । यसकारण सारा रैतीहरू उठाई लड्न तयार भई उनी गढबाट बाहिर निस्के । तर गयासुद्दीनको विशाल सैन्यसँग मुकाबिला गर्ने शक्ति तिरहुते सैन्यमा थिएन । यसकारण लडाइँ लड्दा टिक्न नसकी हरसिंहदेवको सेना वनदुर्गभित्र पस्यो । यसपछि गयासुद्दीनको फौजले सिमरा-वनगढ ध्वस्त पारिदियो । अनि सपरिवार हरसिंहदेवले त्यताबाट भागी ज्यान जोगाए । केही काल यताउति लागी हरसिंहदेव नेपालको पहाडी भागमा पसे । दोलखातिर जाँदा तीनपाटन भन्ने ठाउँमा वि.सं. १३८२ माघमा उनको मृत्यु भयो । उनका जहान, छोरा, मन्त्री आदि कैद गरिए । तर उनीहरूले रुद्र मल्लसँग शरण मागेका हुनाले हरसिंहदेवकी रानी देवलदेवी, छोरा जगत्सिंहहरूले रुद्र मल्लको दरबार 'युथुनिमम्' मा प्रवेश पाए ।

यत्रो उल्लेखनीय घटना घटेपछि त्यसको असर गोपालवंशावलीकारले पनि थाहा पाउनु स्वाभाविक थियो । यसकारण गोपालवंशावलीकारले उक्त घटना यसरी टिपेका छन्–

"स ४४६ माघ शुदि ३ तिरहुतिः हरशिंह राजासन मिथ्लासनता संत्रगहीटो ढिलीस तुरकयाके वंङ रायत मोनारपम् थमु अगुमन याङ वस्यम् शिमरा वनगढ़ भङ्ग याङ, तिरहुतिया राजा महाथ आदिन समस्त व डंङ व्यवसनवङ्ग्वटोम् ग्वलछिनोलिन्दुंबिर ववः ग्वलछिनो राजग्राम द्वलखा धारे वंग्व । टिंपाटस राजा हरशिंहटो शिक्व थ्वस कायनो महाथनो उभय बंधि येंङा कूलनं ज्वोंङ बि फंग्व, राजगामया मझी भारो धायान समस्त धन कासन ॥" (४६ पत्र)

[ने.सं. ४४६ (वि.सं १३८२) माघ शुक्ल तृतीया । तिरहुतका राजा हरसिंहदेवले रैतीहरू जम्मा पारी आफू अघि सरी मिथिलाबाट दिल्लीका तुरक (गयासुद्दीन तुगलक) माथि जाइलागे । सिम्रौनगढ ध्वस्त पारियो । तिरहुतका राजा, मन्त्री आदि सबै उठी भागे । केही कालपछि फेरि पसे ।

केही कालपछि राजग्राम दोलखामा आउँदा टिंपाटमा (तीनपाटनमा) राजा हरसिंहदेवको मृत्यु भयो । यिनका छोरा, मन्त्री दुवै कैद गरिए । परिवार पनि समातियो । शरण मागे । राजग्रामका भारादारले जम्मै धन हात लगाए ।]

यस घटनाले तात्कालिक राजनैतिक अवस्थामा निकै परिवर्तन ल्यायो । अब पहिलेको जस्तो तीन शक्तिको सन्तुलन रहेन । कर्णालीप्रदेशको खसराज्य र उपत्यकाको मल्लराज्य मात्र अब कायम रहे । देवलदेवीहरूले युथनिमम्मा शरण पाएका हुनाले उपत्यकाका राजकाजमा समेत यसको असर पऱ्यो ।

**रुद्र मल्लको मृत्यु**

सिम्रौनगढमा उपर्युक्त घटना घटेपछि राजा हरसिंहदेवको मृत्यु भएको र तिनको परिवारलाई रुद्र मल्लले आफ्नो दरबारमा शरण दिएको केही महिनापछि उपत्यकाका एक शक्तिशाली युवक शासक रुद्र मल्लको पनि मृत्यु भयो । त्यसबेला रुद्र मल्ल तीस वर्षका मात्र थिए । तीस वर्षका युवक रुद्र मल्लको मृत्यु कसरी भयो; गोपालवंशावलीकारले खुलाएर लेखेका छैनन् । रुद्र मल्लको मृत्युबारे गोपालवंशावलीकारले यतिमात्र लेखेका छन्–

"तस्य स्वर्गस्थसम्वत्सरो षडयुगवेदा ४४६ आषाढीपूर्णमी-
रात्रिभागे दारा चतु अग्निप्रवेश कृतम् ॥" (२७ पत्र)

[ने.सं. ४४६ (वि.सं. १३८३) आषाढ पूर्णिमाका दिन राति ती रुद्र मल्लको स्वर्गवास भयो । चार जना पत्नीहरू सती गए ।]

"स ४४६ प्रथमाषाढ पूर्णमी श्रीजयरुद्रमलदेवस अस्त । भोग
राजवर्ष ३० मा ८ । ... हा भरि १ राखि १ श्रीजयरुद्रमलदेव
सती वङ्ग्व ॥" (४६ पत्र)

[ने.सं. ४४६ (वि.सं. १३८३) प्रथम आषाढ पूर्णिमाका दिन श्री जयरुद्र मल्लदेवको मृत्यु भयो । भोग वर्ष ३०, महिना ८ । ... हाभरि १, राखि १ श्री जयरुद्र मल्लदेवका साथ सती गए ।]

रुद्र मल्लको मृत्युले गर्दा नेपालउपत्यकाको राजकाजमा फेरि अस्थिरता छायो । रुद्र मल्लका दुई छोरा जन्मेका थिए । तर दुवै बालककालमै मरे । रुद्र मल्लका छोराका जन्म र मृत्युको टिपोट गोपालवंशावलीकारले यसरी गरेका छन्–

"स ४४१ फाल्गुणकृष्णनवमी श्रीजयरुद्रमलदेवस प्रथमपुत्र
श्रीजयवीरमलदेवस जात ॥ ॥ स ४४२ पौष वद्धि १४ अस्त
दिन ॥" (४५ पत्र)

"सं. ४४३ माघकृष्णद्वितीया श्रीजयरुद्रमलदेवस द्वितीयपुत्र श्रीत्रिभुवनमलदेवस जात, गण्डान्तवेर ॥ "स ४४४ अशुनि वदि १४ अस्त दिवसः ॥" (४५ पत्र)

रुद्र मल्लकी एक छोरी नायकदेवी भने जीवित रहिन् । नायकदेवीको जन्म कहिले भयो; यसको उल्लेख गोपालवंशावलीकारले गरेका छैनन् । तर "पुत्री सती नायकदेवी नामः पितामही श्रीपदुमलदेवीना प्रतिपालितम् ॥ श्रीदेवलदेवीद्वयेपि ॥" (२७ पत्र) भन्ने उल्लेखनीय टिपोट भने गोपालवंशावलीकारले गरेका छन् । यताबाट रुद्र मल्लको मृत्यु हुँदा नायकदेवीकी आमा सती गएकी हुँदा नायकदेवीको पालन बज्यै पदुमलदेवीले गरिन्; यस काममा देवलदेवीले पदुमलदेवीलाई सघाइन् भन्ने थाहा पाइन्छ ।

**देवलदेवीको उदय**

यी देवलदेवी कर्णाटवंशज तिरहुते जगत्सिंह कुमरकी आमा हुन् । यसभन्दा अगाडि देवलदेवीहरूको नामोल्लेख गोपालवंशावलीमा आएको थिएन । अहिले एक्कासि रुद्रमल्लको दरबार (युथुनिमम् दरबार)मा देवलदेवीहरूको उपस्थिति कसरी भयो भन्ने कुरा बडो विचारणीय छ । यससम्बन्धमा विचार गर्ने झीनो आधार यहाँ उल्लेखनीय छ । सिमरा-वनगढ छोडेर हरसिंहदेव पहाडतिर लाग्दा उनका साथमा उनका जहान, छोराहरू, मन्त्री, भारादार आदि पनि थिए । दोलखातिर आउँदा तीनपाटनमा वि.सं. १३८२ माघमा हरसिंहदेवको मृत्यु हुँदा उनका जहान, छोरा, मन्त्री भारदार समातिए र पछि उनीहरूले शरण माग्दा रुद्र मल्लले हरसिंहदेवका जहान र छोरालाई शरण दिए भनी गोपालवंशावलीकारले लेखेका छन् । यहाँ गोपालवंशावलीकारले हरसिंहदेवका छोरा र जहानको नामोल्लेख गरेका छैनन् । तापनि प्रसङ्गबाट ती जगत्सिंह कुम्हर र देवलदेवी हुन् भनी सजिलैसँग ठम्याउन सकिन्छ । गोपालवंशावलीकारले जगत्सिंह कुम्हरलाई 'कर्णाटवंशज' भनी परिचय दिएका छन् । देवलदेवी जगतसिंह कुम्हरकी आमा हुन् भन्ने पनि गोपालवंशावलीबाट थाहा पाइन्छ । यसरी रुद्र मल्लको दरबारमा शरण लिई बसेकी चतुर देवलदेवीले रुद्रमल्लको मृत्युपछि आफू अगाडि बढ्ने अवसर पाइन्; नायकदेवीको हेरचाहको भार उठाउन उनले कबोलिन् । यताबाट यहाँको राजकाजमा हात हाल्ने मौका देवलदेवीले पाइन् । देवलदेवीकाबारे अरू चर्चा तल यथास्थानमा गरिनेछ ।

**खसराजा आदित्य मल्लको आक्रमण**

यसरी रुद्र मल्लको मृत्युपछि नेपालउपत्यकाका राजकाजमा तिरहुतेहरूको प्रभाव जम्ने सम्भावना देखिएको हुनाले वि.सं. १३८४ मा खसराजा आदित्य मल्लले नेपालउपत्यकामा आक्रमण गरे । यसताका कर्णालीप्रदेशको खसराज्य समृद्ध र झन्झन् विस्तृत हुँदै थियो । गोरखासम्म

त सोझै यी खसराजाहरूको प्रभुत्व जमिसकेको थियो । नुवाकोटमा रुद्र मल्लले कब्जा जमाएका हुनाले त्यहाँ खसराजाहरूको प्रभुत्व जम्न सकेको थिएन । अब रुद्र मल्लको मृत्युपछि केन्द्रका राजकाजमा देवलदेवीहरूको प्रभाव फैलिन लागेको हुनाले वि.सं. १३८४ मा खसराजा आदित्य मल्ल नुवाकोट कब्जा गरी उपत्यकामा पसे । यहाँ आदित्य मल्लले तीनै सहरमा आगो लगाइदिए । ललितपुर पुल्चोकमा २२ दिनसम्म घेरा हालेर बसे । त्यसो गरेपछि मात्र चैत्र शुक्ल पूर्णिमाका दिन ललितपुरभित्र पस्न उनी समर्थ भए । यसरी आदित्य मल्लको आक्रमण पनि निकै भयङ्कर रहेको थियो । आदित्य मल्लको आक्रमणलाई गोपालवंशावलीकारले यसरी लेखेका छन्–

> "स ४४८ फाल्गुण शुक्ल सप्तमी खसिया राजा आदीतमलया कटकन वस्यम् नवक्वाठ कास्यम् ङन्हुलिव, लि शाखरक्वाठ कासन, लिन्दुम्बिक्व, स्वन्देश मे चोसन, यह्नं पुलबहीरिस थाकन याङ पुंङा दिन २२ मचाल्व ॥" (४६ पत्र)
>
> "तत्रान्तरे आदितमल नेपाल प्रविष्ट ॥ सम्वत् ४४८ चैत्रपूर्णिमी" (२७ पत्र)

[ने.सं. ४४८ (वि.सं. १३८४) फाल्गुन शुक्ल सप्तमीका दिन खसराजा आदित्य मल्ल लड्न आए; नुवाकोट कब्जा गरे; पाँच दिनपछि शाखरक्वाठ कब्जा गरी (उपत्यका) भित्र पसे । तीनै सहरमा आगो लगाइदिए । ललितपुर पुलबहिलमा रहेर २२ दिनसम्म घेरा हालेर बसे । तर किल्ला फुटेन ।

त्यसैबीच ने.सं. ४४८ (वि.सं. १३८४) चैत्र शुक्ल पूर्णिमाका दिन आदित्य मल्ल नेपालउपत्यकाभित्र पसे ।]

आदित्य मल्ल ललितपुरमा पसेपछि के घटना घट्यो, यताबाट खुल्दैन तर केशरपुस्तकालयमा रहेको गोपालवंशावलीकै अर्को सङ्क्षिप्तप्रतिबाट यसबारे अलि बढ्ता कुरा खुल्छ । जस्तै–

> "तत्रान्ते आदित्यमल्ल नेपादि प्रविष्ट ॥ सम्वत् ४४८ चै शु १५ उत्राफाल्गुनी शुक्लदिने ललितग्रामे दण्डेन भवति ॥"

यसबाट आदित्य मल्लले ललितपुरमा 'दण्ड' का रूपमा कर उठाएका थिए भन्ने थाहा पाइन्छ । यसरी सक्दो आर्थिक लाभ उठाई आदित्य मल्ल स्वदेश फर्केको बुझिन्छ । यसबेला उता तिरहुतमा हरसिंहदेवहरूको पतन भइसकेको थियो । यता उपत्यकामा पनि रुद्र मल्लको मृत्यु भइसकेको थियो । यसो हुनाले आदित्य मल्लसँग टक्कर लिन सक्ने शक्तिको यहाँ अभाव थियो ।

**नायकदेवीको विवाह**

यसताका केन्द्रको गद्दीमा राजा अरि मल्ल बसे तापनि उनले भारादारहरूलाई राम्ररी कज्याउन सकेका थिएनन् । रुद्र मल्लकी उत्तराधिकारीका रूपमा नायकदेवी रहेकी हुनाले एक पक्षले उनीलाई हतियार बनाई शासनको बागडोर आफ्नो हातमा लिने प्रयास गरिरहेको थियो । यस पक्षको नेतृत्व रुद्र मल्लकी आमा पदुमलदेवीले गरेकी थिइन् । देवलदेवीले यसका साथ दिएकी थिइन् । वि.सं. १३८६ मा नायकदेवीको विवाहका लागि वरको खोजी हुन लाग्यो । यसै प्रसङ्गमा काशीको राजवंशका कुमार हरिचन्द्र र गोपालचन्द्र दुलाहाका रूपमा युथुनिमम् दरबारमा भित्र्याइए र यसै साल माघमा हरिचन्द्रको नायकदेवीसँग र गोपालचन्द्रको कामादेवी भन्नेसँग विवाह सम्पन्न भयो । गोपालवंशावलीकारले नायकदेवीको विवाहको वर्णन यसरी गरेका छन्–

> "अत्रान्तरे काशेस्वरवस्संजश्रीहरिचन्ददेवस मानवेनः विवाहङ्करोति श्रीनायकदेवी" (२७ पत्र)
>
> "स ४५० पोक्ष वद्धि १३ युथनिमंस ठाकुर मदो निमितिन कोवने गाहरपं हा कुमरटो नेम्ह दुन्ताटो चनिगल ... हरिचन्ददेवस गोपालदेवस व्याह कामादेविस ॥" (४६ पत्र)

[यसपछि काशीका राजाको वंशमा जन्मेका, मानवगोत्रका श्रीहरिचन्द्रदेवसँग श्रीनायकदेवीको विवाह भयो ।

ने.सं. ४५० (वि.सं. १३८६) पौष कृष्ण त्रयोदशीका दिन युथुनिमंमा ठाकुर नभएका हुँदा कोवने (दक्षिण मधेसतिर) पसी दुई जना राजकुमार भित्र्याइए । चनिगल ... (नायकदेवीसँग) हरिचन्द्रदेवको र कामादेवीसँग गोपालचन्द्रदेवको विवाह भयो ।]

नायकदेवी रुद्र मल्लकी हकवाला भएकी हुनाले नायकदेवीका पतिका हैसियतले हरिचन्द्रको प्रभाव बढ्नु स्वाभाविक थियो । यो कुरा केही भारादारहरूलाई मन परेन । यो कुरा थाहा पाएर नायकदेवीकी बज्यै पदुमलदेवीलाई चिन्ता पर्न थाल्यो । यसबेला उनी ६६ वर्षकी बूढी भइसकेकी थिइन् । यसैले वि.सं. १३८८ फाल्गुनमा पदुमलदेवीले आफ्ना नातिनीज्वाइँको रक्षाका लागि केही भारादारसँग सहायता मागिन् । यो कुरा गोपालवंशावलीकारले यसरी लेखेका छन्–

> "स ४५२ फाल्गुन शुद्धि ३ वम्बी गोछे जातन भास, क्वाछें राजेन्द्रपाल भास चोछे त्रंपुटि भास श्रीपदुमलदेवि ठकुरिणिजुसन छय जीरिस लागरपम् पुंलिया दिनः ॥" (४९ पत्र)

[ने.सं. ४५२ (वि.सं. १३८८) फाल्गुन शुक्ल तृतीयाका दिन वम्बी गोछेंका भारादार जातन, क्वाछेंका भारादार राजेन्द्रपाल, चोछेंका भारादार त्रंपुटिलाई श्रीपदुमलदेवी ठकुरिनीले आफ्ना नातिनीज्वाइँको रक्षाको कामको अभिभारा सुम्पिन्।]

हरिचन्द्रले पनि आफ्ना अनुयायीका सहायताले विरोधीहरूलाई दमन गर्ने चेष्टा गर्न लागे। वि.सं. १३८९ आषाढमा हरिचन्द्रले बुगन्नराजदरबारमा बलैले पसेर आफ्नो विरोधमा लागेका दुई भारादारलाई मारे। एक जना प्रसिद्ध भारादार थयितलाई निकालिदिए। यो घटनाले गर्दा उनीउपरको विरोध झन् बढ्यो। गोपालवंशावलीकारले उक्त घटनाको उल्लेख यसरी गरेका छन्–

> "स ४५२ आषाढ वदि ५ हरिचन्द्रदेवस चा २ वस्यम् बुगन्नराजकुलस कुलन दुम्बीया दुश्यङ्ग कस्त भाटोम् केसराम दलवलिटोम् थ्व सतिभेस्यं मधराम भाटों देशपतिटों उभेस्याङा थयित भाटो पील्लीया॥" (४७ पत्र)

[ने.सं. ४५२ (वि.सं. १३८९) आषाढ कृष्ण पञ्चमीका दिन राति हरिचन्द्रदेव आई भारादार दुश्यङ्ख कस्त, केसराम दलवयि, मडिकसहित बलैले बुगन्नराजदरबारमा पसे। यसको भोलिपल्ट भारादार मधराम र देशपति दुवैलाई मारे। भारादार थयितलाई निकालिदिए।]

## पदुमलदेवीको मृत्यु

वि.सं १३८९ आश्विनमा पदुमलदेवीको मृत्यु भयो। त्यसबेला उनी ६७ वर्षकी थिइन्। छोरा रुद्र मल्ललाई भरखरको चढ्दो उमेरमै राजकाजमा उतार्ने काम पदुमलदेवीले नै गरेकी थिइन्। त्यसैले ने.सं. ४३२ मै रुद्र मल्लका साथै पदुमलदेवीको विजयराज्यमा भनी गोपालवंशावलीकारले लेखेका छन्। त्यसपछिको बीस वर्षको उपत्यकाका राजकाजमा पदुमलदेवीको प्रभाव रहेको पाइन्छ। यसकारण प्रसिद्ध अरू शासकको जस्तै पदुमलदेवीको पनि मृत्युतिथि गोपालवंशावलीकारले टिपेका छन्। जस्तै–

> "सं. ४५२ अश्विनि शुद्धि २ श्रीश्रीपदुमलदेवीस अस्तः भोगवर्ष ६७ मा २" (४७ पत्र)

[ने.सं. ४५२ (वि.सं. १३८९) आश्विन शुक्ल द्वितीयाका दिन, श्रीश्रीपदुमलदेवीको मृत्यु भयो। त्यसबेला उनी ६७ वर्ष २ महिनाकी थिइन्।]

## हरिचन्द्रदेवको वध

पदुमलदेवीको मृत्यु भएपछि हरिचन्द्रको पक्ष अलि कमजोर भयो। उनलाई आफ्नो ससुराको दरबार युथुनिमम्मा टिक्न पनि गाह्रो भयो। वि.सं. १३९० वैशाखमा भारादार थयितले उनीसँग बदला लिन सबैलाई

एक गठ पारी हरिचन्द्रका विरोधमा हतियार उठाए । हरिचन्द्र त्यहाँ टिक्न नसकी कान्तिपुरमा शरण पर्न आए । यसको दुई वर्षपछि वि.सं. १३९२ ज्येष्ठमा भारादारहरूले विष प्रयोग गरेका हुँदा हरिचन्द्रको मृत्यु भयो । उक्त कुराको वर्णन गोपालवंशावलीकारले यसरी गरेका छन्–

"स ४५३ वेशाष वदि ३ तिपुर हरिचन्द्र कुमरस युथुनिम स्वडन दुंबिव । थयित भासन खण्ड लोठे टंङास एकसर समस्तसन, कोलाक्व याङ ... थ्व लिव कुमरस ब्यसन वङा यम्बुस बिज्याक्वटोम् ॥" (४७ पत्र)

"कतिपयवर्षान्तरेण शिष्टेन विष भक्षयतेन मृत्यु" (२७ पत्र)

"सं. ४५५ जेष्ठ शुद्धि ६ श्रीहरिचन्द्रदेवस बलन मृत्यु दिनः ॥" (४७ पत्र)

[ने.सं. ४५३ (वि.सं. १३९०) वैशाख कृष्ण तृतीयाका दिन हरिचन्द्र कुमर तीन वर्षपछि तिपुर यिथुनिमंमा पसे । भारादार थयितले हतियार उठाई सारालाई एक गठ पारे । ... यसपछि हरिचन्द कुमर भागी कान्तिपुरमा जानुभयो ।

विवाहका केही वर्षपछि शिष्ट (श्रेष्ठ= भारादार)ले विष खुवाएका हुनाले हरिचन्द्र कुमरको मृत्यु भयो ।

[ने.सं. ४५५ (वि.सं. १३९२) ज्येष्ठ शुक्ल षष्ठी श्रीहरिचन्द्रदेवको बलैले मृत्यु भयो ।]

**नायकदेवीको दोस्रो विवाह**

पति हरिचन्द्रदेव पनि यसरी मारिएपछि नायकदेवी टुहुरीजस्तै भइन् । तर चतुर देवलदेवीले नायकदेवीका हेरचाहको अभिभारा पूर्ववत् लिएकी हुनाले उनी देवलदेवीकै रेखदेखमा रहन लागिन् । एकै घरमा रहेका हुँदा देवलदेवीका छोरा जगत्सिंह र नायकदेवीबीच नजिकको सम्पर्क रहन लाग्यो । दुवै चढ्दो उमेरका थिए । यसो हुँदा उक्त नजिकको सम्बन्ध प्रेमका रूपमा परिणत भयो । अनि यसले पछि विवाहको रूप लियो । यसरी विधवा नायकदेवीको जगत्सिंहसँग दोस्रो विवाह भयो । परन्तु यस विवाहलाई गोपालवंशावलीकारले विधिपूर्वकको विवाहमा गनेका छैनन् । जगत्सिंह कुमरले नायकदेवीलाई संगृहिणी भार्या (ल्याइते स्वास्नी) बनाए भनी गोपालवंशावलीकारले लेखेका छन्–

"कर्ण्णाटकवंशज श्रीजगत्सिंहदेव समाहित संगृत्य कृतं नायकदेवी ॥" (२८ पत्र)

[कर्णाटवंशज श्रीजगत्सिंहदेवले बिस्तारै नायकदेवीलाई ल्याइते पत्नी बनाए ।]

**गोपालचन्द्र देवको वध**

उता दाजु हरिचन्द्र मारिएपछि उनका भाइ गोपालचन्द्र अघि सरी राजकाजमा उत्रन खोजे । यसो हुँदा स्वभावतः जगत्‌सिंह कुमरसँग गोपालचन्द्रको टक्कर पऱ्यो । भक्तपुरमा टिक्न नसकी गोपालचन्द्र भक्तपुर छोडी ललितपुरमा गई रहन लागे । यस घटनाको वर्णन गोपालवंशावलीकारले यसरी गरेका छन्–

> "तदनन्तर तस्य देवस्य भ्रात श्रीगोपालदेवमुपस्थितं ... तत दृष्टांतरेण स गोपालदेव श्रीभक्तापुरी त्यक्त्वा ललितापुर गम्यताः ।" (२७–२८ पत्र)

[त्यसपछि ती हरिचन्द्रदेवका भाइ श्रीगोपालदेव आइपुगे । त्यसपछि गडबडी देखेर ती गोपालदेव भक्तपुर छोडी ललितपुरमा गए ।]

जगत्‌सिंह कुमरकी आमा देवलदेवी साहसी र चतुर थिइन् । परिस्थितिबाट लाभ उठाउन उनी ज्यादै सिपालु थिइन् । गोपालदेव आई आफ्नो प्रभुत्व जमाउने चेष्टा गर्न थालेपछि देवलदेवीले त्यसबेलाका प्रसिद्ध बलिया भारादारहरूलाई आफ्नो पक्षमा मिलाउने चेष्टा गर्न थालिन् । उनको यस प्रयासस्वरूप महाथ (महामन्त्री) अनेकराम, अभयराम, थयित आदि भारादारहरू उनको पक्षमा मिल्न आए । यसरी देवलदेवीले आफ्नो स्थिति बलियो पारिन् । यस कुराको वर्णन गोपालवंशावलीकारले यसरी गरेका छन्–

> "स ४५७ ... थिंसला गाक्व पाडो कोन्हु अभेराम मूलमीटोम् युथुनिमंस सेवा ववटों, दिन खुलिव यंटाक्वाठ ठोङा, दिन ८ लिव श्रीदेवलदेविसके सेवा लाक्वटो अभेराम मुलमीसन, दिन ८ लिव वंटापीठिस सवद जुव. भ्वंत अनेखराम महाथ भास अभेराम मुलमीस थयित भास दिनस सवद जुरोम् ॥" (४८-४९ पत्र)

[ने.सं. ४५७ (वि.सं. १३९३) मार्ग कृष्ण प्रतिपदाको दिन अभयराम मूलमी युथुनिमम्मा सेवा गर्न पुगे । ६ दिनपछि यंटाकिल्ला भत्काइयो । आठ दिनपछि अभयराम मूलमीले देवलदेवीको सेवा गरे । आठ दिनपछि वंटापीठमा शपथ खाइयो । बनेपाली भारादार अनेकराम महाथ, अभयराम मूलमी, थयित भाले दिउँसो शपथ खाए ।]

यसरी साँठगाँठ मिलाएपछि वि.सं. १३९४ ज्येष्ठमा जगत्‌सिंह कुमरले अभयराम, थयितसाथ ललितपुर मनिगलमा पुगी गोपालचन्द्रलाई त्यहाँबाट धपाइदिए । यसपछि गोपालचन्द्र यताउति भागी रहन लागे । गोपालवंशावलीकारले यो कुरा यसरी लेखेका छन्–

"स ४५७ जेष्ठ कृष्ण अमावास्या कोन्हु तिरहुतिया जगतशिंह कुमरस मनिगलस दुन्ताटोम् संती गोपालचन्द कुमरटों पिंलुया. थ्व च्यन्त याक्व अभेराम मुलमीस थयीत भास उभे ।" (४९ पत्र)

[ने.सं. ४५७ (वि.सं. १३९४) ज्येष्ठ कृष्ण अमावास्याका दिन तिरहुते जगत्सिंह कुमर मनिगलमा पसे । भोलिपल्ट गोपालचन्द्र कुमरलाई निकाले । यसको बन्दोबस्त गर्ने अभयराम मूलमी र थयित भा थिए ।]

वि.सं. १३९४ पौषमा अनेकराम, अभयराम, थयित यी भारादारहरूसँग मिली देवलदेवीले केही प्रदेशमा आफ्नो अधिकार जमाइन् । यसरी जगत्सिंहका पक्ष गोपालचन्द्रका पक्षभन्दा निकै शक्तिशाली हुँदै थियो । देवलदेवीको चतुरता नै त्यसमा कारण रहेको स्पष्ट छ । उक्त कुराको उल्लेख गोपालवंशावलीकारले यसरी गरेका छन्–

"स ४५८ पोष्य वदि ७ श्रीदेवलदेवी ठकुरिणिजुसन थव स्यष्ट अ(भे)राम मुलमीस, थयित भाटो ... थ्वपनिसन प्यको राज थमु बिज्याङ काया ... थ्व च्यंत याक्व अनेखराम महाथस" (४९-५० पत्र)

[ने.सं. ४५८ (वि.सं. १३९४) पौष कृष्ण सप्तमीका दिन श्रीदेवलदेवी ठकुरिनीले आफ्ना भारादार अभयराम मूलमी थयितहरूसाथ आफैं जानुभई प्यको राज (?) लिनुभयो । महाथ अनेकरामले यसको बन्दोबस्त गरेका थिए ।]

यता वि.सं. १३९६ पौषमा जोगराम मूलमीसँग मिली गोपालचन्दले टोखाकिल्लामा पसी त्यहाँका मानिसका सहायताले विद्रोह गरे । यो कुरा थाहा पाई भोलिपल्टै जगत्सिंहका पक्षले तिपुरबाट टोखामा हमला गऱ्यो । किल्लाभित्र पसी भित्र बसेका सबैलाई कैद गरे । अनि गोपालचन्द्र काटिए । जोगरामचाहिँ भाग्न खोजेका थिए । तर उनी पनि समातिए । यसरी एक जना ठूला शत्रु सखाप गरिएको हुनाले यसबाट जगत्सिंहहरूको बल बढ्यो । यसपछि पनि जगत्सिंह, देवलदेवीहरूले आफ्नो बल बढाउँदै गए । गोपालचन्द्र मारिएको घटनाको चर्चा गोपालवंशालीकारले यसरी गरेका छन्–

"विहारकोटस्थित जोगराम मुलमी जोङा विहारपात्र एकीभुतेन टोंखाकोट प्रविसतिः ततो प्रवेशान्तरे दितीय रात्रे जोगरामेन, श्रीगोपालदेव त्यक्त्वा पलायं गता ॥ पश्चात कोटाशृत्य मेकाकी स्थित । श्रीजगतसिंह कुह्मरस्य परिजने शिर छेत्वा श्रीगोपालदेव मृत्यु" (२८ पत्र)

"स ४६० पोष्य वदि ८ ... खुन्हुलिव जोग्राम मुलमीस श्रीगोपालचन्ददेवस वङ टांखा कुलन काया. सन्ती तिपुर हाथार वङ, लिकाया दुन्दङ चोङ्गव स्मस्त लाङा, अफह्नसडं म्ह २० श्रीगोपालदेवस म्वण्ड डेंङा जोग्राम मुलमीटो ज्वङहा ।" (५० पत्र)

[गोपालदेव विहार किल्लामा बसेका जोगराम मूलमीलाई साथ लिई विहारकिल्लाका भारादारलाई एक गठ पारी टोखा किल्लामा पसे । त्यसको भोलिपल्ट राति श्रीगोपालदेवलाई छोडी जोगराम भागे । पछि किल्लामा एक्लै परेका गोपालदेवलाई श्रीजगत्सिंह कुमरका मानिसले टाउको काटी मारे ।

ने.सं. ४६० (वि.सं. १३९६) पौष कृष्ण अष्टमी ... यसको आठ दिनपछि जोगराम मूलमी र श्रीगोपालचन्द्रदेव टोखामा गए । टोखाले विद्रोह गऱ्यो । भोलिपल्ट तिपुर लड्न हिँड्यो । टोखा फिर्ता गराइयो । भित्र बसेका सारा समातिए । विद्रोह गर्नेमा बीस जना थिए । श्रीगोपालदेव काटिए । जोगराम पनि समातिए ।]

**आन्तरिक गडबडी र अर्को खस आक्रमण**

यसरी केन्द्रमा अधिकार हत्याउन स्पष्ट रूपमा दाउपेच, काटमार, गुटबन्दी चलेका हुँदा केन्द्र स्वभावतः कमजोर बन्दै गइरहेको थियो । यस अवस्थामा नुवाकोट, फर्पिङ, बनेपा, पलाञ्चोक आदिले स्वतन्त्र हुने चेष्टा गर्न थाले । गोपालवंशावलीकारले यस कुराको टिपोट गरेका छन् । विचारार्थ तिनलाई यहाँ उद्धृत गरिन्छ–

"स ४५२ श्रावण शुदि ९ भ्वन्त श्रीजयराजदेवस चोङा ब्यनाप्पाक्वाठ महाथ अनेखराम भारोस वो एकश्र समुचयसवो छिपन्त याङ क्वाठ पुंङा थ्वस थेथे अपनाह याङ ..." (४७ पत्र)

[ने.सं. ४५२ (वि.सं. १३८९) श्रावण शुक्ल नवमी, बनेपाली श्रीराजदेव बसेको बनेपाकोटमा महाथ अनेकराम र अरू सबै मिली घेरा हालियो । यसमा परस्परमा कुरा मिलाई मेल गरियो । ...]

"स ४५२ वेशाख कृष्ण द्वितीया नवक्वाठ गज वो पलाखचो जयराजदेवस ब्राह्मखास डोया दिवश" (४६ पत्र)

[ने.सं. ४५२ (वि.सं. १३८९) वैशाख कृष्ण द्वितीया, नुवाकोटका गज र पलाञ्चोकका जयराजदेवले ब्राह्मखामा भेटघाट गरे ।]

"स ४५३ चेत्र शुद्धि १३ डंवाक्वाठ कुलनं काया भोंतन कुल याक्व ..." (४६ पत्र)

[ने.सं. ४५३ (वि.सं. १३९०) चैत्र शुक्ल त्रयोदशी, नुवाकोटले विद्रोह गऱ्यो; बनेपाले पनि विद्रोह गऱ्यो । ...]

"स ४५३ भार्द्दपद कृष्णाष्टमी तिपुर मनिगल छिपन्त याङ फनपिं पुंद वंङा मचाल्व. बुड वो तिपुर मनिगलनं लुंकास्यं ।" (४८ पत्र)

[ने. सं. ४५३ (वि सं १३९०) भाद्र कृष्ण अष्टमीका दिन त्रिपुर र मनिगल एक भई मिली फर्पिङमा हमला गर्न गए । तर खुलेन । बुड, तिपुर र मनिगलले सुन बाँडिलिए ।]

"स ४५४ माघ कृष्ण त्रयोदशी बोद्यं देश मे चोचका अनेखराम महाथ भास्यं भ्वन्त कस्तटो थुमु वंङ ..." (४८ पत्र)

"स ४५४ द्विराषाढ वदि ११ नवक्वाठ कुल याङा जशींहदेवसन गजय, लास:"

"स ४५४ दिराषाढ वद्धि ११ नवक्वाठ कुल जुव गजया काय रोहिदाश कुमरया लकस जशिंहदेवस्यं तिपुर वा ल्हास्यंलि चोम्यछे म्वाङ, थमु राज याङा, थ्वतेस पीलीलिव गज थं लुवस्यं तिपुर भोन्त मनिगल फनपिं थ्वते छिपन्त याङ नवक्वाठ पुंद वंङा मचाल्व, लिनप्वंङगज लास्य वंग्व सेला गाक्व तीह्निशि कोन्हु" (४८ पत्र)

[ने.सं. ४५४ (वि.सं. १३९०) माघ कृष्ण त्रयोदशीका दिन अनेकराम महाथ भा, कस्त भा आफैं गई बोदे देशमा आगो लगाए । ...

ने.सं. ४५४ (वि.सं. १३९१) अधिक आषाढ कृष्ण एकादशी, नुवाकोटमा गजका विरुद्ध जयसिंहदेवले विद्रोह गरे ।

ने.सं. ४५४ (वि.सं. १३९१) अधिक आषाढ कृष्ण एकादशी, नुवाकोटमा विद्रोह भयो । गजका छोरा रोहिदास कुमरका मद्दतले जयसिंहदेवले त्रिपुरलाई दबाई ... आफैं राज्य गरे । यसको चार महिनापछि गजले आफैं अघि सरी त्रिपुर, बनेपा, मनिगल र फर्पिङसँग एक भई मिली नुवाकोटमा घेरा हाले; किल्ला फुटेन । अनि घेरा हाल्न गएका गज माघ कृष्ण त्रयोदशीका दिन फर्केर आए ।]

गोपालवंशावलीकारको यी वर्णनबाट पतनतिर ढल्कँदै गइरहेको तात्कालिक राजनैतिक अवस्थाको स्पष्ट झलक हामी पाउँछौं । केन्द्रमा आएको कमजोरीबाट नुवाकोट आदिका सामन्त शासकले लाभ उठाउन खोजेको पनि हामी पाउँछौं । अवसर पाउनेबित्तिकै केन्द्रको प्रभुत्वबाट मुक्त भई स्वतन्त्र हुने चेष्टा यसताका सामन्त शासकहरू गर्दथे । यस अवसरमा चल्तापुर्जा भई अगाडि देखापरेका नुवाकोटका सामन्त शासक 'गज' हुन् ।

ती गज पहिले पलाञ्चोकका राजदेवसँग साँठगाँठ गर्न पुगे । यसको लगत्तैपछि नुवाकोटले विद्रोह गर्ने चेष्टा गऱ्यो । बनेपाले पनि विद्रोह गर्ने चेष्टा गऱ्यो । तर यो विद्रोह सफल भएन । यसताका विद्रोह हुने र त्यसलाई दबाउने यो क्रम केही वर्ष चलिरह्यो । अर्को कुरा, नुवाकोटमा अवसरवादिताको मात्र अनुसरण गर्दा प्रायः देखापर्ने परिणाम देखापर्न थाल्यो । अर्थात् अब स्वयम् नुवाकोटका सामन्त शासकहरूमै गृहकलह हुन थाल्यो । गजलाई झुक्याएर जयसिंहदेवले आफैं स्वतन्त्र भएर शासन गर्न थाले । यसको चार महिनापछि गजले तिपुर, बनेपा, मनिगल (ललितपुर) र फर्पिङसँग गुहार मागी नुवाकोटमा हमला गर्न पुगे । तर नुवाकोटेको किल्ला फुटाउन सकेनन् भन्ने कुरा माथिको गोपालवंशावली–कारको वर्णनबाट थाहा पाइन्छ ।

यसताका केन्द्रमा तिरहुत-समर्थक र खस-समर्थक पक्षमा स्पष्ट रूपमा कलह हुँदै थियो । आफ्ना समर्थक पक्षलाई गुहार दिन वि.सं. १३९१ मा खससैन्य नेपालउपत्यकामा पस्यो । खससैन्य भाद्रमा नेपालउपत्यका पस्यो, फाल्गुनमा मात्र स्वदेश फर्क्यो । यसरी ६ महिना जति खससैन्य यहाँ बस्यो । यसबीच खससैन्यसँग एकचोटिको मुठभेडमा एक जना भारादार र अरू चालीस जना जति परेका थिए । फर्कने बेलामा खससैन्यले यहाँ दण्डका रूपमा पैसा उठाई लियो । खससैन्य फर्कंदा साँखुको बाटो फर्केको थियो । त्यसबेला खससैन्यले साँखुमा आगो लगाएको थियो । यस कुराको वर्णन गोपालवंशावलीकारले यसरी गरेका छन्–

> "स ४५४ भाद्रपद शुद्धि ७ थयित भाटो यह्न दुम्बिया सखुपतिराजटो दुम्बीच मलाक्व खशियान स्याङा एकतन अङ्क ४० च्यतला गाक्व पाडो कोन्हु लास्य वङ्गव लिस डण्ड कास्यंनि सङ्गा मे चोया खशियानम् ॥ (४८ पत्र)

[ने.सं. ४५४ (वि.सं. १३९१) भाद्र शुक्ल सप्तमीका दिन थयित भा ललितपुरभित्र पसे । सखुपतिराजचाहिँ भित्र पस्न नपाउँदै खसद्वारा मारिए । अरू जम्मा चालीस जना परे । फाल्गुन कृष्ण प्रतिपदाका दिन दण्ड उठाईकन खसहरू फर्के । खसहरूले साँखुमा आगो लगाए ।]

यहाँ आक्रमण गर्ने खसराजाको नामोल्लेख भएको छैन । तापनि यो घटना कर्णालीप्रदेशका खसराजा पुण्य मल्लको पालामा भएका हो भन्ने बुझ्न सकिन्छ । यसताका कर्णालीप्रदेशमा राजा पुण्य मल्ल थिए भन्ने कुरा उनका ताम्रपत्रबाट प्रमाणित हुन्छ । फेरि वि.सं. १३९४ को एक ताम्रपत्रमा नेपाल (उपत्यका) आदिलाई 'करद' पारेको छु भनी पुण्य मल्लले गर्व गरेका छन् । विचारार्थ त्यस ताम्रपत्रको अलिकता अंश यहाँ उद्धृत गरिएको छ–

> "...करदीकृतकोंकणकर्णाटलाटमुरलकेरलडहालांगवंगकालिंगमिथिलमालवनेपालगुर्जरजालंधरांध्रप्रमुखमेदिनीनाथसंसेव्यमानास्था

नीतिनिकेतानाजिरे । श्रीमति सेंजापुरे । परमभट्टारकमहा–
राजाधिराजपरमेश्वरपरमसौगत...श्रीपुण्यमल्लदेवः
सान्तःपुरसकुमाराः सुचिरं विजयिनो भवन्तु ।"

[... कर दिन बनाइएका कोंकण, कर्णाट, लाट, मुरल, केरल, डहाल, अङ्ग, वङ्ग, कलिङ्ग, मिथिल, मालव, नेपाल, गुर्जर, जालंधर, आन्ध्र आदिका राजाहरूले सेवा गरेका सलामी दिने ठाउँको आँगन भएको श्रीसम्पन्न सेंजा सहरमा । परमभट्टारक महाराजाधिराज परमेश्वर परमसौगत श्री पुण्य मल्लदेवको र उहाँका जहान, छोरा, छोरीहरूको धेरै कालसम्म जय भइरहुन् ।]

यहाँ उल्लिखित कोंकण आदि सबै देशलाई पुण्य मल्लले 'करद' पारेका थिए भन्ने कुरामा कुनै सत्यता छैन । यसताका आफूले थाहा पाएका वरपरका देशलाई अधीन पारेको छु भनी झूटो प्रशस्ति लेख्नेलेखाउने चलनजस्तै चलेको थियो । यसै चलनअनुसार थाहा पाएजति देशलाई अनुप्रास मिलाई यहाँ दिइएको हो । तर वि.सं. १३९१ मा खससैन्यले नेपालउपत्यकामा आक्रमण गरी कर उठाएको देखिनाले नेपाल (उपत्यका)लाई 'करद' भनी लेखिएकोमा चाहिँ केही सत्यता थियो भन्ने देखिएको छ ।

जितारि मल्ल, रिपु मल्ल, आदित्य मल्ल जस्तै स्वयम् पुण्य मल्लचाहिँ नेपालउपत्यकामा नआएको अनुमान हुन्छ । खसराजा पुण्य मल्लको सैन्यमात्र यहाँ गुहार दिन आएको थियो । यसै हुँदा गोपालवंशावलीकारले पुण्य मल्लको नामोल्लेख नगरेको बुझिन्छ ।

यस पटक ६ महिनासम्म खससैन्य नेपालउपत्यकामा रहेको देखिएको छ । योभन्दा पहिले खससैन्यले यहाँ आक्रमण गर्दा यति लामो समयसम्म खससैन्य यहाँ रहेको थिएन । यसबाट उपत्यकाका शासकवर्गमध्ये एक पक्षका गुहारका लागि खससैन्य यहाँ रहेको स्पष्ट छ । माथि उद्धृत खस-आक्रमणसम्बन्धी गोपालवंशावलीकारको वर्णनबाट खससैन्यले प्रसिद्ध भारादार थयितलाई मार्न खोजेको थियो । तर उनले ललितपुरभित्र पसी ज्यान जोगाए भन्ने बुझिन्छ । भारादार थयित तिरहुतेहरूका समर्थक थिए । यसताका देवलदेवी, जगत्सिंह कुमर आदि तिरहुतेपक्ष भक्तपुर-दरबारमा आई रहेका थिए । यिनीहरू पहिले शरणार्थीका रूपमा यहाँ पसेका थिए । तर यहाँको परिस्थितिबाट लाभ उठाई यिनीहरूले यहाँ आफ्नो प्रभुत्व जमाउन भित्रभित्रबाट कोसिस गरिरहेका थिए । देवलदेवीहरूको प्रभुत्व बढाउनामा यी प्रसिद्ध भारादार थयितको पनि निकै हात थियो । यस कुराको चर्चा माथि नै परिसकेको छ । यसआधारमा विचार गर्दा यसपटक पनि तिरहुतेपक्षकै विरुद्ध गुहार दिन खससैन्य यहाँ परेको र लामो

कालसम्म यहाँ रहेको बुझिन्छ । फर्कने बेलामा दण्डका रूपमा अर्थलाभ गरी खससैन्य फर्केको देखिन्छ ।

**जगत्सिंह कुमर कैदमा**

खससैन्य फर्केपछि हरिचन्द्रदेव मारिएको, अनि तिरहुते जगत्सिंह कुमर, देवलदेवीहरूको प्रभुत्व बढेको, गोपालदेव मारिएको, नायकदेवीसँग जगत्सिंहको दोस्रो विवाह भएको इत्यादि त्यसबेला छिटोछिटो परिवर्तन भइरहेको राजनैतिक अवस्थाको चित्रण माथि केही गरिसकिएको छ । गोपालदेव मारिएपछि केही काल जगत्सिंहले राज चलाए भन्ने कुरा गोपालवंशावलीकारले "तदनन्तरे कतिपयदिवसे श्रीजगतसिंहकुमरेण राज भुंजितम्" भनी व्यक्त गरेका छन् जुन कुरा सत्य हो । तर जगत्सिंह कुमरले कहिलेदेखि कहिलेसम्म कुन हैसियतले राज चलाए भन्ने कुरा खुल्दैन । साथै गोपालवंशावलीकारले "पश्चात्त कुम्हरबंधनं भवेत्" भनी जगत्सिंह कुम्हर बन्धनमा परेको कुरा पनि लेखेका छन् । तर जगत्सिंह कुमर कसरी र कहिले बन्धनमा परे भन्ने कुरा पनि गोपालवंशावलीकारले खुलाएर लेखेका छैनन् । आश्चर्यको कुरा, जगत्सिंह कुमर बन्धनमा परे पनि उनकी आमा देवलदेवीको प्रभावमा भने कुनै असर परेको पाइँदैन । उल्टो देवलदेवीले भने परिस्थितिको सामना गरी आफ्नो प्रभुत्व बढाउँदै गएको पाइन्छ । यस अवस्थामा जगत्सिंह कैदमा पर्नु एक रहस्यमय घटना बनेको छ । शायद जगत्सिंहको मृत्यु कैदमै भएको बुझिन्छ । यस विषयमा पनि गोपालवंशावलीकार मौन छन् ।

**राजगद्दी खाली**

वि.सं. १४०१ आश्विनमा ठूलो भूकम्प गयो । यसको भोलिपल्ट गद्दीनसिन राजा अरि मल्लको देउपाटनमा मृत्यु भयो । बाहिर पूर्ण राजकीय सम्मान रहे तापनि अरि मल्ल नाममात्रका राजा थिए । राजधानी भक्तपुरमा त्यति ठूलठूला घटनाहरू घटिरहे तापनि राजा अरि मल्ल मूक दर्शक भएर बसेको आभास पाइन्छ । देउपाटनमा भूकम्पले गर्दा उनको मृत्यु भएको हुनाले शायद उनी भक्तपुर 'त्रिपुर' दरबारमा नबसी देउपाटनको पुरानो दरबारमा बसेको बुझिन्छ । जे होस्; ने.सं. ४६४ (वि.सं. १४०१) आश्विनमा राजा अरि मल्लको मृत्यु भएपछि केन्द्रको गद्दी तीन वर्षका लागि खाली रह्यो । यस्तो घटना विरलै भएको पाइन्छ । त्यसबेलाको अस्तव्यस्त, खिचातानीको अवस्थाले गर्दा राजगद्दीमा कसलाई राख्ने भन्ने निर्णय तीन वर्षसम्म हुन सकेन ।

**पशुपति मल्लद्वारा विद्रोह**

यसबीच पशुपति मल्लले गद्दीका लागि दावा गरेको बुझिन्छ । पशुपति मल्ल को हुन्, गोपालवंशावलीकारले खुलाएर लेखेका छैनन् । तर उनले

विद्रोह गरेको; आमासहित उनी कैदमा परेको तथा कैदमै उनको मृत्यु भएको कुरा गोपालवंशावलीकारले यसरी लेखेका छन्–

"स ४६४ चेत्र शुदि ३ जोग्राम मुलमीस सहज मुलमी थ्वते उभे जाया पशुपतिमलस ज्वंङन कपनक्वाठन तोपे पोल्यकम् तिपुरस दोह याङा ॥" (५१ पत्र)

[ने.सं. ४६४ (वि.सं. १४०१) चैत्र शुक्ल तृतीयाका दिन जोगराम मूलमी र सहज मूलमी मिली पशुपति मल्ललाई साथ लगी कपन किल्लाबाट .. त्रिपुरमा दोह गरे ।]

"पशुपतिमल टोखा चोस्यं ... स ४६६ अशिनि शुदि १ आदीतवार" (अतिरिक्त पत्र)

[ने.सं. ४६६ (वि.सं १४०३) अश्विन शुक्ल प्रतिपदा आदित्यवारका दिन पशुपति मल्ल टोखा बसे ।]

"स ४६८ जेष्ठ वद्धि ८ पसुपतिमलटो यद्द लु पिकास्यं ज्वङहसन भुङ्गुलछ क्वाठस थंताटों मामोस नपम् ।" (५२ पत्र)

[ने.सं. ४६८ (वि.सं. १४०५) ज्येष्ठ कृष्ण अष्टमी पशुपति मल्ललाई ललितपुरबाट निकाली, समातेर ल्याई आमासहित भुङ्गुलछेंमा राखियो ।]

"अत्रांतरे श्रीपशुपतिमल्लदेववंद्धनम् करोति" (२८ पत्र)

"स ४६९ मार्गशिर शुद्धि १२ श्रीपशुपतिमलस बंधनसवु अस्तम दिन" (५२ पत्र)

[यसबीचमा श्री पशुपति मल्लदेव कैद गरिए । ने.सं. ४६९ (वि.सं. १४०५) मार्ग शुक्ल द्वादशीका दिन कैदमै श्री पशुपति मल्लको मृत्यु भयो ।]

**जयराजदेव**

अरि मल्लको मृत्युपश्चात् तीन वर्ष गद्दी खाली भएपछि आखिर ने.सं. ४६७ (वि.सं. १४०४) श्रावणमा दुवै राजकुलका अनुमतिले, सबैका सल्लाहले जयराजदेव गद्दीमा राखिए । यस कुराको वर्णन गोपालवंशावली–कारले यसरी गरेका छन्–

"उभयराजकुलसानुमतेन, सम्वत् ४६७ श्रावणवदि ४ श्रीजयराजदेवस्य राजा कृत्यः सर्व्वसंमतेन" (२८ पत्र)

[ने.सं. ४६७ (वि.सं. १४०४) श्रावण कृष्ण चतुर्थीका दिन दुवै राजकुलका अनुमतिले, सबैका सल्लाहले श्री जयराजदेव राजा बनाइए ।]

यी जयराजदेव राजा जयानन्ददेवका छोरा हुन् । तर उनी विवाहितेपट्टिका थिएनन्; ल्याइतेपट्टिका थिए । यस कुराको वर्णन गोपालवंशावलीकारले यसरी गरेका छन्–

"स. ४३७ फाल्गुणकृष्णदशमी धनेष्ठ बृहस्पतिवार श्रीश्रीजयानंद राजास पुत्र श्रीजयराजदेवसंग्रहनी भार्यास पलाखचोस जातः ॥" (४५ पत्र)

[ने.सं. ४३७ (वि.स. १३७३) फाल्गुन कृष्ण दशमी धनिष्ठा नक्षत्र बृहस्पतिवारका दिन पलाञ्चोकमा ल्याइते स्वास्नीबाट श्री जयानन्ददेवका छोरा जयराजदेवको जन्म भयो ।]

ल्याइते भए पनि जयराजदेवकी आमा प्रसिद्ध शासककुलकै थिइन्; ललितपुर उत्तरविहारका पाल महापात्र राजेन्द्रपालकी छोरी जयराजदेवकी आमा थिइन् । यस कुराको चर्चा केशरपुस्तकालयको सङ्क्षिप्त गोपालवंशावलीमा यसरी गरिएको छ- "तस्य पिता जया(नन्द)देव, माता ललितग्रामे उत्तरविहारराजेन्द्रपालपात्रस्य पुत्री" । यसकारण राजदेवले निकै अगाडिदेखि गद्दीमा बस्ने प्रयास गरिहेका थिए । राजा अरि मल्ल जीवित छँदै राजदेवले आफ्नो प्रभुत्व जमाउन चेष्टा गरेका थिए । यस कुराको चर्चा माथि परिसकेको हुँदा यहाँ फेरि दोहऱ्याउनु आवश्यक देखिँदैन ।

नयाँ समर्थ राजा जयराजदेव गद्दीमा बसे तापनि राजकाजमा स्थिरता आउन सकेन; आन्तरिक गडबडी कायम रह्यो । सुरुमा राजा राजदेवसँग देवलदेवीका पक्षको मेल नै रहेको देखिन्छ । यसमा एउटा कारण राजा राजदेवको विवाह तिरहुते कर्णाटवंशज कन्यासँग हुनु रहेको देखिन्छ । जे होस्; राजा जयराजदेवको शासनकालमा पनि चतुर देवलदेवीले आफ्नो अधिकार बढाउँदै लगिन्; यो कुरा गोपालवंशावलीबाट स्पष्ट थाहा पाइन्छ ।

**राजल्लदेवीको जन्म**

अब अगाडि बढ्नुभन्दा पहिले एक महत्त्वपूर्ण घटनाको चर्चा गर्नु यहाँ उपयुक्त हुन्छ । त्यो हो राजल्लदेवीको जन्म । एकै दरबार 'युथुनिमम्' मा सँगसँगै हुर्केका हुनाले जगत्सिंह कुमर र नायकदेवीबीच नजिकको सम्पर्क रह्यो; त्यसले प्रेमको रूप लियो; अनि नायकदेवीको दोस्रो विवाह भयो भन्ने कुरा माथि लेखिसकिएको छ । यसको परिणामस्वरूप ने.सं. ४६७ (वि.सं. १४०३) पौषमा जगत्सिंह कुमरतर्फबाट नायकदेवीकी छोरी राजल्लदेवीको जन्म भयो । यसको दश दिनपछि नायकदेवीको मृत्यु भयो । बज्यै देवलदेवीले नातिनी राजल्लदेवीलाई बडो जतनसँग हेरचाह गरी बचाइन् । यस कुराको वर्णन गोपालवंशावलीकारले यसरी गरेका छन्–

"तदनन्तरे कतिपयदिवसे श्रीजगतसिंहकुमरेण राजभुंजितम् । पश्चात्त कुह्मरबंधनं भवेत । तस्य पुत्री श्रीराजलदेवी नामः ।

जातेन दशदिवसान्ते मातुश्च मृत्यु । पितामही श्रीदेवलदेवीना अतिकष्टेन प्रतिपालितम्" (२८ पत्र)

"स ४६७ पोष्यकृष्णदशमी अनुराध श्रीनायकदेविस पुत्री राजलदेविस जात दिन १० लिव माम नायकदेविस अस्त" (५१ पत्र)

[त्यसपछि केही काल श्रीजगत्सिंह कुमरले रजाइँ गरे । पछि कुमर कैद गरिए । जगत्सिंहकी छोरी श्रीराजल्लदेत्री हुन् । जन्मेको दश दिनपछि आमा (नायकदेवी)को मृत्यु भयो । बज्यै श्रीदेवलदेवीले ज्यादै दुःखले पालिन् ।

ने.सं. ४६७ (वि.सं. १४०३) पौष कृष्ण दशमी अनुराधा नक्षत्रका दिन श्रीनायकदेवीकी छोरी राजल्लदेवीको जन्म भयो । दश दिनपछि आमा नायकदेवीको मृत्यु भयो ।]

गोपालवंशावलीकारको यस वर्णनबाट राजल्लदेवी जगत्सिंह कुमरतर्फबाट जन्मेकी नायकदेवीकी छोरी हुन् भन्ने थाहा पाइन्छ । यहींनिर आएपछि जगत्सिंह कुमर र देवलदेवीको नाता स्पष्ट हुन आउँछ । यहाँ राजल्लदेवीलाई जगत्सिंह कुमरकी छोरी भनी एकातिर भनिएको छ भने अर्कोतिर देवलदेवीलाई राजल्लदेवीकी 'पितामही (बज्यै) भनिएको छ । यसकारण देवलदेवी जगत्सिंह कुमरकी आमा हुन् भन्ने यताबाट खुल्दछ ।

तात्कालिक राजकाजमा राजल्लदेवीको सोभै कुनै प्रभाव परेको पाइँदैन । तैपनि पछि राजल्लदेवी तात्कालिक राजनीतिका एक आधार जस्तै बन्न पुगेकी थिइन्; राजल्लदेवीका पतिकै हैसियतले स्थिति मल्लको उदय भएको हो; स्थिति मल्लको उदयले तात्कालिक राजकाजमा नयाँ मोड ल्याएको थियो । यसैले राजल्लदेवीको जन्मसम्बन्धी घटना महत्त्वपूर्ण हुन आएको हो ।

**शमसुद्दीनको आक्रमण**

बाहिरबाट आक्रमण त्यसै हुँदैन; भित्रको कमजोरीले बाहिरबाट हुने आक्रमणलाई मौका दिन्छ । विक्रमको चौधौं शताब्दीको सुरुदेखि पन्ध्रौं शताब्दीको सुरुसम्ममा नेपाल-उपत्यकामा बाहिरबाट धेरैचोटि आक्रमण हुनामा यहाँको भित्रको कमजोरी नै मुख्य कारण बनेको थियो । अधिकार हात लगाउनाका लागि आफूआफूमै कलह, हानथाप चलिरहेका हुनाले एकातिर त्यसबेला देशरक्षाका लागि आवश्यक सुरक्षाप्रबन्ध गर्न सकेका थिएनन् भने अर्कोतिर राजपरिवारमध्ये नै एक पक्षले अर्को पक्षलाई गिराउन बाह्य शक्ति, कहिले खससैन्य, कहिले तिरहुतेसैन्यलाई गुहारी यहाँ आक्रमण गराएका थिए । यसताका नेपालउपत्यकामा भएका तिरहुते र खसहरूका आक्रमण यसै श्रेणीमा पर्दछन् । परन्तु राजा राजदेवको शासनकालको सुरुमा अर्थात् ने.सं. ४७० (वि.सं. १४०६) मङ्सिर २२ गते यहाँ भएको

बङ्गालका सुलतान शमसुद्दीनको भयङ्कर आक्रमण, खसतिरहुतेहरूका आक्रमणभन्दा भिन्न प्रकारको थियो । बङ्गालका सुलतान शमसुद्दीनको उक्त आक्रमणको सङ्क्षिप्त चर्चा यहाँ गरिनु आवश्यक छ ।

गोपालवंशावलीकारले उक्त मुसलमानी आक्रमणको टिपोट गरेका छन् । सं. आक्रमण भएको ४० वर्ष जतिपछि गोपालवंशावली सङ्ग्रह गरी तयार गरिएको हो ; तर गोपालवंशावलीकारको वर्णन पढ्दा यसका रचयिता आफै उक्त आक्रमणका अनुभवी थिए भन्ने आभास पाइन्छ । विचारार्थ गोपालवंशावलीकारको उक्त वर्णन यहाँ उद्धृत गरिन्छ–

"सम्वत् ४६९ वेशाषीपोर्ण्णमास्यां श्रीश्रीराजाजयराजदेवेन श्रीपशुपतिभटारकस्य कोष प्रढोकितम् ॥ ततरे पूर्व्वसुरतान समसदिनमागत्य नेपालम् श्रीपशुपति त्रिखण्डीकृता नेपाल समस्त भस्मीभवान् । हाहीभवन्ति लोकश्च ॥ सम्वत् ४७० मार्गशिरशुदि ९ महाकष्ट भवामि: भक्तापुरे ॥" (२८ पत्र)

"स ४७० मार्ग्गशिर शुदि ९ स्मसदिन सुरतानलिं वस्य समस्त डाहरपा दिन ७ माक्व ॥ (५२ पत्र)

[ने.सं. ४६९ (वि.सं. १४०६) वैशाख पूर्णिमामा राजा श्रीश्रीजयराजदेवले श्रीपशुपतिनाथलाई कोश चढाए । यसपछि पूर्वतिरबाट सुलतान शमसुद्दीन नेपाल आई श्रीपशुतिनाथलाई तीन टुक्रा पाऱ्यो । सारा नेपाल भस्म भयो ; दुनियाँमा हाहाकार फैलियो । ने.सं. ४७० (वि.सं. १४०६) मार्ग शुक्ल नवमीका दिन भक्तपुरमा ज्यादै दु:ख पाए ।

ने.सं. ४७० (वि.सं. १४०६) मार्ग शुक्ल नवमीका दिन सुलतान शमसुद्दीन आई ७ दिनसम्म सबैतिर डढायो ।]

गोपालवंशावलीकारको यो वर्णनबाहेक मुसलमानी यो आक्रमणको चर्चा दुई तात्कालिक शिलालेखमा पनि पाइएका छन् । तिनमा एक पाटन पिंबहालको शिलालेख र अर्को स्वयम्भूको शिलालेख हुन् । विचारार्थ ती शिलालेखका सम्बद्ध अंश यहाँ उद्धृत गरिन्छन् । तिनमध्ये पाटन पिंबहालको शिलालेखमा शमसुद्दीनको चर्चा यसरी गरिएको छ–

"नेपालेतीतसंख्ये मुनिनगजलधौ वत्सरे चैत्रमासे
पक्षे शुक्लोत्तरस्य प्रवरगुरुदिने पुष्यऋक्षे नवम्यां ।
योगे शूलाग्रसं(ज्ञे शुभ इ)ति गदिते बालवे चाधिकर्ण्णे
तस्मिन् श्रीचैत्यमूर्ति सकलजिनतनू येन सम्य(क्) प्रतिष्ठ: ॥
श्रीमत्वर्जेयनेन्यसुगतसुतसमं धर्मशास्त्रे प्रवर्त्त:
सिद्धेन्द्राद् ध्यानचंदात् समधिगततत्रराजागिकात् लक्षयज्ञे ।
सोयं श्रीमेघपालो भ(व)ति हि विजयी सर्वशत्रुनिहंता
यज्ञे धर्मेषु नित्यं लघुतनय इव सर्व्वभावे प्रवर्त: ॥

श्रुतान सामसदिनो यावनाधिराजः नेपालसर्वनगरं भश्मीकरोति ।
तस्मिन् क्षणे पतितचैत्यमिदं च दृष्ट्वा जीर्णं करोति नवकं
वरपालसिंहः ॥

[ने.सं. ४७७ (वि.सं. १४१४) चैत्र शुक्ल नवमी तिष्यनक्षत्र शूलयोग बालवकरण बृहस्पतिवारका दिन जसले (मेघपालले)भगवान् बुद्धको चैत्य र मूर्तिको प्रतिष्ठा गर्नुभयो ।

वज्रयानमा अर्का बुद्धपुत्रजस्ता, धर्मशास्त्रबमोजिम काम गर्ने, ठूला सिद्ध योगी ध्यानचन्द्रबाट लक्षहोममा वर पाएका, यज्ञमा र धर्मकर्ममा रामचन्द्रजस्तै सर्वात्मना लागेका, सारा शत्रुलाई सखाप पारेका त्यस्ता उहाँ श्रीमेघपाल विजयी भइरहनुभएको छ ।

मुसलमानका राजा सुलतान शमसुद्दीनले सारा नेपालसहर ध्वस्त पाऱ्यो । त्यहीबेला यो चैत्य पनि ध्वस्त भएको देखेर असल पालहरूमा श्रेष्ठ (मेघपालले) जीर्णोद्धार गर्नुभयो ।]

स्वयम्भूमा रहेको शिलालेखबाट शमसुद्दीनको आक्रमणका विषयमा यसभन्दा बढ्ता कुरा पत्ता लाग्छ । सो शिलालेख आक्रमणको २३ वर्षपछि स्वयम्भूको पुनर्निर्माण गरी त्यसको संस्मरणका लागि कान्तिपुरका एक जना महापात्र राजहर्ष भल्लोकले राखेका थिए । त्यसको सारांश यस प्रकार छ–

"आसीद् धर्मनिधिद्वयैकजलधिर्न्नेपालभूमण्डले
ख्यातः श्रीजयराजदेवनृपतिः तेनैव राज्ञीकृते ।
तस्मिन्नेव विराजति स्म विमलः स्तूपो मुनेः केतनः
श्रीसाह्मे शिखरि प्रसिद्धभुवने प्रस्थापितः पूर्व्वकैः ॥
सप्तत्याभ्यधिके श्रीमत्नेपालाब्दचतुःशते ।
मार्गशीर्षे सिते पक्षे दशम्यां गुरुवासरे ॥
सुरत्राणसमस्दीनो बंगालबहुलैर्बलैः ।
सहागत्य च नेपालो भग्नो दग्धश्च सर्वशः
कालेन कियता धीमान्स राजा त्रिदिवङ्गतः ।
एवं यवनदग्धस्तु स स्तूपोऽपि तथा स्थितः ॥
श्रीजयार्जुनदेवेन सूनुना तस्य भूभृतः ।
सम्पाल्यमाने नेपाले वीरनारायणेन तु ॥
श्रीजयस्थितमल्लेन क्षत्ररत्नाकरेन्दुना ।
पालिते तत्र कालेन बुद्धपुण्योदयेन च ॥
श्रीकाष्ठमण्डपुरी विमलातिरम्या तस्यां जयी वसति वीर्यगुणैरुदारः ।
श्रीराजहर्ष इति सर्वजनप्रणीतः पात्रान्वयामृतकरः सुविशालकीर्ति : ॥
आदायाज्ञां द्वयो राज्ञोरिन्द्रोपेन्द्रसमानयोः ।
सज्जीकृतं शुभोद्दिष्टं राजहर्षेण धीमता ॥
पुनर्न्निर्मीयते स्तूपं धर्मधातुसमुद्भवम् ॥

अब्दे नेपालिकाङ्के नयननवयुगे चाश्विने पूर्णिमाया-
मृक्षे मासानुकारे सिततनयदिने योगसौकर्म्मणाख्ये ।
स्तूपस्यास्य प्रतिष्ठा सकलशुभमयी कारिता तैः सुस्वर्ण-
छत्रारोहादिलक्षाहुतिमखविधिना श्रीयुतै राजहर्षैः ॥"

[दुवै धर्म (शैव र बौद्ध) मान्ने नेपालका प्रख्यात राजा श्रीजयराजदेव हुनुहुन्थ्यो । उहाँ राजाले राज्य गरिरहनुभएका बेलामा संसारमा प्रख्यात श्रीस्वयम्भूको डाँडामा पहिलेपहिलेकाले स्थापना गरिएका शाक्यमुनि (बुद्ध)को वासस्थान भएको स्तूप शोभायमान भइरहेथ्यो ।

ने.रां. ४७० (वि.सं १४०६) मार्ग शुक्ल दशमी बृहस्पतिवारका दिन धेरै बङ्गाली फौज लिएर आई सुलतान शमसुद्दीनले नेपालमा सबैतिर भत्कायो, पोल्यो ।

केही कालपछि बुद्धिमान् उहाँ राजा (राजदेव) स्वर्ग जानुभयो । यस्तो अवस्थामा परेको हुनाले मुसलमानले डढाएको त्यो स्तूप पनि त्यसै रह्यो ।

उहाँ राजा (राजदेव)का छोरा वीरमा श्रेष्ठ श्रीजयार्जुनदेवले नेपालमा राज्य गरिरहनुभएका बेलामा, क्षत्रियकुलमा पैदा भएका श्री जयस्थिति मल्लले पनि बुद्धका पुण्यका प्रतापले त्यही समयमा शासन गरिरहनुभएका बेलामा, राम्रो सफा श्रीकाष्ठमण्डप सहरमा पराक्रम र गुणले विजयी भएका उदार सबैले मानिएका गोत्रवंशमा जन्मेका ठूलो कीर्ति भएका श्रीराजहर्ष बस्नुहुन्छ ।

इन्द्र र उपेन्द्रजस्ता दुवै राजाका (राजा जयार्जुनदेव र उपराज जयस्थिति मल्लका) आज्ञा लिई बुद्धिमान् राजहर्षले शुभ गर्ने बुद्धको यो स्तूप तयार पारी फेरि बनाएको हो ।

ने.सं. ४९२ (वि.सं. १४२९) आश्विन शुक्ल पूर्णिमा अश्विनीनक्षत्र सुकर्मयोग बुधवारका दिन यो स्तूपको प्रतिष्ठा, गजूर चढाउने काम र लक्षहोम श्रीराजहर्षले गराउनुभयो ।]

विभिन्न कालमा विभिन्न ठाउँमा लेखिएका यी तीनै लेखमा एक मुख भई "नेपाल स्मस्त भस्मीभवान्, नेपाल सर्वनगरं भश्मीकरोति, भग्नो दग्धश्च सर्वशः" भनी लेखिएको हुनाले यो मुसलमानी आक्रमण कति भयङ्कर तथा ध्वंसात्मक थियो भन्ने सोझै अनुमान गर्न सकिन्छ । यी तीन लेखमध्ये गोपालराजवंशावलीमा भक्तपुरमा भएको आक्रमणको मिति ने.सं. ४७० (वि.सं. १४०६) मार्ग शुक्ल नवमी र स्वयम्भूको शिलालेखमा बुद्ध चैत्य ध्वस्त पारेको मिति ४७० मार्ग शुक्ल दशमी बृहस्पतिवार भनी लेखिएको छ । ललितपुरको शिलालेखमा चाहिँ आक्रमण भएको मिति लेखिएको छैन, जीर्णोद्धार गरेको मितिमात्र लेखिएको छ । तीनै लेखमा आक्रमण दलका नेताको नाउँ क्रमशः 'सुरतान समसदिन, श्रुतान

सामसदिन, सूरत्राण समस्दीन" लेखिएको छ । यिनको शुद्ध नाउँ पहिले हाजी इलियास र पछि बङ्गालका शासक बनेपछि सुलतान शमसुद्दीन हो । यसैले यहाँ गोपालवंशावलीमा दिइएको यिनको नाम सबैभन्दा शुद्ध छ । शिलालेखमा छन्द मिलाउन र मुसलमानी नाउँको संस्कृतीकरण गर्ने प्रयासले नाउँमा अलिकता अन्तर परेको देखिन्छ ।

बङ्गाल नेपालको पूर्वपट्टि पर्ने हुनाले बङ्गालबाट नेपाल पस्दा पूर्वको बाटोबाट पस्नु सुविधा पर्छ । यसैले यी सुलतान शमसुद्दीन पनि पूर्वतिरको बाटोबाट नेपालउपत्यकामा पसेका थिए । गोपालवंशावलीमा 'तनन्तरे पूर्व सुरतान ...' भनी सुरतानका अगाडि लेखिएको पूर्व शब्दले पूर्वदिशालाई सङ्केत गरेको हो ।

यसबेला नेपालको राजधानी भक्तपुरमा भएको र पूर्वतिरबाट नेपालउपत्यकामा पस्दा बाटोमै पर्ने हुनाले शमसुद्दीनको आक्रमणको पहिलो मार भक्तपुरमा पऱ्यो । विशाल फौजसाथ आएका शमसुद्दीनको आक्रमण रोक्न सक्ने सैन्यशक्ति र रक्षाप्रबन्ध त्यसबेला यहाँ थिएन । त्यसो हुँदा यहाँका राजाप्रजा सारा सक्दो आत्मरक्षा गर्नतिर मात्र लागेको देखिन्छ । यसकारण मुसलमानी सैन्यले भक्तपुरमा यथेष्ट लुटपाट गरी, देवमन्दिरहरू भत्काई आगो लगाइदियो । यसबाट हाहाकार मच्चियो ।

यसरी भक्तपुरशहर ध्वस्त पारेपछि भक्तपुरका आसपासका देवमन्दिर भत्काउँदै बिगार्दै मुसलमानी सैन्य अगाडि बढ्यो । पशुपतिनाथको मन्दिर अघिदेखि प्रसिद्ध र धनसम्पत्तिले पूर्ण पनि थियो । यसकारण शमसुद्दीनको दलका आँखा पशुपतिनाथको मन्दिरमा पर्नु स्वाभाविक थियो । यहाँ रहेका धनसम्पत्ति लिई शमसुद्दीनको सैन्यले पशुपतिनाथको मूर्तिलाई समेत तीन टुक्रा पारिदियो । अरू देवमूर्तिहरूको पनि यही हालत गरायो ।

यसपछि कान्तिपुरसहरलाई ध्वस्त पारी शमसुद्दीनको सैन्य स्वयम्भूको डाँडोमा चढेको देखिन्छ । स्वयम्भू अघिदेखि बौद्धमार्गीहरूको प्रसिद्ध पुण्यस्थल थियो । चैत्यभित्र नवरत्न, सुन, चाँदी राख्ने चलन हुनाले शमसुद्दीनको सैन्यले स्वयम्भूनाथको चैत्य भत्काएर खोतलेको देखिन्छ । अनि पाएजति धन लिई त्यहाँ आगो लगाइदियो ।

त्यहाँपछि मुसलमानी फौज ललितपुरतिर लागेको देखिन्छ । ललितपुरको पनि त्यही दशा भयो । अग्लाअग्ला देवमन्दिर, घर भत्काइए, डढाइए ।

यसरी नेपालउपत्यकाका शासक र दुनियाहरूले शमसुद्दीनको सैन्यसँग सोझै मुकाबिला गर्न नसकेका र संरक्षणका लागि वनदुर्गभित्र पस्नु आदिमात्र गरेका हुनाले मुसलमानी सैन्यले निर्धक्कसँग नेपालउपत्यकाका तीनै सहर उजाड पार्ने अवसर पायो । अनि ७ दिनसम्म यहाँ बसी शमसुद्दीन फर्केर गए ।

मुसलमानी फौज फर्केर गएपछि फेरि यहाँका बासिन्दाहरू पूर्ववत् रहन लागे। बिस्तारैबिस्तारै भत्केका, डढेका देवमन्दिरहरू घरहरूको जीर्णोद्धार हुन लाग्यो। यस आक्रमणको सात वर्षपछि ललितपुर पिंबहालको ठूलो चैत्यको जीर्णोद्धार हुन लाग्यो। यसको जीर्णोद्धार महापात्र मेघपालले गरे। आक्रमणको ११ वर्षपछि मात्र वि.सं. १४१७ मा महामन्त्री जयसिंहरामले पशुपतिनाथको मूर्ति स्थापना गरे। २३ वर्षपछि मात्र वि.सं. १४२९ मा स्वयम्भूनाथको चैत्यको पुनर्निर्माण गरियो। यसरी निकै वर्षपछि मात्र शमसुद्दीनको आक्रमणले गरेको क्षतिको केही पूर्ति हुन सक्यो।

शमसुद्दीनको यो भयङ्कर आक्रमणको सम्झना पछिसम्म मानिसहरू गर्दै थिए। वि.सं. १६५२ मा शिवसिंह मल्लका पालामा स्वयम्भूको जीर्णोद्धार भएको थियो। यस जीर्णोद्धारको वर्णन लेखाई राखेको स्वयम्भूमा रहेको एउटा शिलालेखमा तुर्कहरूको आक्रमणबाट बिग्रेको यो चैत्यको जीर्णोद्धार पहिले पनि भएको थियो भन्ने भाव यसरी व्यक्त गरिएको छ–

"तिरस्कानां परिष्वङ्गादतिव्यथितमानसः।

प्रतिष्ठामकरोद् भूपः स्तूपे वज्रगुरोः पुनः॥"

[तुर्कहरूको छुवाइले ज्यादै मन दुखेका राजाले बुद्धको स्तूपको फेरि प्रतिष्ठा गर्नुभयो।]

श्री ५ पृथ्वीनारायण शाहको समयसम्म पनि यस मुसलमानी आक्रमणको सम्झना घुइरोघुइरो रूपमा रहेको देखिन्छ।

शमसुद्दीनको आक्रमणले ध्वस्त पारिएका स्वयम्भूनाथ आदिका जीर्णोद्धारको चर्चा गोपालवंशावलीकारले गरेका छैनन्। आक्रमणको ११ वर्षपछि वि.सं. १४१७ मा महामन्त्री जयसिंहरामले गरेको पशुपतिनाथको जीर्णोद्धारको चर्चा भने गोपालवंशावलीकारले यसरी गरेका छन्–

"स ४८० वेशाष शुक्ल दुतीया भग्न श्रीपशुपतिस स्थापना याङा दिन, जयशिंहरामः महाथ भासन ..." (५४ पत्र)

[ने.सं. ४८० (वि.सं. १४१७) वैशाख शुक्ल द्वितीयाका दिन बिग्रेका पशुपतिको जीर्णोद्धार महाथ (महामन्त्री) जयसिंहरामले गरे। ...]

पशुपतिनाथजस्ता राष्ट्रिय स्तरमा प्राचीनकालदेखि मानिआएका देवताको जीर्णोद्धार ११ वर्षसम्म हुन नसकेको उक्त घटनाले तात्कालिक राष्ट्रिय कमजोरीलाई स्पष्ट रूपमा दर्साएको छ।

उक्त मुसलमानी आक्रमणले यहाँका राजकाजमा चाहिँ कुनै परिवर्तन भएन। राजगद्दीमा राजा राजदेव नै बसेका थिए। अधिकारचाहिँ देवलदेवीकै पक्षका हातमा रह्यो। यो कुरा गोपालवंशावलीकारको वर्णनबाट थाहा पाइन्छ। तात्कालिक हस्तलिखित ग्रन्थ आदिबाट पनि थाहा पाइन्छ।

विचारार्थ राजदेवका पालाका हस्तलिखित ग्रन्थका पुष्पिकावाक्य यहाँ उद्धृत गरिन्छन्–

(१) निर्बाधं परिरक्षति क्षितितलं क्ष्मापालचूडामणौ
वीरश्रीजयराजदेवनृपतौ नेपालभूमण्डलम् ।
शैवाचार्यवरस्य विख्यातकीर्त्तेः कृतेः
सव्याख्यां च चतुःशतीं समलिखन् नारायणाख्यः कविः ।
सम्वत् ४७४ ।

(२) सम्वत् ४६७ फाल्गुनशुक्लदशम्यां शुक्रवासरे आर्द्रानक्षत्रे । राजाधिराजपरमेश्वरपरमभट्टारकश्रीश्रीजयराजदेवविजयराज्ये । ... श्रीयोखाच्छे विहार वज्राचार्य श्रीक्षेमेन्द्रस्य लिखितम् .

(३) सम्वत् ४७६ ज्येष्ठकृष्णसप्तम्याम् आदित्यवासरे ... राजाधिराज–परमेश्वर–परमभट्टारकश्रीश्रीजयराजदेवस्य विजयराज्ये .

(४) श्रीनेपालिकसम्वत् ४८१ माघकृष्णाष्टम्यां तिथौ अनुराधनक्षत्रे शनैश्चरवासरे पुस्तकसिद्धिमिदम् । श्रीललितपुरीनगर्यां श्रीमानिग्लके नैऋत्यदेशस्थ श्रीयम्बुस्थानाधिपतिः विप्रवंशोद्भवः द्विजवरोत्तमः सा जयपतिः सोमशर्म्मणेन ... लिखापितम् । तस्मिन्नेव नगर्यां श्रीमानिग्लके दक्षिणस्थश्रीतालिङ्गेश्वर स्थानाधिवासिनः दैवज्ञः अनन्त–राम–नाम्नेन ... लिखितम् ... राजाधिराजपरमेश्वरपरमभट्टारक-श्रीश्री–जयराजमल्लदेवस्य विजयराज्ये ॥

यी तात्कालिक हस्तलिखित ग्रन्थबाट शमसुद्दीनको आक्रमणपछि पनि पूर्ववत् राजा जयराजदेव नै गद्दीमा विराजमान थिए भन्ने कुराको पुष्टि हुन्छ । अधिकार भने देवलदेवीका हातमा थियो । यसकारण एक तात्कालिक हस्तलिखित ग्रन्थमा देवलदेवीलाई पूर्ण राजकीय प्रशस्तिले विभूषित पारेको हामी पाउँछौं । विचारार्थ त्यसको उद्धरण यहाँ गरिन्छ–

"श्रेयोस्तु सम्वत् ४७३ अशुनिशुक्लत्रयोदस्यायां तिथौ भारगवदिने श्रीश्रीराजाधिराजपरमेश्वरपरमभट्टारकराजाभिधावतिश्रीदेवलदेव्या विजयराज्ये ।"

यहाँ गद्दीनसिनराजालाई बुझाउने 'श्रीश्रीराजाधिराज परमेश्वर परमभट्टारक' प्रशस्ति देवलदेवीमा लगाइएको र उनको 'विजयराज्य' मा भनिएको हुनाले यसताका शासनको बागडोर देवलदेवीको हातमा थियो भन्ने थाहा पाइन्छ । यस कुराको पुष्टि गोपालवंशावलीबाट हुन्छ ।

**आन्तरिक कलह**

ने.सं. ४७० (वि.सं. १४०६) मा भयङ्कर बाह्य आक्रमण (शमसुद्दीनको आक्रमण) को मार खानुपरे पनि नेपालउपत्यकाका शासकहरू चेतेका थिएनन्; पूर्ववत् उनीहरू आन्तरिक कलहमा व्यस्त रहे ।

गोपालवंशावलीकारले तात्कालिक आन्तरिक कलहका अनेक घटना टिपेका छन् । नुवाकोट, टोखा, मनिगल आदिले विद्रोह गरेका र त्यसलाई दबाउन केन्द्रले गरेका प्रयासबारे गोपालवंशावलीकारले प्रकाश पारेका छन् । तिनलाई विस्तारपूर्वक उद्धरणसहित यहाँ लेख्नु आवश्यक देखिँदैन । तर एक घटनाको चर्चा गर्नु चाखलाग्दो देखिन्छ । शमसुद्दीनको आक्रमणले गर्दा पशुपति तीन टुक्रा भएको; स्वयम्भूको चैत्य भस्म भएको आदि भयङ्कर घटना त्यसबेला घटेका थिए । तर तात्कालिक शासकहरूले कैयौं वर्षसम्म तिनको जीर्णोद्धारमा दृष्टि दिन सकेनन् । तर शमसुद्दीन फर्केर गएको लगत्तैपछि अर्थात् एक महिना नै नबित्दै त्यसबेलाका प्रख्यात महाथ (महामन्त्री) अनेकरामले 'कालगण्ठि' झिक्ने प्रयास गरेको चाखलाग्दो वर्णन गोपालवंशावलीकारले गरेका छन् । यस काममा राजा राजदेव पनि संलग्न गराएका थिए; प्रजाहरूले पनि भाग लिएका थिए । यसबाट आवश्यक सुरक्षाको प्रबन्ध गर्नतिर नलागी 'साधन' गर्नेतिर त्यसबेलाका शासकहरू लागेका थिए भन्ने देखिन्छ । विचारार्थ गोपालवंशावलीकारको उक्त वर्णनको उद्धरण यहाँ प्रस्तुत छ ।

> "स ४७० पौष्य शुद्धि २ अनेखराम महाथसन कालगण्ठि लिक्याय धासन, सखुजुटा दस्त भाटो ब्येनाप्पा च्वोङवङ, श्रीजयराजदेवसनो वैयकम् झाद्दन थह्मया, आलाच विनाप छायास चायायानं सच-थस्यव याव एकसर प्रजा दुंब्वोङ, आलाचस प्रजा एकश्रसन अंङ काढरपं उदोतन इथिनी मामसके भैरवपट याङ ... " (५२ पत्र)

**जयस्थिति मल्लको उदय**

यसरी आन्तरिक कलह, बाह्य आक्रमणले जर्जर भएको नेपाल–उपत्यकाको केन्द्रीय राजकाजमा एक दृढ व्यक्तिको उदय यसबीच बिस्तारैबिस्तारै भयो; ती हुन्, जयस्थिति मल्ल । नेपालको मध्यकालको इतिहासमा जयस्थिति मल्लको महत्त्वपूर्ण स्थान रहेको छ । उनको उदयले नेपालको राजकाजमा नयाँ मोड आएको थियो । जयस्थिति मल्ल सत्तामा आउनुभन्दा निकै अघिदेखि नेपालउपत्यकाको केन्द्रको शासनमा कमजोर स्थिति देखापरिरहेको थियो । यसो हुँदा ठाउँठाउँका सामन्त, क्वाठनायक आदि भारादारहरू आफ्नोआफ्नो अधिकार बढाउन दाउपेच गरिरहेका थिए; बराबर परस्परमा लडाइँभिडाइँ पनि चलिरहेका थिए । भित्र कमजोर हुँदा बाहिरबाट पनि आक्रमण भइरहेका थिए । स्थिति मल्लले क्रमशः केन्द्रलाई त्यस अवस्थाबाट मुक्त पारे । उनले अनेक प्रयोग गरी चतुरतापूर्वक सामन्त भारादारहरूलाई कज्याए । उनले रक्षाव्यवस्था सुदृढ पारे । यसरी उनले फेरि नेपालको केन्द्रीय शासनलाई केही बलियो पारे । विदेशसँगको सम्बन्धमा पनि केही प्रगति भयो; स्थिति मल्लको समयमा

चीनबाट दूतमण्डल यहाँ आयो; यताबाट दूतमण्डल चीन गयो । राजनैतिक स्थिरता कायम भएको हुनाले सामाजिक, आर्थिक सुधार गर्न पनि उनी समर्थ भए । यसरी नेपालका समाजसुधारक राजामा स्थिति मल्लको पनि उल्लेखनीय स्थान रहेको छ । उनको शासनकालमा जनतामा शान्ति-सुव्यवस्था छायो । राष्ट्रविकासका काममा प्रजाहरूलाई संलग्न गराउन उनले उल्लेखनीय प्रेरणा दिए । लिच्छविकालदेखि प्रचलित पाञ्चाली (पञ्चायत) व्यवस्थाले त्यसबेला फेरि केही गतिशीलता प्राप्त गऱ्यो । स्थिति मल्लले विद्वान्हरूलाई पनि प्रश्रय दिए । यसो हुनाले विद्याका क्षेत्रमा पनि केही प्रगति भयो । कलाका क्षेत्रमा पनि केही काम भयो । उदार धार्मिक नीति लिएका हुनाले उनको कार्यकालमा विविध धार्मिक सम्प्रदायले केही फस्टाउने मौका पाए । यसरी नेपालका मध्यकालका राजनैतिक, आर्थिक, सामाजिक र सांस्कृतिक इतिहासमा जयस्थिति मल्लका उदयले प्रशस्त प्रभाव पारेको हामी पाउँछौं । गोपालवंशालीकारले स्थिति मल्लका विविध पक्षबारे निकै प्रकाश पारेका छन् । अब स्थिति मल्लका उदयबारे क्रमशः चर्चा गर्नु उपयुक्त हुन्छ । हुन पनि ४० वर्षदेखि भनेजस्तै देवलदेवीका व्यक्तित्वले नेपालउपत्यकाका राजकाजलाई ढाकिराखेको थियो । यस विषयको चर्चा माथि भइसकेको हुनाले यहाँ फेरि दोहऱ्याउन आवश्यक देखिँदैन ।

**राजल्लदेवीसँग स्थितिमल्लको विवाह**

वि.सं. १४११ मा राजल्लदेवी आठ वर्षकी भइन् । त्यसबेलाको धारणाअनुसार उनको विवाह गरिदिनुपर्ने अवस्था आएकोले बज्यै देवलदेवीका प्रयत्नले वि.सं. १४११ आश्विनमा स्थिति मल्ल वरका रूपमा दक्षिण मधेसतिरबाट ल्याई भक्तपुर भित्र्याइए । उनलाई भक्तपुर त्यंखोमा राखियो । यसको पाँच महिनापछि राजल्लदेवीसँग स्थिति मल्लको विवाह भयो । यसै नाताले गर्दा स्थिति मल्लको उदय भयो । गोपालवंशावलीकारले स्थिति मल्लको राजल्लदेवीसँग भएको उक्त विवाहको वर्णन संस्कृत र नेवार भाषामा गरी यसरी गरेका छन्–

> "तदनन्तरे श्रीदेवलदेवीना स्मानीयात ... श्रीजयस्थितिराज–मल्लदेवविजयी भवे, तस्य विवाहं कृतम् श्रीराजलदेवीनां स्वामी भवान्" (२८-२९ पत्र)
>
> "स ४७४ अश्विनि शुद्धि ९ श्रीजयस्थितिराजमलदेवस कोवनम्बिज्याङा ख्वपोन्दुबिया त्यंखो चोन ङाला लिव विवाह जुव ।" (५३ पत्र)

[यसपछि श्रीदेवलदेवीद्वारा ल्याइएका ... श्रीजयस्थितिमल्लदेव विजयी हुनुभयो । उहाँको श्रीराजल्लदेवीसँग विवाह भयो ।

ने.सं. ४७४ (वि.सं. १४११) आश्विन शुक्ल नवमीका दिन श्री जयस्थितिराज मल्लदेव [illegible] (दक्षिण मधेस)बाट आउनुभई भक्तपुर पसी त्यंखोमा बस्नुभयो । पाँच महिनापछि विवाह भयो ।]

त्यसताका 'डोलाजी-प्रथा' प्रचलित थियो । तदनुसार गद्दीका वा अंशका हकदार छोरा भएनन्, छोरीमात्र भइन् भने त्यस्तोबेला छोरीको विवाहका लागि दुलाहाको खोजी गरी दुलाहाको डोला भित्र्याइन्थ्यो; अनि विवाह रचाइन्थ्यो । विवाह भएपछि दुलहीका नाताले दुलाहा पनि हकदार मानिन्थ्यो । गोपालवंशावलीमा यस कुराको उल्लेख ठाउँठाउँमा आएको छ । उदाहरणार्थ नायकदेवीको हरिचन्द्रसँग भएको विवाहको प्रसङ्गलाई देखाउन सकिन्छ । उद्धरणसहितको यस विषयको चर्चा माथि परिसकेको हुँदा यहाँ फेरि उद्धरण दिनु आवश्यक देखिँदैन । यही परम्पराअनुसार राजल्लदेवीका लागि मधेस (नेपालको तराईप्रदेश वा भारत)बाट स्थिति मल्ल दुलाहाका रूपमा भित्र्याइएका हुन् भन्ने कुरा गोपालवंशावलीको उपर्युक्त वर्णनबाट स्पष्ट थाहा पाइन्छ ।

**'उपराज' का रूपमा स्थिति मल्ल**

अहिलेसम्म युवक महत्त्वाकाङ्क्षी स्थिति मल्ल देवलदेवीको वरद हस्त पाई भित्रभित्रैबाट अगाडि बढिरहेका थिए । देवलदेवीको मृत्युपछि उनले तयार पारेर गएको बाटोबाट स्पष्ट रूपमा स्थिति मल्ल अगाडि बढे । अब दोस्रा राजा अथवा 'उपराज' का रूपमा स्थिति मल्ल देखापरे । यो कुरा गोपालवंशावलीबाट पनि थाहा पाइन्छ; तात्कालिक शिलालेखबाट पनि थाहा पाइन्छ । गोपालवंशावलीकारले देवलदेवीको मृत्युको एक वर्षपछिको एक सांस्कृतिक कार्यको चर्चा गर्दा "विजयराजे श्रीश्रीजयस्थितिराजमलदेवस" भनी लेखेका छन् । जस्तै–

> "स ४८७ जेष्ठ कृष्ण पञ्चमी चवुअङ्ग रामायन लेतया दिन ।
> ... विजयराज श्रीश्रीजयस्थितिराजमलदेवस" (५४ पत्र)

ने.सं. ४९० माघमा साँखुका विरुद्ध कारबाई गर्दा 'उभय राजा' (दुवै राजा) भए भन्ने चर्चा गोपालवंशावलीकारले यसरी गरेका छन्–

> "स ४९० माघ शुद्धि ५ संको गद्द चाल्व समस्त लूद्दि याङ, मे
> चोया, उभय राजास बिज्याङ ।" (५४-५५ पत्र)

'उभयराजा' भनी यहाँ जयार्जुनदेव र जयस्थिति मल्ललाई भनिएको हो । यो कुरा ने.सं. ४९२ को स्वयम्भूको शिलालेखबाट थाहा पाइन्छ । सो शिलालेख शमसुद्दीनको आक्रमणको २३ वर्षपछि स्वयम्भूको पुनर्निर्माण गरी त्यसको संस्मरणका लागि कान्तिपुरका एक जना महापात्र राजहर्ष भल्लोकले राखेका थिए । त्यसमा 'उभयराजा' को स्पष्ट उल्लेख यसरी गरिएको छ–

"श्रीजयार्जुनदेवेन सूनुना तस्य भूभृतः ।
सम्पाल्यमाने नेपाले वीरनारायणेन तु ॥
श्रीजयस्थितमल्लेन क्षत्ररत्नाकरेन्दुना ।
पालिते तत्र कालेन बुद्धपुण्योदयेन च ॥ ..
आदायाज्ञां द्वयो राज्ञोरिन्द्रोपेन्द्रसमानयो : ।
सज्जीकृतं शुभोद्दिष्टं राजहर्षेण धीमता ॥"

यसरी देवलदेवीको मृत्युपछि स्थिति मल्ल 'उपराज' का हैसियतले अघि बढेको स्पष्ट छ ।

**अनेकराम महाथको मृत्यु**

रुद्र मल्लको मृत्युपछिका ३० वर्षभित्र घटेका घटनामा महाथ यी अनेकरामको निकै हात रहेको थियो । ठाउँठाउँका भारादारहरूले विद्रोह गर्दा अनेकरामले अनेकपटक हतियार उठाई ती विद्रोहलाई दबाएका थिए । यी अनेकरामले देवलदेवीलाई साथ नदिएका भए नेपालउपत्यकाको उपर्युक्त अवस्थाले अर्कै रूप लिन पनि सक्थ्यो । यसकारण उनलाई आफ्नो पक्षमा मिलाउन सक्नु देवलदेवीको ठूलो कुटनीति थियो । फेरि उता राजदेव गद्दीमा बसेपछि महाथ अनेकराम उनका पनि विश्वासपात्र महामन्त्रीका रूपमा रहन लागेका थिए तथा अनेकरामका छोरा जयसिंहराम जयराजदेवका छोरा युवराज जयार्जुनदेवका हजुरियाका रूपमा रहन लागेका थिए । जयार्जुनदेव युवराज बनाइँदा खेलिएको 'मदालसाजातिस्मरण' भन्ने नाटकमा यस कुराको वर्णन यसरी गरिएको छ–

"श्रीमानरीन् जयति नित्यमनेकराममन्त्रावलम्बिजय-राजनराधिराजः । नेपालचक्रविलसज्जयसिंहराम षाड्गुण्यवर्त्ति–युवराजजयार्जुनश्च ॥

आर्ये आदिष्टोस्मि ... युवराजश्रीजयार्ज्जुनदेवेन ॥ यथास्मद्दिनकरकुलक्रमानुरूपयौवराज्यपदप्रतिलम्भप्रमोदप्रवृत्त यात्राप्रसङ्गेन नानादिग्देशागतक्षत्रियपात्रकुलप्रचुरसामाजिक सेविनामस्माकम्विनोदाय ... लक्ष्मीदाससूनोः श्रीमतः कवेरार्य–रामदासस्य कृतिरभिनवं मदालसाजातिस्मरणन्नाम नाटकन्नाटयितव्यमिति ॥"

[सधैं अनेकरामको सल्लाहअनुसार काम गर्ने राजा श्रीजयराजदेव शत्रुहरूलाई जितीकन रहनुभएको छ तथा जयसिंहरामको षाड्गुण्य (राजकाजको दाउपेच)अनुसार चल्ने युवराज जयार्जुनदेव नेपालमण्डलमा सुहाइरहनुभएको छ ।

हे नटी, ... युवराज श्रीजयार्जुनदेवले "हामी सूर्यवंशीहरूको कुलपरम्पराअनुसार हामीलाई युवराजपद दिइएको खुसियालीमा भएको

उत्सवका अवसरमा अनेक ठाउँबाट आएका क्षत्रिय, पात्रकुलका प्रशस्त सामाजिक (उत्सव, नाच हेर्न आएका मानिस)हरूको र हाम्रो मन बहलाउनाका लागि ... लक्ष्मीदासका छोरा श्रीरामदास कविको नयाँ कृति मदालसाजातिस्मरण भन्ने नाटक नचाउनू" भनी मलाई अह्राउनुभएको छ ।]

यसरी अनेकरामले एकातिर देवलदेवीको पक्षलाई प्रभावित पारेका थिए भने अर्कोतिर राजा राजदेवका पनि उनी विश्वस्त बनेका थिए ।

वि.सं. १४१३ आषाढमा ती प्रभावशाली महाथ अनेकरामको मृत्यु भयो । गोपालवंशावलीकारले महाथ अनेकरामको मृत्युको टिपोट यसरी गरेका छन्–

"स ४७६ दिराषाढवदि ११ अनेखराम महाथस (अ) स्ता दिवस" (५३ पत्र)

[ने.सं. ४७६ (वि.सं. १४१३) द्वितीय आषाढ कृष्ण एकादशीका दिन महाथ अनेकरामको मृत्यु भयो ।]

अनेकरामको मृत्युपछि 'महाथ' पदमा उनका छोरा जयसिंहराम नियुक्त गरिएको देखिन्छ । तर अनेकरामले पारेको राजनैतिक सन्तुलन उनको मृत्युपछि कायम हुन सकेको देखिँदैन । अब बिस्तारैबिस्तारै राजनीतिले अर्कै मोड लिन सुरु गर्‍यो । यसबीच पनि आन्तरिक कलह केही अंशमा कायम रह्‍यो ।

**जयार्जुनदेव**

ने.सं. ४८१ (वि.सं. १४१७) माघसम्म राजदेव जीवित थिए भन्ने कुरा माथि उद्धृत राजदेवका पालाको हस्तलिखित ग्रन्थबाट थाहा पाइन्छ । ने.सं. ४७९ (वि.सं. १४१६) श्रावणमा जयार्जुनदेवका लागि सारिएको एक हस्तलिखित ग्रन्थमा उनलाई 'युवराज' भनिएको छ । जस्तै–

"लिखितमिदं तपोधनश्रीविश्वेश्वरेण युवराजश्रीजर्यार्जुनस्यार्थेन लिखितम् ॥ ॥ सम्वत् ४७९ श्रावणकृष्णदशमी ।"

यसबाट वि.सं. १४१६ श्रावणसम्म जयार्जुनदेव युवराजै थिए; राजा भइसकेका थिएनन् भन्ने थाहा पाइन्छ । ने.सं. ४८१ (वि.सं. १४१८) वैशाखमा भने जयार्जुनदेव राजा भइसकेका थिए । यो कुरा यस हस्तलिखित ग्रन्थबाट थाहा पाइन्छ–

"सम्वत ४८१ वैशाखकृष्णद्वादश्यान्तिथौ रेवतिनक्षत्रे आदित्य–वासरे । राजाधिराजपरमेश्वरश्रीजयार्जुनदेवस्य विजयराज्ये ।"

जयार्जुनदेव कहिले र कसरी गद्दीमा बसे भन्ने कुरा गोपालवंशावलीकारले खुलाएर लेखेका छैनन् । तर महाथ जयसिंहरामले पशुपतिको भग्नमूर्तिको स्थापना गरेको वर्णनको प्रसङ्गमा जयार्जुनदेव राजा भएको चर्चा भने गरेका छन् । जस्तै–

"स ४८० वेशाष शुक्ल दुतीया भग्न श्रीपशुपतिस स्थापन याङा दिन, जयशिंहरामः महाथ भासन, ल्वह साहरपा, गण्डगोम वंथौचोस । थ्व यज्ञस श्रीजयार्जुनदेवस वो, सङ्करदेविस वो राजा सालावुथे ॥" (५४ पत्र)

[ने.सं. ४८० (वि.सं १४१७) वैशाख शुक्ल द्वितीयाका दिन बिग्रेका पशुपतिको जीर्णोद्धार महामन्त्री जयसिंहराम भाले गण्डगोम वंथौचोबाट ढुङ्गा ल्याई गरे । यो यज्ञमा श्रीजयार्जुनदेव र शङ्करदेवीको राजा फेर्दाजस्तै विधान गरियो ।]

यसरी पशुपतिको प्रतिष्ठा गर्दा एक किसिमले जयार्जुनदेवको राज्याभिषेक पनि गरिएको रहेछ भन्ने थाहा पाइन्छ । उता यसबेलासम्म राजा जयराजदेव पनि जीवित नै थिए । यसकारण ने.सं. ४८१ माघसम्म केहीले राजदेवलाई नै राजा मानेको कुरा माथि उद्‌धृत हस्तलिखित ग्रन्थको पुष्पिकावाक्यबाट थाहा पाइन्छ ।

यसरी बाबु छँदै जयार्जुनदेवलाई राजा थाप्ने काम महत्त्वाकाङ्क्षी महाथ जयसिंहरामको योजनाअनुसार भएको हो । यो कुराको स्पष्ट झलक जयसिंहरामको प्रशस्तिरूपको ने.सं. ५२१ को ताम्रपत्रबाट पाइन्छ । विचारार्थ उक्त ताम्रपत्रको एक अंश यहाँ उद्‌धृत गरिन्छ–

"अत्रासीज्जयसिंहरामनृपतिः प्रख्यातभूमण्डले
श्रीमान् श्रीभगवान् शिवः पशुपतिर्येन प्रतिष्ठापितः ।
येनैवापि जयार्ज्जुनो नरपतिः पुष्पाभिषेकः कृतो
येनासौ स्थितिराजमल्लनृपतिः पट्टाभिषेकीकृतः ॥"

[यस सहरमा प्रसिद्ध जयसिंहराम राजा (शासक) हुनुहुन्थ्यो । उहाँले भगवान् श्रीपशुपति स्थापना गर्नुभयो । राजा जयार्जुनको पुष्पाभिषेक उहाँले नै गर्नुभएको थियो । राजा स्थितिराज मल्लको पट्टाभिषेक उहाँले नै गर्नुभएको थियो ।]

**देवलदेवीको मृत्यु**

राजा जर्याजुनदेवलाई गद्दीमा राखी महत्त्वाकाङ्क्षी महाथ जयसिंहराम अगाडि बढेपछि पहिलेको राजनैतिक अवस्थामा केही परिवर्तन देखापर्न थाल्यो । यत्तिकैमा ने.सं. ४८६ (वि.सं. १४२३) वैशाखमा देवलदेवीको मृत्यु

भयो । गोपालवंशावलीकारले यहाँनिर पुगेपछि देवलदेवीलाई 'महादेवी' भन्ने विशेषण लगाएका छन्–

> "स ४८६ वेशाष शुदि ७ श्रीदेवलदेवि महादेवीस अस्त: ॥
> भोग वर्ष ६६ मास ८ ॥" (५४ पत्र)

[ने.सं ४८६ (वि.सं. १४२३) वैशाख शुक्ल सप्तमीका दिन महादेवी श्रीदेवलदेवीको मृत्यु भयो ।]

**धर्म मल्लको जन्म**

'उपराज' का हैसियतले अगाडि बढेका सुरुमै जयस्थिति मल्लका लागि एक शुभसूचक घटना घट्यो । ने.सं. ४८७ (वि.सं. १४२४) आषाढमा स्थिति मल्लका जेठा छोरा धर्म मल्लको जन्म भयो । गोपालवंशावलीकारले धर्म मल्लको जन्मतिथि यसरी टिपेका छन्–

> "सं. ४८७ प्रथमाषाढकृष्णअमावास्या घटि ५३ भाद्र घटि ८
> व्याघात घटि ३१ आदीतवार वेला संप्रघटि २२ विघटि २३
> श्रीजयस्थितिराजमलदेवस्य पुत्र श्रीजयधर्ममलदेवस्य जात: ॥"

रुद्रमल्लकी दौहित्री राजल्लदेवीका तर्फबाट यसरी छोरा जन्मेको हुनाले मूल गद्दीमा दाबी गर्न स्थिति मल्ललाई यसबाट बल मिलेको देखिन्छ ।

**ललितपुरमा स्थिति मल्लको स्वागत**

'उपराज' का हैसियतले स्थिति मल्ल अगाडि बढेपछि अब दुई महत्त्वाकाङ्क्षी पुरुष जयस्थिति मल्ल र महाथ जयसिंहरामको टक्कर पर्न थाल्यो अनि जयसिंहरामले अर्जुनदेवका पक्ष लिई भित्रभित्रबाट स्थिति मल्लको विरोधमा लाग्न सुरु गरे ।

यसबेला भक्तपुरको तिपुर राजधानीपछि ललितपुर मनिगलको उपत्यकामा दोस्रो मुख्य स्थान थियो । ललितपुरका एक थरी महापात्रहरू अर्जुन मल्लका बूढा मावली खलक पर्दथे । यसैले ललितपुरमा स्थिति मल्लको प्रभाव केही कम थियो । यसकारण चतुर स्थिति मल्लले ललितपुरमा आफ्नो प्रभाव फैलाउन ललितपुरका प्रसिद्ध जयत मूलमी आदि भारादारलाई हात लिए । जयत मूलमीले ललितपुरमा स्थिति मल्लको भव्य स्वागत गर्ने प्रबन्ध मिलाइदिए । यसो हुँदा वि.सं. १४२७ वैशाखमा ललितपुरमा स्थिति मल्लको ठूलो स्वागत भयो । सुनको तोरण हाली ढोका बनाई, बाटामा कपडा बिछ्याई, सुन राखी, अर्घ्य दिई स्थिति मल्ललाई मनिगलमा भित्र्याइयो । यस कुराको वर्णन गोपालवंशावलीकारले यसरी गरेका छन्–

> "स ४९० वेशाष शुद्धि ३ श्रीश्रीजयस्थितिराजमलदेवस, यङ्गं
> मनिगल स्मस्तसन जात्रा बिज्याचकाटोम्. लु तोरण वृन्दन

> माल खास्यं वंशाद्व लास्यं, दुं– बिज्याचकम् मनिगलस तव तव मीस प्रमुख नायकसन लेचास्यं लुंन अर्घ याङा, स्येष्ठ प्रमुख जयत मुलमीस ॥" (५६ पत्र)

[ने.सं. ४९० (वि.सं. १४२७) वैशाख शुक्ल तृतीयाका दिन श्रीश्री जयस्थितिराज मल्लदेव ललितपुर मनिगलमा (मछिन्द्रनाथको) जात्रामा जानुभयो । सुनको तोरण हालीकन, बाटामा कपडा बिछ्‍याईकन मनिगलमा भित्र्याइयो । ठूलाठूला मानिस, मुख्यमुख्य नाइकेहरूले खुसीसाथ सुनको अर्घ्य दिए । भारादारहरूमा मुख्य जयत मूलमी थिए ।]

यसको लगत्तै एउटा अर्को घटना पनि भएको थियो । त्यसको पनि यहाँ उल्लेख गर्नु आवश्यक देखिन्छ । यसबेला पशुपतिनाथको भण्डारमा चोरी भयो । स्थिति मल्लले ललितपुरका ठूलठूला चोरहरूलाई समाती ल्याई काट्न लगाए । यति गरी पशुपतिलाई फेरि भण्डार चढाइयो । यस कुराको टिपोट गोपालवंशावलीकारले यसरी गरेका छन्-

> "थोलवु ग्वलम्भण्डार खुया श्रीश्रीजयस्थितिराजमलदेवसन यद्वया प्रधान प्रधान खुं ज्वोंजकं हस्यम् बाद्वंपीण्टो खोशीस स्याचकम् भण्डार श्रीपशुपतिस डोहरपाटोम् ॥" (५६ पत्र)

[यसैवेला देउपाटनको भण्डारमा चोरी भएको हुँदा श्रीश्री जयस्थितिराज मल्लदेवले ललितपुरका ठूलठूला चोर पकन लगाई बाद्वंपीण्टो खोलामा काट्न लगाए । भण्डार श्रीपशुपतिलाई चढाइयो ।]

**जयसिंहराम कैदमा**

यसरी स्थिति मल्लले आफ्नो स्थिति सुदृढ पार्दै गएपछि महाथ जयसिंहरामले स्पष्ट रूपमा स्थिति मल्लका विरुद्ध विद्रोह गर्ने नीति लिए । यसको सुइँको पाई वि.सं. १४२९ वैशाखमा महाथ जयसिंहरामलाई पकी स्थिति मल्लले नेल ठोके । यस घटनाले ललितपुरका भारादार प्रजाहरूले विद्रोह गरे र स्थिति मल्लका विरुद्ध लड्न ठिमीसम्म आइपुगे । स्थिति मल्ल स्वयम् अघि सरी लड्न गए । ठिमीमा लडाइँ भयो । स्थितिमल्लको जित भयो । महापात्र आदि ५३ जना ललितपुरेहरू यस युद्धमा परे । गोपालवंशावलीकारले यस उल्लेखनीय घटनाको वर्णन यसरी गरेका छन्–

> "स ४९२ वेशाष वद्धि आमावास्या कोन्हु चा, चद्वखुनि थामछेन वेयेटा ङासयाव ज्वङाव अठकसवण्टास निवद्वकं ढिङताटों जयसिंद्वराम म'हा'थटो थ्व सम्वच्छलसवु दीतलाथो व नवमी कोन्हु यद्वं प्रजा आदिन, हाथार थ्यमीस जारवा थे श्रीश्रीजयस्थितिराजमलदेवसन थमु अगुमान याङ पिंपाल, फुङामी शिक्व प्रधान नामधारी पात्रादिन म्हं ५३ .." (५५ पत्र)

[ने.सं. ४९२ (वि.सं. १४२९) वैशाख कृष्ण अमावास्याका दिन राति चह्रखुनि थामछेंबाट ... समातेर ल्याई अठकवण्टा भन्ने ठाउँमा महाथ (महामन्त्री) श्रीजयसिंहरामलाई नेल ठोके । यस सालको आषाढ शुक्ल नवमीका दिन पाटनका प्रजा आदि ठिमीमा लड्न आए । यसबेला श्रीश्री जयस्थितिराज मल्लदेव स्वयं अघि सरी लड्न गए । लड्न आउनेहरूमा प्रधानपात्र आदि ५३ जना परे । ...]

यसरी यस ठिमीयुद्धमा सफलता पाएका हुनाले स्थिति मल्ल अत्यन्त प्रसन्न भए । यसको सङ्केत स्थिति मल्लले यस युद्धको साइत हेर्ने ज्योतिषीलाई बकस दिएको कुराबाट पाइन्छ । हुन पनि यस ठिमीयुद्धमा विजय भएपछि स्थिति मल्लको शक्ति झन् बढ्यो । यसपछि स्थिति मल्ल 'उपराज' का हैसियतले स्पष्ट रूपमा शासन गर्न लागे । यस कुराको झलक स्वयम्भूको अभिलेखबाट पाइन्छ । ठिमीको युद्धमा सफलता पाउँदा स्थिति मल्लले साइत हेर्ने ज्योतिषीलाई बकस दिएको वर्णन गोपालवंशावलीकारले यसरी गरेका छन्–

> "पींपाले मुहूर्त्त सोक्व येछु गोमीन्द भाटो, थ्व मुहूर्त्तन आमोद जुयाव, श्रीश्रीजयस्थिति मलदेवसन गोमीद भाटों ... अङ्गाल बिस्यं मान याङ, राजकुल यूदिशिंटो खंङाव रुसरपं वया ॥"
> (५५ पत्रबाट)

[लडाईँको साइत येछुका गोविन्द भाले हेरेका थिए । यस साइतबाट जित भएको हुनाले श्रीश्री जयस्थिति मल्लदेवले गोविन्द भालाई... बकस दिई मान गरे । राजदरबारका ज्योतिषी यो कुरा थाहा पाएर रिसाउँदै आए ।]

वि.सं. १४२९ श्रावणमा जयसिंहराम कैदबाट छुटे । यसको चर्चा गोपालवंशावलीकारले "थ्व सम्वच्छलसवु गुणिला गाक्व आमावास्या कोन्हु महाथस बंधनमुक्ति" (५५ पत्र) भनी गरेका छन् । यसरी तीन महिनापछि नै महामन्त्री जयसिंहराम कैदबाट छुटे । यसबाट उनले अब फेरि स्थिति मल्लका विरुद्ध नचल्ने वचन स्थिति मल्ललाई दिएको बुझिन्छ । हुन त यस विषयमा गोपालवंशावलीकारले खुलाएर केही लेखेका छैनन् । तर पछि जयसिंहराम स्थिति मल्लका भक्त, अनुयायी बनेको घटनाबाट उक्त कुराको पुष्टि हुन्छ । यस विषयमा तल चर्चा गरिनेछ ।

**ज्योतिर्मल्लको जन्म**

यसरी सङ्घर्ष गर्दै सफलतासाथ स्थिति मल्ल अगाडि बढ्दै गइरहेका बेलामा स्थिति मल्लका माहिला छोरा ज्योतिर्मल्लको जन्म भयो । यो पनि उनका लागि खुसीको कुरा भयो । साथै मूल गद्दीमा दाबी गर्न पनि उनलाई केही बल मिलेको थियो । यसकारण ज्योतिर्मल्लको जन्म पनि उल्लेखनीय

रहेको थियो । गोपालवंशावलीकारले ज्योतिर्मल्लको जन्ममिति यसरी टिपोट गरेका छन्–

"स ४९३ वेशाषशुक्ल दशमी पूर्व्व फाल्गुण प्र उत्र फाल्गुण 'न'क्षत्र श्रीजयजोतिमलदेवस जात दिन: ।" (५५ पत्र)

**स्थिति मल्लका निर्माणात्मक र धार्मिक कार्य**

यसरी विरोधीहरूलाई दबाउँदै शासनाधिकार आफ्नो हातमा लिन सफल भएपछि स्थिति मल्लले सुरक्षामा विशेष ध्यान दिए । उनले सुरक्षा प्रबन्धका लागि ठाउँठाउँमा किल्लाहरूको पुनर्निर्माण गर्ने कार्य गरे । कुलो, धारा आदि बनाउन लगाए । अनेक धार्मिक कार्यहरू सम्पन्न गरे । गोपालवंशावलीकारले यी काम कुराको वर्णन निकै गरेका छन् । समयाभावले तिनको विवरण यहाँ दिइएको छैन; पछि यस विषयको विवेचना गरिनेछ ।

**राजा जयार्जुनदेवको निष्कासन**

अब गद्दीनसिन राजा अर्जुनदेव नि:सहाय भइसकेका थिए । गद्दीको शोभा बढाउनुमात्र उनको काम रहन गएको थियो । तैपनि उनी छउन्जेल अधिकार एकलौटी गर्ने काममा बाधा पर्ने सम्भावना हुँदा जयार्जुनदेवलाई पन्छाउने विचार स्थिति मल्लले गर्न लागे । जयार्जुनदेवहरू भ्वन्त (बनेपाली) थिए । यसैले जयार्जुनदेवलाई बनेपातिर धपाइदिने योजना मिलाइयो । अनि वि.सं. १४३७ मङसिरमा महामन्त्री जयत आदि सारा भारादारहरूको सम्मति देखाई जयार्जुनदेव बनेपा धपाइए । साधारण प्रजाले यस घटनालाई जयार्जुनदेवको राज्यच्युति भन्ने नठानून् भन्ने अभिप्रायले बाहिर सम्मान देखाई ठूलो जात्राका रूप दिइएको थियो । वास्तवमा आफूलाई राज्यच्युत गरेको यो घटना बिचरा जयार्जुनदेवलाई असह्य भयो । त्यसैले यसको २२ दिनपछि राति जयार्जुनदेव बनेपाबाट भागेर आए । उनले पहिले गोकर्णको किल्लामा शरण लिए । केही दिनपछि ठूलो कष्टले उनी भक्तपुरमा पसे । यसरी जयार्जुनदेव फेरि भक्तपुरमा पसेका हुनाले यसबाट गडबडी मच्चिएला भनी स्थिति मल्लले उनलाई समाती तिपुर क्वाछेंमा कैद गरी राखे । परन्तु यस घटनाले भक्तपुरमा कुनै गडबडी उत्पन्न भएन । भक्तपुरका प्रजाले जयार्जुनदेवका पक्षमा कुनै आवाज उठाएनन् । कडा बन्धनमा परेका हुनाले यसको एक वर्षपछि वि.सं. १४३८ मा जयार्जुनदेवको मृत्यु भयो ।

**स्थिति मल्लको चतुरता र स्थिरता**

यसरी अब स्थिति मल्ल एकमात्र स्वतन्त्र महाराजाधिराजका रूपमा देखापरे । तर स्थिति मल्ल चतुर राजनीतिज्ञ पुरुष थिए । अहिले बल र बुद्धिले विरोधीहरूलाई दबाई राज्याधिकार हात लगाए तापनि पछि फेरि

विद्रोह हुन सक्ने कुरा स्थिति मल्लले देखे । यसकारण जयार्जुनदेवपछि आफू गद्दीमा बसे तापनि, प्रजाले महाराजाधिराजका रूपमा मान्यता दिए तापनि आफ्नो जीवनभर 'राजल्लदेवीका पति' का हैसियतले रहनु नै उनले श्रेयस्कर सम्झे ।

यसरी विधिवत् सत्तामा आउन सफल भएपछि 'लब्धप्रशमन' का लागि स्थिति मल्लले अनेक कदम उठाए । यसको चर्चा गोपालवंशावलीकारले गरेका छन् । प्रजाहित र देशहितका यिनै कार्यले गर्दा स्थिति मल्ल मध्यकालको नेपालको इतिहासमा नयाँ मोड ल्याउन सफल भए ।

## परिशिष्ट १

(१)

१. ॐ नम । श्रीपशुपतये ॥ ॥ कमेन वर्तमाने कलियूगे समस्तभूपालमौलिमालाचरणाम्बुजस्य: रा–

२. जा श्रीमत: पृथ्विस्थिता राजा हिमवत: शैलमध्येवर्त्तिनि महारथिभूतमंण्डले भृंगारेश्वरभट्टारक प्रादुर्भू–

३. त: तदनु गौतमादिभि ऋषिगणैस्तत्र गोतमेश्वरादयो देवा: प्रतिष्ठिता भृंगारेश्वरभट्टारकश्लेमा–

४. न्तकवने विहरति स्म ॥ नेपनामा गोपालो वभूव तस्य कपिलगवी वाग्मती वेगत्वा तया छिरधारया

५. संसिक्ते भूप्रदेशे श्रीमान् पशुपति प्रगासित, तेन नेपनाम्ना गोपालेन पशुपति प्रतिष्ठा कृत: ॥ त–

६. त परेन गोपालवंशानो कमेन राज्य भुंजित ॥ तत्राद्य: राजा श्रीभून्मागह वर्ष ८४ राजा श्रीजयगू–

७. प्त वर्ष ७३ मास ३ ॥ राजा श्रीपरमगुप्त वर्ष ९१ ॥ राजा श्रीहर्षगुप्त ६७ ॥ राजा श्रिभिमगुप्त वर्ष ३८ ॥ राजा श्रीमनीगूप्त वर्ष ३७ ॥ रा-

८. जा श्रीविष्णुगुप्त वर्ष ४६ ॥ राजा श्रीजयगुप्त वर्ष ७१ मा १ ॥ एवमष्टौ श्रीगोपालराजान: । तत गोपा-

९. लान् निर्जित्य महि(ष)पालकमेन राज्यप्रतिपालनाय: राजा श्रीवरसिंह वर्ष ४९ ॥ राजा श्रीजयसिंह

(२)

१. वर्ष २१ मास ७ ॥ राजा श्रीभुवनसिंह वर्ष ४१ ॥ एते नु गोपाल महि(ष)पाला राजानो भवंति ॥ ॥ तत

२. पश्चात्सर्व्वकिरातराजा प्रवृत्त ॥ राजा श्रीएलं वर्ष ९० राजा श्रीपंमि वर्ष ७९ मास ३ ॥ राजा श्रीधस्कं व–

३. र्ष ३७ ॥ राजा श्रीवलंच वर्ष ३१ मास ६ ॥ राजा श्रीहुत्ति वर्ष ४१ मास १ ॥ राजा श्रीहुमति वर्ष ५० ॥ रा–

४. जा श्रीतुस्क वर्ष ४१ मास ८ ॥ राजा श्रीशुपस्थ वर्ष ३८ मास ६ ॥ राजा श्रीपर्व वर्ष ५६ ॥ राजा श्रीजित्य–

५. दास्ति वर्ष ६० ॥ राजा श्रीपंच्यं वर्ष ७१ ॥ राजा श्रीक्यंक्यं वर्ष ५६ ॥ राजा श्रीस्वनंद वर्ष ५० मास ८ ॥

६. राजा श्रीथुंको वर्ष ५८ ॥ राजा श्रीगीघृ वर्ष ६० मास २ ॥ राजा श्रीजन्य वर्ष ७३ मास २ राजा श्रीलुकं वर्ष

७. ६० मास १ राजा श्रीथोर वर्ष ७१ ॥ राजा श्रीथोक्को वर्ष ८३ ॥ राजा श्रीवर्म्म वर्ष ७३ मास ६ ॥ राजा श्री-

८. गुंज वर्ष ७२ मास ७ राजा श्रीपूस्कं वर्ष ८१ ॥ राजा श्रीत्यस्नु वर्ष ५६ ॥ राजा श्रीभुग्मं वर्ष ५८ ॥ राजा

९. श्रीसस वर्ष ६३ राजा श्रीगुनं वर्ष ७४ ॥ राजा श्रीखिंबुं वर्ष ७४ ॥ राजा श्रीगलिजं वर्ष ८१ ॥ एते कि–

(३)

१. रात राजान ॥ ॥ अथान्तरे सूर्य्ये वंसोत्पति कथ्यते ॥ कल्पांते भगवद्विष्णुनाभि– कमलोद्भवो ब्रह्मा

२. प्रादुर्भूत ॥ ब्रह्मन पूज मरीची । मरिचे पूत्र कश्यप ॥ कस्यपस्य पूत्रो भगवां सूर्य्यः ॥ सूर्य्यस्य पूत्रो मनू ॥

३. मनो पूत्र काकूत्थ ॥ काकूत्थस्य पुत्र वेणुः ॥ वेणो पूत्र पूष्प ॥ पूष्पपूत्र अनन्य ॥ अनण्यस्य पूत्रो पृथू ॥

४. पृथूपूत्र स्त्रिशंकर ॥ स्त्रीसकरस्य पूत्रो धुंधिमार ॥ धुंधिमारस्य पूत्रः पवनास्व ॥ पवनास्वपूत्र मांधा–

५. ता ॥ मांधातास्य पृत्रो सुशंधि ॥ सुसंधिस्य पुत्रो धृतसंधि ॥ धृतसंधिस्य पूत्र भरत ॥ भरतस्य पूत्रो

६. असित ॥ असितस्य पूत्र सगर ॥ सगरस्य पूत्र असमंज ॥ अशमंजस्य पूत्रो अंशुमान ॥ अंशुमानस्य

७. पूत्रो दिलीप ॥ दिलिपस्य पूत्रो भगीरथ ॥ भगिरथस्य पूत्रो ककुत्स्थ ॥ ककुत्स्थपूत्रो रघु ॥ रघुस्य

८. पूत्रो कल्माषपाद ॥ कल्माषपादस्य पूत्रो संखने ॥ संषनेस्य पूत्रो समुद्रसेन ॥ समूद्रसेन्नस्य पूत्रो अ–

९. ग्नीवर्ण ॥ अग्नीवर्णस्य पूत्रो श्रीगर्ग । श्रीगर्गस्य पूत्रो पशूसुत । पसूसुतस्य पुत्रो अम्बरीष ॥ अ-

(४)

१. म्बरीषस्य पूत्रो नहुष ॥ न(हु)षस्य पूत्रो वनाभाग ॥ वनभागस्य पुत्रो अज ॥ अजस्य पुत्रो भगी-

२. रथ ॥ भगीरथस्य पूत्रो दशरथः ॥ दशरथस्य पूत्र राम ॥ रामस्य पूत्र लवकूशौ ॥ लवकूसस्य पूत्र

३. स्यात् ॥ एते अजोध्यानृपा वर्तंते ॥ ॥ अत परे इक्ष्वाकूवंसे ॥ वीसाल ॥ विसालपूत्रः हेमचन्द्र ॥ हे-
४. मचन्द्रस्य पूत्र सुचन्द्र ॥ सुचंद्रस्य पूत्र धूंमा ॥ धूमास्य पूत्र सृंजये ॥ सृंजएस्य पूत्रो सूवर्णषति ॥
५. सुवर्णषतिस्य पूत्रो कृशाश्व : ॥ कृसाश्वस्य पूत्र सोमदत्त ॥ सोमदत्तस्य पूत्रो वंशजन्मेजयः वंशज-
६. न्मेजयस्य पूत्रो प्रमिति ॥ प्रमितिपूत्रो मतिमान् ॥ मतिमानस्य पूत्रो वसे ॥ वसे पुत्रो ॥ एते नृप
७. विमाननगरी अवतार्य्य सूर्य्यवंश भगवान् बभूवू ॥ ॥ अथ नेपाले किरातप्रवेश पून किरातान्
८. विनिर्ज्जित्य ॥ राजा श्रीनिमिषितं काल वर्ष ५० ॥ राजा श्रीमता रात्र वर्ष ९१ ॥ राजा श्रीकाकवर्म्मा वर्ष
९. ७६ ॥ राजा श्रीषष्टपूष्पदेव वर्स ५६ ॥ अनेन नेपालभूमि चातुर्वर्णमयि कृता ॥ राजा श्री-

(५)

१. भास्करवर्मा वर्ष ७४ ॥ राजा श्रीभूमीवर्मा वर्ष ४१ ॥ राजा श्रीचन्द्रवर्मा वर्ष २१ ॥ राजा श्रीजयवर्मा वर्ष ६२ ॥
२. राजा श्रीवर्षवर्मा वर्ष ५७ ॥ राजा श्रीसर्ववर्मा वर्ष ४८ ॥ राजा श्रीपृथिवर्मा वर्ष ५६ ॥ राजा श्रीजेष्टव-
३. र्मा वर्ष ४८ ॥ राजा श्रीकूवेरवर्म्मा वर्ष ६४ ॥ राजा श्रीहरीवर्मा वर्ष ७६ ॥ राजा श्रीसिद्धिवर्म्मा वर्ष ६१ ॥ रा-
४. जा श्रीहरीदत्तवर्मा वर्ष २९ ॥ राजा श्रीवसुदत्तवर्मा ३३ ॥ राजा श्रीसिरीपति वर्मा वर्ष ३ ॥ राजा श्रीवृ-
५. द्धिवर्मा वर्ष ७७ ॥ राजा श्रीवशन्तदेववर्मा वर्ष ६१ ॥ राजा श्रीपुष्पदेववर्म्मा वर्ष ५६ ॥ राजा श्रीभास्कर-
६. देव वर्ष ७४ ॥ राजा श्रीभूमिवर्मा वर्ष ५१ ॥ राजा श्रीचन्द्रवर्मा २१ ॥ राजा श्रीजयवर्मा वर्ज ६७ ॥ राजा श्री-
७. वर्षवर्मा वर्ष ५५ ॥ राजा श्रीसर्व्ववर्मा वर्ष ४८ राजा श्रीपृथिवर्मा वर्ष ७६ ॥ राजा श्रीजेष्टवर्मा वर्ष ६८ ॥
८. राजा श्रीकुबेरवर्मा वर्ष ७५ ॥ राजा श्रीहरीवर्मा वर्ष ४६ ॥ राजा श्रीसिद्धिवर्मा वर्ष ६१ ॥ राजा श्रीहरिद-
९. त्तवर्मा वर्ष २९ ॥ राजा श्री(व)सुदत्तवर्मा वर्ष ३३ ॥ राजा श्रीपतिवर्ष ३५ ॥ राजा श्रीसिववृद्धिवर्मा वर्ष ७७ ॥

(६)

१. राजा श्रीवसन्तदेववर्मा वर्ष ६१ राजा श्रीशिवदेववर्मा वर्ष ५७ ॥ राजा श्रीवृषदेववर्मा वर्ष ५७ ॥ तेन

२. सांगु महाचैत्रभट्टारकाय प्रतिष्ठितं ॥ ॥ राजा श्रीशंकरदेव वर्ष ५० ॥ राजा श्रीधर्म्मदेव वर्ष ५१ ॥ ॥

३. तत अवंसजप्रतिपालित पुत्र ॥ राजा श्रीमानदेव वर्ष ३९ ॥ सुसस्ततहिन ॥ मानविहाराश्च ॥ राजा श्री-

४. धानि मानगृहं समपरमसमेतं दिर्घिकाद्वयशंयूक्तं चतुसावतमोदन-धारवेष्टितं ॥ राजा श्रीमहि-

५. देव वर्ष ५१ राजा श्रीवशन्तदेव वर्ष ५६ ॥ राजा श्रीउदयदेव वर्ष ४७ ॥ राजा श्रीमानदेव वर्ष ४५ ॥ रा-

६. जा श्रीगुनकामदेव वर्ष ५० ॥ राजा श्रीशिवदेव वर्ष ४१ मास ६ राजा श्रीसिवदेव वर्ष ४१ मा ६ ॥ राजा

७. श्रीनरेंद्रदेव वर्ष ३४ ॥ तेन पशुपतिभट्टारकाय अनेकरत्नविचित्रकोषं संप्रदत्तं ॥ राजा श्रीभीमदेव

८. देव वर्ष १६ ॥ तत्परेन सूर्य्यवंश विनिर्जित्य पूनश्च गोपालवंश राज्यं करोति ॥ राजा श्रीवि(जि)ष्णुगूप्त वर्ष ७४ ॥

९. राजा श्रीविष्णुगुप्त ६१ ॥ राजा श्रीभूमिगूप्त वर्ष ४५ ॥ ॥ भूयोपि सूर्यवंशो राज्यं चकार ॥ राजा श्रीशिवदेव

(७)

१. वर्ष ४१ ॥ तद्भग्नीय राजा अंशुवर्मा वर्ष ५३ ॥ तेन व्याकर्णादिशास्त्रश्च कृतवान् तस्य राजा पूत्र श्रीमा-

२. न ततः गवुदेश्वर आगतेन नेपाल व्याहार प्रतिष्ठितवान् कृत्य वर्ष १० ॥ राजा श्रीकृतवर्मा वर्ष १८

३. ॥ राजा श्रीभिमार्जुनदेव वर्ष ३७ ॥ राजा श्रीनंददेव वर्ष १३ ॥ राजा श्रीशीवदेव वर्ष १६ ॥ यथासुखि भिक्षुश्च

४. कृता सास्त्रदिश्च ॥ राजा श्रीनरीन्द्रदेव वर्ष ३३ ॥ राजा श्रीबलदेव वर्ष १७ ॥ राजा श्रीशंषरदेव वर्ष १२ ॥ राजा

५. श्रीवर्द्धमानदेव १६ ॥ राजा श्रीशंकरदेव वर्ष १२ ॥ राजा श्रीभिमार्जुन वर्ष १६ ॥ राजा श्रीजयदेव वर्ष १९ ॥ रा-

६. जा श्रीबलदेव वर्ष १६ ॥ पश्चात् भोटमंडले स्वराज्यं करोति ॥ राजा श्रीरुद्रदेव वर्ष २७ ॥ तेन पुन भोटान्तप-

७. र्य्येतं निष्कंठकराज्यं करोति । राजा श्रीजयदेव वर्ष ४२ मास ११ ॥ राजा श्रीव्लदेद वर्ष ११ ॥ राजा श्रीवाला-

८. र्जुनदेव वर्ष ३६ मास ७ ॥ राजा श्रीमानदेव वर्ष ३६ तेन वल्वनादं तवनिमी प्रतिष्ठितं ॥ राजा श्रीराघ-

९. व वर्ष ६३ मा ८ ॥ राजा श्रीशंकरदेव वर्ष १८ मा ६ ॥ राजा श्रीसहदेव वर्ष ३३ मास ९ ॥ राजा श्रीविक्रमदे-

(८)

१. व वर्ष १ ॥ राजा श्रीनरेंद्रदेव वर्ष १ मा ६ ॥ राजा श्रीगुणकामदेव वर्ष ८५ मास ६ ॥ तेन पशुपतिभट्टा-

२. रकाय एकादश कोष प्रदत्तं ॥ राजा श्रीउदयदेव वर्ष ६ ॥ राजा श्रीनीर्भयदेव वर्ष ५ ॥ राजा श्रीभोजदेव रु-

३. द्रदेव वर्ष ९ माश ७ ॥ भोजदेवेन श्रीमंण्डप विनाशिता ॥ राजा श्रीलक्ष्मीकामदेव वर्ष २१ ॥ तेन हि चंपट-

४. पश्चात्सहिते सवत्सरे नीधाने राष्ट्र सान्ती कृता ॥ जयदेव वर्ष ७० ॥ तेन हि ललितपूर अर्द्धराज्यं कृत्य वर्ष १० ॥

५. राजा श्रीभास्करदेव जयदेव उभयराजा वर्ष ७ मास ४ ॥ तेन हि भास्करदेवेन पित्रिमौलि कृत १० ॥ राजा श्रीब-

६. लदेव वर्ष १२ ॥ राजा श्रीपद्मदेव वर्ष ६ ॥ राजा श्रीनागार्जुनदेव वर्ष ३ ॥ राजा श्रीशंकरदेव वर्ष १७ ॥ तेन देवकू-

७. लं च पूर्नं कृत्य ॥ राजा श्रीवामदेव ३ ॥ हर्षदेव वर्ष १६ ॥ राजा श्रीवामदेव वर्ष ३ राजा श्रीहर्षदेव वर्ष १६ ॥

८. राजा श्रीशिवदेव वर्ष २७ मास ७ ॥ राजा श्रीइन्द्रदेव वर्ष १२ राजा श्रीमानदेव वर्ष ४ मास ७॥ राजा श्रीन-

९. रेंद्रदेव वर्ष ६ माश ४ ॥ राजा श्रीनंददेव वर्ष २० ॥ सम्वत् २६७ पौषकृष्णत्रयो शुक्रदिन श्रीरुद्र (श्रीनंद)

(९)

१. देवपूष्पाभिषेकं कृतवान् ॥ राज्ये पूष्पाभिषेकात् तुषारवृष्टिश्च भवति ॥ राजा रुद्रदेव वर्ष ८ मा १ ॥

२. राजा श्रीमृतदेव वर्ष ३ मा ११ महादुर्भिछं भवति ॥ सम्वत् २९९ कार्त्तिककृष्णषष्टि शुक्रवार ॥ राजा श्रीसे.-

३. मेश्वर वर्ष ६ मा ३ ॥ राजा श्रीविजयकामदेव वर्ष ५० मास ७ ॥ राजा श्रीअरीमल्लदेव वर्ष ३१ मास ९ ॥ राजा

४. श्रीअभयमल्लदेव ४८ मा २ महामारी अनावृष्टि दुर्भिक्ष प्रजाक्षय भूमिकंम्प छत्रभंग ॥ सम्वत् ३७५ आ-

५. षाढशुक्ले २ पूनर्व्वसु सोमवासरे ॥ राजा श्रीजयदेव वर्ष २ माश ७ ॥ राजा श्रीअनन्तमल्लदेव वर्ष ३२ मा १० ॥

६. नेपाल यूवराजिनि विरमदेवीनां कृत्य सोमेश्वरनीमं देव कृत पून चंगुदेवालय कृतं ॥ ध्वजा-

७. रोहनं च ॥ पून इन्द्रकूट प्रतिष्ठितं ध्वजारोहनं च ॥ जयशक्तेर्माता विरमेदेवी ॥ तत्रान्तरे राजा ज-

८. यानन्ददेव वर्ष ॥ अनंतरे जयतुंगमल्लस्य आत्मजः श्रीजयरुद्रमल्लदेव प्रभूतेन स्वकूटुं-

९. वश्रीजयारीमल्लदेव पूष्पाभीषेकं कृत्य राजा भुक्तिमात्रं ददौ ॥ तत्रान्तरे आदित्यमल्ल नेपा-

(१०)

१. ले प्रतिष्ठित ॥ सम्वत् ४४८ चैत्रशुक्लपूर्निमा ललिमग्रामे डंडे भवति ॥ तदंन्तरे पूर्व्वा शूतानागत ॥

२. अथ वंसावलि लिष्यते ॥ ॥ नन्देन्दुशून्यशशि १०१९ सम्मत शाकवर्षे त श्रावनस्य धवले मुनीति-

३. थ्यधस्तात् । स्वात्यां शनैश्चरदिने रिपूमर्द्दलग्ने श्रीनान्यदेव–नृपतिर्विदधित वास्तुं ॥ श्रष्टा नान्य-

४. पतिर्व्वभुव तदनु श्रीगांगदेव नृप तत्सूनुर्न्नरसिंहदेवनृपति श्रीराम–सिंहस्ततः । तत्सूनूर्भव-

५. सिंहदेव उदित श्रीकर्म्मसिंहसुत. तत्सूनुर्हरसिंहदेवनृपति कर्णाट–चूडामनी ॥ वानाब्धियुग्म-

६. शशि १२४५ सम्मत शाकवर्षे पौषस्य शुक्लनवमि रविसुनूवारे ॥ त्यक्त्वा स्वपट्टनपुरं हरसिंहदेवो

७. दुर्दैवदेशितपथोथ गिरिं विवेश ॥

## अनुवाद

श्रीपशुपतिलाई नमस्कार । कमैले कलियुग सुरु हुन थालेपछि, सारा राजाहरूका शिरपेचका मालाले पाउ सिँगारिएका (राजाहरूले ढोगिएका) ठूला राजाहरूको राज्य चल्न थाल्यो । त्यसबेला हिमालय पहाडका बीच भागमा रहेको, घना जङ्गल भएको भूमण्डलमा (नेपालउपत्यकामा) भृङ्गारेश्वर महादेवको प्रादुर्भाव भयो । अनि गौतम आदि ऋषिहरूले त्यहाँ

गौतमेश्वर आदि देवताहरू स्थापना गरे । अनि भृङ्गारेश्वर महादेव श्लेष्मान्तक वनमा विहार गरी रहन लागे ।

'नेप' नाउँका गोपाल भए । तिनकी कैली गाईले वाग्वतीको तीरमा गई दूधले सेचन गर्न लागी । दूधले सेचन गरिएको त्यस ठाउँमा श्रीपशुपतिनाथ प्रकट भए । ती नेप नाउँ गरिएका गोपालले पशुपतिको प्रतिष्ठा गरे । त्यसपछि गोपालवंशी राजाहरूले क्रमश: राज्य गरे । तिनमा पहिला राजा श्रीभूमिगुप्त भए; वर्ष ८४ । राजा श्रीजयगुप्त; वर्ष ७३ महिना ३ । राजा श्रीपरमगुप्त; वर्ष ९१ । राजा श्रीहर्षगुप्त; वर्ष ६७ । राजा श्रीभीमगुप्त; वर्ष ३८ । राजा श्रीमणिगुप्त; वर्ष ३७ । राजा श्रीविष्णुगुप्त; वर्ष ४६ ॥ राजा श्रीजयगुप्त; वर्ष ७१ महिना १ ।

यसरी आठ जना गोपालवंशी राजा भए । त्यसपछि गोपालहरूलाई जितेर महिषपालहरूले राज्य चलाए । राजा श्रीवरसिंह; वर्ष ४९ । राजा श्रीजयसिंह; वर्ष २१, महिना ७ । राजा श्रीभुवनसिंह; वर्ष ४१ ।

यति गोपाल, महिषपाल राजा भए । त्यसपछि किरातवंशी राजाहरू भए । राजा श्रीएलम्; वर्ष ९० । राजा श्रीचंमि; वर्ष ७९ महिना ३ । राजा श्रीधस्कं; वर्ष ३७ । राजा श्रीवलंच; वर्ष ३१ महिना ६ । राजा श्रीहृत्ति; वर्ष ४१, महिना १ । राजा श्रीहुमति; वर्ष ५० । राजा श्रीतुस्क; वर्ष ४१, महिना ८ । राजा श्रीश्रुपस्थ; वर्ष ३८ महिना ६ । राजा श्रीपर्व; वर्ष ५६ । राजा श्रीजितेदास्ति; वर्ष ६० । राजा श्रीपंच्यं; वर्ष ७१ । राजा श्रीक्यंक्यं; वर्ष ५६ । राजा श्रीस्वनंद; वर्ष ५० महिना ८ । राजा श्रीथुंको; वर्ष ५८ । राजा श्रीगीघ्; वर्ष ६० महिना २ । राजा श्रीजन्य; वर्ष ७३ महिना २ । राजा श्रीलुकं; वर्ष ६० महिना १ । राजा श्रीथोर; वर्ष ७१ । राजा श्रीथोक्को; वर्ष ८३ । राजा श्रीवर्म्म वर्ष ७३, महिना ६ । राजा श्रीगुंज; वर्ष ७२ महिना ७ । राजा श्रीपूस्कं; वर्ष ८१ । राजा श्रीत्यस्नु; वर्ष ५६ । राजा श्रीभुग्मं; वर्ष ५८ । राजा श्रीसस; वर्ष ६३ । राजा श्रीगुनं; वर्ष ७४ । राजा श्रीखिंबु; वर्ष ७४ । राजा श्रीगलिजं; वर्ष ८१ ।

यति किरात राजाहरू भए । यसपछि सूर्यवंशको उत्पत्तिबारे बताइन्छ ।

प्रलयकाल पछिको उनको सृष्टिको कालमा भगवान् विष्णुको नाइटोको कमलबाट ब्रह्माको प्रादुर्भाव भयो । ब्रह्माका छोरा मरीचि भए । मरीचिका छोरा कश्यप भए । कश्यपका छोरा भगवान् सूर्य भए । सूर्यका छोरा मनु भए । मनुका छोरा ककुत्स्थ भए । ककुत्स्थका छोरा वेणु भए । वेणुका छोरा पुष्य भए । पुष्यका छोरा अनरण्य भए । अनरण्यका छोरा पृथु भए । पृथुका छोरा त्रिशङ्कु भए । त्रिशङ्कुका छोरा धुन्धुमार भए । धुन्धुमारका छोरा पवनाश्व भए । पवनाश्वका छोरा मान्धाता भए । मान्धाताका छोरा सुसन्धि भए । सुसन्धिका छोरा धृतसन्धि भए । धृतसन्धिका छोरा भरत भए । भरतका छोरा असित भए । असितका छोरा सगर भए । सगरका छोरा

असमञ्ज भए। असमञ्जका छोरा अंशुमान् भए। अंशुमान्का छोरा दिलीप भए। दिलीपका छोरा भगीरथ भए। भगीरथका छोरा ककुत्स्थ भए। ककुत्स्थका छोरा रघु भए। रघुका छोरा कल्माषपाद भए। कल्माषपादका छोरा शङ्खण भए। शङ्खणका छोरा समुद्रसेन भए। समुद्रसेनका छोरा अग्निवर्ण भए। अग्निवर्णका छोरा श्रीगर्ग भए। श्रीगर्गका छोरा पशुश्रुत भए। पशुश्रुतका छोरा अम्बरीष भए। अम्बरीषका छोरा नहुष भए। नहुषका छोरा वनाभाग भए। वनाभागका छोरा अज भए। अजका छोरा भगीरथ भए। भगीरथका छोरा दशरथ भए। दशरथका छोरा राम भए। रामका छोरा लव, कुश भए। लव र कुशका पनि सन्तान यसै गरी भए।

यी अयोध्याका राजाहरू हुन्। अनि इक्ष्वाकु कुलमा विशाल भए। विशालका छोरा हेमचन्द्र भए। हेमचन्द्रका छोरा सुचन्द्र भए। सुचन्द्रका छोरा धूमाश्व भए। धूमाश्वका छोरा शृञ्जय भए। शृञ्जयका छोरा सुवर्णखनि भए। सुवर्णखनिका छोरा कृशाश्व भए। कृशाश्वका छोरा सोमदत्त भए। सोमदत्तका छोरा वंशजन्मेजय भए। उनका छोरा प्रमिति भए। प्रमितिका छोरा मतिमान् भए। मतिमान्का छोरा ....

यी राजाहरू विशालनगरीमा भएका हुन्। सूर्यवंशका प्रभावले नेपालमा किरात राजाहरूलाई जितेर (लिच्छविवंशका राजा भए।) ... राजा श्रीनिमित्तकाल; वर्ष ५०। राजा श्रीमकरान्त; वर्ष ९१। राजा श्रीकाकवर्मा; वर्ष ७६। राजा श्रीसुपुष्पदेव; वर्ष ५६। यिनले नेपालमा वर्णव्यवस्था चलाए। राजा श्रीभास्करवर्मा; वर्ष ७४। राजा श्रीभूमिवर्मा; वर्ष ५१। राजा श्रीचन्द्रवर्मा; वर्ष २१। राजा श्रीजयवर्मा; वर्ष ६७। राजा श्रीवर्षवर्मा; ५५। राजा श्रीशर्ववर्मा; वर्ष ४८। राजा श्री श्रीपृथ्वीवर्मा; वर्ष ७६। राजा श्रीज्येष्ठवर्मा; वर्ष ६८। राजा श्रीकुवेरवर्मा; वर्ष ७५। राजा श्रीहरित्वर्मा; वर्ष ४६। राजा श्रीसिद्धिवर्मा; वर्ष ६१। राजा श्रीहरिदत्तवर्मा; वर्ष २९। राजा श्रीवसुदत्तवर्मा; वर्ष ३३। राजा श्रीपति; वर्ष ३५। राजा श्रीशिववृद्धिवर्मा; वर्ष ७७। राजा श्रीवसन्तदेववर्मा; वर्ष ६१। राजा श्रीशिवदेववर्मा; वर्ष ५७।

राजा श्रीवृषदेववर्मा; वर्ष ५७। उनले स्वयम्भू महाचैत्य भट्टारकको प्रतिष्ठा गरे। राजा श्रीशंकरदेव; वर्ष ५०। राजा श्रीधर्मदेव; वर्ष ५१। त्यसपछि त्यस वंशमा नजन्मेका (अर्कै कुलमा जन्मेका) धर्मपुत्र पालिएका राजा श्रीमानदेव भए; वर्ष ३९। ... तिनले मानविहार बनाए। श्रीराजधानीरूपको मानगृह बनाए। मानगृह दुइटा ठूलो पोखरी भएको, चारैतिर ... ले घेरिएको थियो। राजा श्रीमहीदेव; वर्ष ५१। राजा श्रीवसन्तदेव; वर्ष ५६। राजा श्रीउदयदेव; वर्ष ४७। राजा श्रीमनुदेव; वर्ष ४५। राजा श्रीगुणकामदेव; वर्ष ५०। राजा श्रीशिवदेव; वर्ष ४१ महिना ६।

राजा श्रीनरेन्द्रदेव; वर्ष ३४। तिनले पशुपतिनाथलाई अनेक रत्नहरू भएको विचित्रको कोष चढाए।[1]

त्यसपछि सूर्यवंशीलाई जितेर फेरि गोपालवंशीले राज्य गरे। राजा जिष्णुगुप्त वर्ष ७४। राजा श्रीविष्णुगुप्त; वर्ष ६९। राजा श्रीभूमिगुप्त; वर्ष ४५।

अनि फेरि सूर्यवंशीहरूले राज्य गरे। राजा श्रीशिवदेव; वर्ष ४१। तिनका भानिज राजा अंशुवर्मा; वर्ष ५३। उनले व्याकरण आदि शास्त्र बनाए। उनका छोरा राजा श्रीमानवर्मा। त्यसपछि गौडका राजा नेपाल आई नेपालमा विहार स्थापना गरे; उनको कार्यकाल १० वर्ष। राजा श्रीकृतवर्मा; वर्ष १८। राजा श्रीभीमार्जुनदेव; वर्ष ३७। राजा श्रीनन्ददेव; वर्ष १३। राजा श्रीशिवदेव; वर्ष १६। उनले भिक्षुहरूलाई सुख दिई राखे। शास्त्रार्थ आदि पनि गराइयो। राजा नरेन्द्रदेव; वर्ष ३३। राजा श्रीबलदेव; वर्ष १७। राजा श्रीशङ्करदेव; वर्ष १२। राजा श्रीवर्द्धमानदेव; वर्ष १६। राजा श्रीशङ्करदेव; वर्ष १२। राजा श्रीभीमार्जुन; वर्ष १६। राजा श्रीजयदेव; वर्ष १९। राजा श्रीबलदेव; वर्ष १६। पछि उनले भोटमण्डलमा आफ्नो राज्य चलाए। राजा श्रीरुद्रदेव; वर्ष २७। उनले फेरि भोटान्तसम्म निष्कण्टक राज्य गरे। राजा श्रीजयदेव; वर्ष ४२ महिना ११। राजा बलदेव; वर्ष ११। राजा श्रीबालार्जुनदेव; वर्ष ३६ महिना ७। राजा श्रीमानदेव; वर्ष ३६। उनले बल्वनादं तवनिमंको प्रतिष्ठा गरे।

राजा श्रीराघवदेव; वर्ष ६३ महिना ८। राजा श्रीशङ्करदेव; वर्ष १८ महिना ६। राजा श्रीसहदेव; वर्ष ३३ महिना ९। राजा श्रीविक्रमदेव; वर्ष १। राजा नरेन्द्रदेव, वर्ष १ महिना ६। राजा श्रीगुणकामदेव; वर्ष ८५ महिना ६। उनले पशुपतिनाथलाई एघाह्रवटा कोश चढाए। राजा श्रीउदयदेव; वर्ष ६। राजा श्रीनिर्भयदेव; वर्ष ५। राजा श्रीभोजदेव र रुद्रदेव; वर्ष ९ महिना ७। भोजदेवले श्रीमण्डप नाश गरे। राजा श्रीलक्ष्मीकामदेव; वर्ष २१। उनले संवत् ... मा राष्ट्रमा शान्ति गरे। राजा जयदेव; वर्ष ७०। उनले ललितपुर राज्यलाई आधाआधा पारे; वर्ष १०। राजा श्रीभास्करदेव र जयदेव दुवै राजा भए; वर्ष ७ महिना ४। ती भास्करदेवले बाबुको शिरपेच बनाए। राजा श्रीबलदेव; वर्ष १२। राजा पद्मदेव; वर्ष ६। राजा श्रीनागार्जुनदेव; वर्ष ३। राजा श्री शंकरदेव; वर्ष १७। उनले देवमन्दिर पूरा बनाए। राजा श्रीवामदेव; वर्ष ३। राजा हर्षदेव; वर्ष १६। राजा श्रीशिवदेव; वर्ष २७ महिना ७। राजा श्रीइन्द्रदेव; वर्ष १२।

---

[1] मूलमा भास्करवर्मादेखि वसन्तदेववर्मासम्मका राजाका नाम सार्नेको असावधानीले गर्दा दोहोरिएका छन्। यहाँ अनुवादमा दोहोरिएका ती नाम समावेश गरिएका छैनन्।

राजा श्रीमानदेव; वर्ष ४ महिना ७। राजा श्रीनरेन्द्रदेव; वर्ष ६ महिना ४। राजा श्रीआनन्ददेव; वर्ष २०। ने.सं. २६७ पौष कृष्ण त्रयोदशी शुक्रबारका दिन श्रीआनन्ददेवको पुष्पाभिषेक गरिएको हो। पुष्पाभिषेक पश्चात् राज्यमा तुषारो पऱ्यो। राजा श्रीरुद्रदेव; वर्ष ८ महिना १। राजा श्रीअमृतदेव वर्ष ३ महीना ११। यिनको राज्यकालमा ठूलो अनिकाल पऱ्यो। ने.सं. २९९ कार्तिक कृष्ण षष्ठी शुक्रवारका दिनमा उनको मृत्यु भयो। राजा श्रीसोमेश्वरदेव वर्ष ६, महिना ३। राजा श्रीविजयकामदेव; वर्ष ५० महिना ७।

राजा श्रीअरिमल्लदेव; वर्ष ३१ महिना ९। राजा श्रीअभयमल्लदेव; वर्ष ४८, महिना २। उनको राज्यकालमा महामारी फैलियो; पानी नपरी अनावृष्टि भयो; अनिकाल पऱ्यो; प्रजाहरू मरे; भूकम्प भयो; छत्रभङ्गको खतरा भयो। ने.सं. ३७५ आषाढ शुक्ल द्वितीया सोमबार पुनर्वसु नक्षत्रमा. राजा श्रीजयदेव; वर्ष २ महिना ७। राजा श्रीअनन्तमल्लदेव; वर्ष ३२ महिना १०। नेपालका युवराजकी पत्नी विस्मदेवीले सोमेश्वरनिमं देवमन्दिर बनाउन लगाइन्। फेरि चाँगुनारायणको मन्दिर बनाउन लगाइन् र ध्वजा चढाइन्। फेरि इन्द्रकूटको स्थापना गरिन् र ध्वजा चढाइन्। विस्मदेवी जयशक्तिकी आमा हुन्। त्यसपछि जयानन्ददेव राजा भए। वर्ष ...। पछि जयतुङ्गमल्लका छोरा श्रीजयरुद्रमल्लदेवले आफ्नो प्रभुत्वद्वारा आफ्ना नातेदार श्रीजयारिमल्लदेवलाई पुष्पाभिषेक गराई राजालाई भोगमात्र दिए; सारा शासनाधिकार आफ्नो हातमा लिए।

त्यसपछि नेपालउपत्यकामा आदित्यमल्ल पसे। ने.सं. ४४८ चैत्र शुक्ल पूर्णिमाका दिन ललितपुरमा दण्ड गरियो। (दण्डका रूपमा प्रजासँग पैसा उठाइयो।) यसपछि पूर्वतिरबाट सुलतान शमसुद्दीन नेपालमा पसे।

अब वंशावली लेखिन्छ। शकसंवत् १०१९ (वि.सं. ११५४) श्रावण शुक्ल सप्तमी शनैश्चरवार स्वातिनक्षत्र सिंह लग्नमा श्रीनान्यदेव राजाले (राजधानीको) जग हाले। राज्यसंस्थापक नान्यदेव भए। त्यसपछि गांगदेव राजा; उसका छोरा नरसिंहदेव राजा; अनि त्यसपछि रामसिंह राजा भए। उनका छोरा भवसिंहदेवको उदय भयो। अनि कर्मसिंह भए। उनका छोरा कर्णाट राजामा श्रेष्ठ हरसिंहदेव दुर्भाग्यले गर्दा शकसम्वत् १२४५ पौष शुक्ल नवमी शनिवारका दिन आफ्नो देश छोडी पहाडतिर पसे।

## परिशिष्ट २

[१ पृष्ठ]

१. -(दे)व. वर्ष २६॥ तेन पुन भोटान्तप्रयन्तोनष्कप्टक राज्य करो-
२. (ति)॥ राजा श्रीजयदेव वर्ष ४२ मास ७ ॥ राजा श्रीवलदेव, वर्ष ११
३. ॥ राजा श्रीवालार्जुनदेव, वर्ष २१ मास ७ ॥ भ्रातुभार्य्यासंभव तेन.
४. हि. दुराभट्टारकाय. स्वमकुटं प्रदत्तं ॥ राजा श्रीमानदेव. त्रर्ष
५. ३६॥ तेन बहुल्वनादं नवनीमि प्रतिस्थितं ॥ राजा श्रीराघवदे
६. व देव. वर्ष ६ मास ६॥ श्रीपशुपति भट्टारके. संवत्सरप्रवृ
७. त्तिं कृता ॥ राजा श्रीशंकरदेव वर्ष १८ मास ६॥ राजा श्रीसहदे

[२ पृष्ठ]

१. व वर्ष ३३ मास ९॥ राजा श्रीविक्रमदेव वषृ १॥ राजा श्रीनरेन्द्र
२. देव. वर्ष १ मास ६॥ राजा श्रीगुनकामदेव. वर्ष ८५ मास ६॥ ते-
३. न पशुपतिभट्टा कायएकादशकोषं प्रदत्तं. तत्रैव ईशा-
४. नेश्वरस्य. वासुकीभट्टारकस्य ताम्रशंषलीछादनं कृत्य, तत्रैव
५. दीर्घ चोपाडिकां कृत्य ॥ सुवर्ण्णपनालि, कोटिहोमं कृतश्चेति ॥
६. ॥ ॥ राजा श्रीउदयदेव, वर्ष ६॥ राजा श्रीनिभयदेव, वर्ष ५॥
७. (राजा) श्रीभोजदेव, रुद्रदेव वर्ष ९ मास ७॥ तेन भोजदेवेन, श्री

[३ पृष्ठ]

१. ...(ना)शिता ॥ राजा श्रीलक्ष्मीकामदेव वर्ष २१ ॥तेन हि चंप-
२. ...(स) हिते सम्वत्सरनिधाने, राष्ट्र शान्ति कृत्य ॥ राजा श्री
३. ...(व)र्ष २० ॥ तेन हि ललितपुर अर्द्धराज्यं कृत्य वर्ष १०॥
४. (राजा श्री) भास्करदेव, जयदेव उभयराजा वर्ष ७ मा ४॥तेन
५. (हि भास्कर) देवेन, पितृमालि, विकृतं १० सुवर्ण्णमय. मन-
६. हरभट्टारकस्य. कांचननाशिता, तद्दोषेण अंधीभवति ॥
७. राजा श्रीवलदेव, वर्ष १२॥ तेन हि अत्यन्त सभिक्ष कारो. ते

[४ पृष्ठ]

१. न वजरथे. हहिपुर कृतं ॥ राजा श्रीपद्मदेव वर्ष ६॥ तेन

२. हि मुकुटं कृतवान् ॥ राजा श्रीनागार्जुनदेव, वर्ष ३ ॥ राजा
३. श्रीशंकरदेव, वर्ष १७॥ तेन हि नंदीसालायां, शंकेश्वरभट्टा
४. (रका)य प्रतिष्ठिता, देवकुलं च पूर्ण्णंकृत्य, राष्ट्र शान्ति का-
५. ... विहारश्च प्रारत, भगवती मनहरभट्टारकाय,
६. .... ॥ राजा श्रीवामदेव, वर्ष ३ ॥ राजा श्रीहर्षदेव, वर्ष १६
७. ... तिप्रति, सम्वतसरद्वय, प्रवर्त्तमान ॥ राजा श्रीशि

[५ पृष्ठ]

१. (वदेव वर्ष) २७ मास ७ तेनहि पशुपतिभट्टारकस्य, स्वंर्ण्णशृ-
२. (खली) छादनं कृता ॥ ततः किर्त्ति, भगतगामे वलदनी प्रवधा
३. (नी)ता, पनालिका, कूप, पुस्करणी, सकलजनानन्द कृता, चतु-
४. भूमीकं पंचपुरसरस १० युक्तं १ श्रीमत्राजागृह १० सुनिषा
५. दितं श्रीपशुपति भट्टारकस्य, रजतपद्मपुनर्घटित
६. पूर्व्वं दंमव्यवहार नास्ति, सुवर्ण्णरक्तिका स्तव्य, स्वश्रीसिंहाकृत-
७. रुपं दंम कृत व्यवहार, सुवर्ण्णमयी श्री(शि)वस्याकृति विवकाङ्क कृ

[६ पृष्ठ]

१. त्य पृथ्वीशिखरदेवस्य परिवारसहितेन, जीर्णोद्धारं कृत्य ॥
२. राजा श्रीइन्द्रदेव, वर्ष १२ ॥ राजा श्रीमानदेव, वर्ष ४ मास ७ ॥
३. राजा श्रीनरेन्द्रदेव, वर्ष ६ मास ४ माघ कृष्ण चद्रमा प्रतिपद, स-
४. प्तांद्धिके काले, वर्ष शतद्वये शुभदिने राज्यं वरं प्राप्यते । नेपा-
५. (ल) समस्त मण्डलमहीत्रात प्रजानाशनं । पीडयं शास्त्रदासुरमि-
६. श्रीनंददेव प्रभु । तेन हि भक्तग्रामे, शिवगलटोल
७. यकृतदेवद्वय प्रतिष्ठितं । त्रिपुरसहिता, राजा

[७ पृष्ठ]

१. (धनी प्र)तिष्ठित, राजकुलखनीयं, लुवर्ण्णपनाली कृता, श्रीने-
२. (पालम)हीमण्डलक, महापात्रमुखसमस्त, प्रभानां पुत्रपौत्रादि
३. ... संतापदुःखाग्नि प्रपीडते, हृदयाना च धवेन प्रव-
४. ... रापकृतानां, चौरकंवानहृर्त्यं, महास्तेन कृते शुक्रदि-
५. (ने ना) टिकसुधनेपाल कृतवान् ॥ राजा श्रीनन्ददेवं. वर्ष २०

६. सम्वत् २६७ पौषकृष्णत्रयोदश्यां, शुक्लदिने, श्रीरुद्रदेव, पु-
७. ष्याभिषेक कृतवान् राज्ये ॥ पुष्याभिषेकात, तुषारे वृष्टिं च भवति ॥

[८ पृष्ठ]

१. राजा रुद्र)देव वर्ष ८० मास १ ॥ राजा श्रीमृतदेव, वर्ष ३ मास ११ ॥ महा
२. (मारीदुर्भिक्ष) भवति ॥ सम्वत् २९९ कार्त्तिके कृष्ण षष्ठि शुक्लवार ॥ रा-
३. (राजा श्री) सोमेश्वरदेव, पृष्याभिषेक कृतवान् ॥ राजा श्रीसोमेश्वर व-
४. .. मास ३ ॥ युवराजा महेन्द्रदेवेन कृत, महेन्द्रसरोवर ॥ सम्व-
५. ... ९ वैशाख शुक्लपूर्ण्णमी राजा श्रीगुनकामदेव, पुष्याभिख
६. (कृ)तवान् ॥ सम्वत् ३०५ पोष शुदि ७ अंगवासरे । राजा श्रीवि-
७. (जय) कामदेव, वर्ष ६ । ७ मास ॥ राजा श्रीअरिमल्लदेव वर्ष ३१ मा

[९ पृष्ठ]

१. स ९ ॥ तस्यराज्ये मरकदुर्भिक्षं च प्रादुभूतः दंमेन, अन्न कुड-
२. द्वयमभूत् ॥ राजा श्रीअभयमल्लदेव, वर्ष ४८ मास २ ॥ माहा
३. मारी अनावृष्टि, दुर्भिक्षप्रजाक्षय, भूमिकंप छत्रभङ्ग ॥ सम्व-
४. (त् ३) ७५ आषाढ शुक्ल २ पुनर्व्वसु, सोमवासरे ॥ राजा श्रीजयदे-
५. (व, व)र्ष २ मास ७ ॥ राजा श्रीअनन्तमल्लदेव, वर्ष ३२ मास १० श्री-
६. (पशुप)तिभट्टारकस्य, ध्वजरोहनं कृतं, श्रीपशुपतिभट्टारका-
७. ... ददेत । तस्य राजा, कुराज्यं च चिंतापहारी, कुमरवनं ।

[१० पृष्ठ]

१. ... नाश करोति ॥ ॥ सम्वत् ४०८ पौषमासे जयतारी प्र-
२. (विष्ट प्र)थमं ॥ ॥ सम्वत् ४१४ फाल्गुण मास द्वितीया, वार प्रवि-
३. (ष्ट) खशिया, प्रवेस ॥ ॥ सम्वत् ४११ माघमास, तिरहुतिया
४. भगतग्रामे प्रविष्ट ॥ ॥ सम्वत् ४३१ माघमास, तिरहुतिया
५. ललितग्रामे प्रविष्टः । राष्ट्रे अतिसंतापः दण्ड प्रच्यते, प.त्र

६. सृष्टवंधनं महत्पीडा ॥ ॥ नेपाले ज़ु राजि ी िरमदेवीनां
७. कृत ो ेश्वरनीमंदेवकृत, पुनः चंगु देन कृतं, ध्वजा

[११ ृष्ठ]

१. रोहन च । पुन इन्द्रकूट प्रतिष्ठितं, ध्वजारोहनं च । जयशक्ते
२. मांता विरमदेवी, तत्रान्तरे, राजा जयानन्ददेव, वर्ष ॥
३. अनन्तरे जयतुङ्गमल्लस्य, आत्मजः श्रीजयरुद्रमल्लदेवस्य
४. प्रभूतेन स्वकुटुंव, श्रीजयारिमल्लदेव, पृष्याभिषेकं कृत्य रा
५. (ज) भुक्तिमात्र ददौ ॥ समस्त नेपाल जयरुद्र इति । नवक्वष्ठ
६. ... म् करोति, नेपाल भक्तग्रामे, क्षत्र विक्रीत, वहुतर, जय-
७. ...सोर्गस्थ ॥ ॥ सम्वत् ५४६ आषाढ पुर्ण्णमी द्वारा ४ समे-

[१२ पृष्ठ]

१. ... जायमान कतिपयदिवसान्तरे मृत्युः । पुत्री स-
२. (ती नायक) देवी नामं, पितामही, श्रीपदुमल्लदेवीनां, प्रतिपालि
३. (ता श्रीदेव) लदेवीद्वयोरपि, भक्तग्रामे, राज्यं कृतवान्, मण्डप
४. (भूमीकं) संकृत्य, तिलमाधवस्थाने, तत्रान्ते, आदित्यमल्ल, नेपा-
५. दि प्रविष्ट ॥ ॥ सं. ४४८ चै. शु १५ उत्रफाल्गुनी, शुक्लदिने, ललित
६. ग्रामे दण्डेन भवति ॥ तत्रान्तरे, काशीश्वर, सोमवंश, हरिश्चन्द्र
७. देव समागमन, येन विवाहं करोति, श्रीनायकदेवी, कतिपय

[१३ पृष्ठ]

१. वर्षान्तरे शिष्टेन, विषभक्षणेन मृत्युः कतिपयपात्रस्यष्ट
२. मानयति ॥ तत्रान्तरे, कर्ण्णाटवशिज श्रीजतसिंह देव समाहित
३. संगृह्य पुत्री श्रीराजलदेत्री नाम, दश दिनान्ते, माता स्वर्गगक
४. ...पितामह्या, अतिकटेन, प्रतिपालिता, श्रीदेवलदेवी नाम, कृ-
५. ...पतिपालिता जीविता च ॥ अथान्तले, श्रीपसु(प)तिमल्लदे
६. (व वन्धनं क) रोति ॥ नेपालसमस्त सम्मतेन उभयराजकुल
७. (मानमतेन), सं. ४६४ श्राव. वदि ४ ॥ श्रीजयराजदेव राज

[१४ पृष्ठ]

१. (कृत्य), सर्व्वसंमतेन, सं ४६७ वैशाख शुदि ७ तस्य, पिता श्रीजया
२. (नन्द) देव, माता ललितग्रामे, उत्तरविहार, राजेन्द्रपाल पा-
३. त्रस्य, पुत्री । जयराजदेवस्य, पत्नी कर्ण्णाटवंशज, श्रीरुद्रम
४. ल्लदेवनाम, त.ग्र पुत्र, श्रीतस्मिन्मय उभयराजकुल एकत्व ॥
५. सं. ४६८ श्रीदेवलदेवीनां कोख कृतं, श्रीपशुपतिर्ददातु । सं. ४६-
६. ९ श्रीजयराजदेवेन, कोख कृतं, श्रीपशुपति ददातु ॥ तदन्त-
७. रे पुव्वां श्रुतानागतः ॥ अक्ष वंशावलि लिख्यते ॥ ॥ ॥

[१५ पृष्ठ]

१. नन्देन्दुशून्यशशि १०१९ सम्मतशाकवर्षे, तच्छ्रावनस्य धव-
२. ले मुनितिथ्यधस्तात् । स्वात्यां शनैश्चरदिने रिपुमर्दलग्ने श्री-
३. नान्यदेवनृपतिर्विदधीत वास्तुं ॥ स्रष्टा नान्यपतिर्व्वभूव तदनु
४. श्री गांगदेवो नृप, स्तत्सूनुर्न्नरसिंहदेवनृपति श्रीरामसिंहस्त-
५. तः । तत्स्नुर्भवसिंहदेव उदितः श्रीकासिंहस्तत. स्तत्सूनु-
६. (र्ह) रसिहदेवनृपतिः कार्ण्णाटचूडामणि ॥ ॥ वाणब्धियु
७. (ग्म)शशि, १२०५ सम्मत शाकवर्षे, पौषस्य शुक्ल नवमी र-

**अनुवाद**

... देव; वर्ष २६ । तिनले फेरि भोटान्त (भूटान) सम्म निष्कण्टक राज्य गरे । राजा श्रीबलदेव; वर्ष ११ । राजा श्रीबालार्जुनदेव; वर्ष २१ महिना ७ । ... तिनले दुर्ग भट्टारकलाई आफ्नो मुकुट चढाए । राजा श्रीमानदेव; वर्ष ३६ । तिनले बहुलनादं तवनीमिको प्रतिष्ठा गरे ।

राजा श्रीराघवदेव; वर्ष ६३ महिना ६ । उनले श्रीपशुपति भट्टारकलाई लक्ष्य गरी संवत् चलाए । राजा श्रीशङ्करदेव; वर्ष १८ महिना ६ । राजा श्रीसहदेव; वर्ष ३३ महिना ९ । राजा श्रीविक्रमदेव; वर्ष १ । राजा श्रीनरेन्द्रदेव; वर्ष १ महिना ६ ।

राजा श्रीगुणकामदेव; वर्ष ८५ महिना ६ । उनले पशुपति भट्टारकलाई एघाङ्ग कोश चढ़ाए । त्यहीं ईशानेश्वर वासुकिभट्टारकलाई एघाङ्ग कोष चढाए । त्यहीं लाभो चपली बनाए; सुन्धारा बनाए । कोटिहोम पूर्ण गरे ।

राजा श्रीउदयदेव; वर्ष ६ । राजा श्रीनिर्भयदेव वर्ष ५ । राजा श्रीभोजदेव+रुद्रदेव; वर्ष ९ महिना ७ । ती भोजदेवले श्री(मण्डप) नाश

पारे । राजा श्रीलक्ष्मीकामदेव; वर्ष २१ । तिनले संवत् ... मा राष्ट्रमा शान्ति गरे ।

राजा श्रीजयदेव; वर्ष २० । तिनले ललितपुरमा आधा राज्य गरे (ललितपुर) मा संयुक्तशासन कायम गरे । राजा श्रीभास्करदेव र जयदेव दुवै राजा भए (द्वैराज्य कायम गरे ।) । ती भास्करदेवले बाबुको शिरपेच (मुकुट) बेचे । सुनको मनोहर भट्टारकको प्रतिमाको सुन नासे; त्यो दोषले अन्धो भए ।

राजा श्रीबलदेव; वर्ष १२ । तिनले अत्यन्त सहकाल पारे । तिनले वजरत्थ (वृजिकरथ्या, हाँडीगाउँ) मा हरिपुर बनाए । राजा श्रीपद्मदेव; वर्ष ६ । तिनले मुकुट बनाए । राजा श्रीनागार्जुनदेव; वर्ष ३ । राजा श्रीशङ्करदेव; वर्ष १७ । तिनले नन्दीशाला (नक्साल) मा शङ्करेश्वर भट्टारकको प्रतिष्ठा गरे; देवमन्दिर पनि पूरा पारे; राष्ट्रमा शान्ति फैलाए । ... विहार पनि बनाए; भगवती मनहर भट्टारिकालाई ... ।

राजा श्रीवामदेव; वर्ष ३ । राजा श्रीहर्षदेव; वर्ष १६ । ...

नेपालसंवत् २१९ लाग्दा राजा श्रीशिवदेव भए; वर्ष २७ महिना ७ । तिनले पशुपति भट्टारकलाई सुनको छाना चढाए । अनि कीर्तिपुरमा बलखुनदीमा बाँध बाँधे । ... धारा, कूवा, पोखरी बनाए; सारा मानिसलाई आनन्द दिए । चारतले पञ्चपुरसहितको श्रीराजदरबार राम्ररी जग हाली बनाए । श्रीपशुपतिभट्टारकलाई चाँदीको कमल चढाए । उहिले द्रम्मको व्यवहार चलेको थिएन; सुनको रक्तिकाको व्यवहार चल्दथ्यो । शिवदेवले आफ्नो 'श्रीसिंह; नाम अङ्कित चाँदीको द्रम्मको व्यवहार चलाए । 'श्रीशिव' अङ्कित सुनको शिवकाङ्क (सुकी) चलाए । पूर्वशिखर नारायण (चाँगुनारायण) को परिवारसहित जीर्णोद्धार गरे ।

राजा श्रीइन्द्रदेव; वर्ष १२ । राजा श्रीमानदेव; वर्ष ४ महिना ७ । राजा श्रीनरेन्द्रदेव; वर्ष ६ महिना ४ ।

नेपालसंवत् २६७ (वि.सं. १२०३) माघ कृष्ण प्रतिपदा सोमवारका शुभ दिनमा राजा श्रीआनन्ददेवको राज्याभिषेक गरियो । तिनले समस्त नेपालगए...को रक्षा गरे; प्रजालाई नाश हुनबाट बचाए; पीडा हरे । शास्त्रअनुसार निर्माणकार्य गर्ने यस्ता गु...ी राजा श्रीआनन्ददेव भए । तिनले भक्तपुरमा शिवगलटोलमा दुइटा देवताको प्रतिष्ठा गरे । त्रिपुरसहित राजधानीको प्रतिष्ठा गरे; राजकुलको नजिकै सुन्धारा बनाए । श्रीनेपालमा महामाण्डलिक, महापात्र आदिदेखि सारा प्रजा आदिका छोरानातिहरूसम्मका ... दुःख, पीर नहुने पारे । ... चोरहरूलाई सखाप पारी महात्माले गर्ने काम गरे । तिनले शुक्रदिनमा सुधनपाल नाटक बनाए । राजा आनन्ददेव; वर्ष २० ।

ने.सं. २६७[२] (वि.सं. १२०३) पौष कृष्ण त्रयोदशी शुक्रवारका दिन श्रीरुद्रदेवको पुष्याभिषेक गरियो । पुष्याभिषेक गरिएको हुनाले तुसारो पऱ्यो । राजा श्रीरुद्रदेव वर्ष ८०[३] महिना १ ।

राजा अमृतदेव; वर्ष ३ महिना ११ । महामारी दुर्भिक्ष भयो । ने.सं. २९९ (वि.सं. १२३५) कार्तिक कृष्ण षष्ठी शुक्रवारको दिन राजा श्रीसोमेश्वरदेवको पुष्याभिषेक गरियो । राजा सोमेश्वरदेव वर्ष ... , महिना ३ ।

युवराज महेन्द्रदेवले महेन्द्र सरोवर बनाए; ने.सं. ... ९ वैशाख शुक्ल पूर्णिमाका दिन (उक्त सरोवर बनाइएको हो) ।

ने.सं. ३०५ पौष शुक्ल सप्तमी मङ्गलवारका दिन श्रीगुणकामदेवको पुष्याभिषेक गरियो । राजा श्रीविजयकामदेव वर्ष, महिना ।

राजा श्री अरि मल्लदेव; वर्ष ३१ महिना ९ । तिनको राज्यमा महामारी अनिकाल फैलियो; एक दम्मले अन्न एक कुडवमात्र पाइने भयो ।

राजा श्रीअभयमल्लदेव; वर्ष ४८ महिना २; महामारी फैलियो; पानी परेन; अनिकाल भयो; प्रजाको क्षय भयो; भुइँचालो गयो; छत्रभङ्ग भग्यो ।

ने.सं. ३७५ (वि.सं. १३१२) आषाढ शुक्ल द्वितीया सोमवार पुनर्वसुनक्षत्रमा श्रीजयदेव राजा भए; वर्ष २ महिना ७ । राजा श्री अनन्त मल्लदेव; वर्ष ३२ महिना १० । तिनले श्रीपशुपति भट्टारकलाई ध्वजा चढाए । श्रीपशुपति भट्टारक ... देओस् । ती राजाको खराब राज्यमा... नाश गरे ।

ने.सं. ४०८ (वि.सं. १३४४) पौष महिनामा जितारि मल्ल पहिलोपल्ट (काठमाडौं-उपत्यकामा) पसे । ने.सं. ४१४ (वि.सं. १३५०) फाल्गुन महिनामा दोस्रोपटक खसियाको (जितारि मल्लको) प्रवेश भयो ।

ने.सं. ४११ (वि.सं. १३४७) माघ महिनामा तिरहुतेहरू भक्तपुरमा पसे । ने.सं. ४३१ (वि.सं. १३६७) माघ महिनामा तिरहुतेहरू ललितपुरमा पसे । राष्ट्रमा ठूलो पीर पऱ्यो; दण्ड गरियो; पात्रहरू; श्रेष्ठहरू कैद गरिए । ठूलो दुःख भयो ।

युवराज्ञी विरम्मदेवीले नेपालमा सामेश्वरनिमम् देवालय बनाउन लगाइन् । फेरि चाँगुनारायणको देवालय बनाउन लगाइन्; ध्वजारोहण गरिन्; फेरि इन्द्रकूटको प्रतिष्ठा गरिन्; ध्वजारोहण पनि गरिन् । विरम्मदेवी जयशक्तिकी आमा हुन् ।

---

२ यो २८७ (वि.सं. १२२३) हुनुपर्थ्यो; सार्नेले अशुद्ध पारेको देखिन्छ ।

३ यो ८ हुनुपर्थ्यो; लेख्नेले भूल गरेको देखिन्छ ।

त्यसबीच जयानन्ददेव राजा भए; वर्ष । यसपछि जयतुङ्गमल्लका छोरा श्रीजयरुद्रमल्लदेवले आफ्नो प्रभुत्वले आफ्ना नातेदार श्रीजयारिमल्लदेवको पुष्पाभिषेक गराए; राजालाई भुक्तिमात्र दिलाए; नुवाकोटसम्मका सारा नेपालमा श्रीजयरुद्रमल्लदेवले आफैं राज्य गरे । भक्तपुरमा धेरै खेत बेचे । ने.सं. ४४६ (वि.सं. १३८३) आषाढ पूर्णिमाका दिन रुद्रमल्लको मृत्यु भयो । स्वास्नीहरू ... सती गए । (तिनका छोरा) जन्मी केही दिनमै मरेका थिए । छोरी नायकदेवीलाई बज्यै श्रीपदुमलदेवी र श्रीदेवलदेवीले पालिन् । भक्तग्राममा राज्य गरे । तिलमाधवस्थानमा मण्डप, धारा आदि बनाए ।

त्यसबीच आदित्यमल्ल नेपालमा पसे । ने.सं. ४४८ (वि.सं. १३८४) चैत्र शुक्ल पूर्णिमाका दिन ललितग्राममा दण्ड उठाइयो ।

त्यसपछि काशीश्वर सोमवंशका हरिश्चन्द्रदेव नेपाल आए । जसको नायकदेवीसँग विवाह भयो । केही वर्षपछि शिष्ट (श्रेष्ठ= भारदार)हरूले विष खुवाइएका हुनाले (हरिचन्द्रदेवको) मृत्यु भयो । केही पात्रहरू .... ।

यसबीच कर्णाटवंशज श्रीजगत्सिंहदेवले (नायकदेवीलाई) ल्याइते पत्नी बनाए । तिनकी छोरी श्रीराजल्लदेवी नामकी हुन् । तिनी जन्मेको दश दिनपछि आमा (नायकदेवी) को मृत्यु भयो । पितामही (बज्यै) श्रीदेवलदेवीले अति कष्टपूर्वक पालिन् र तिनी (राजल्लदेवी) बाँचिन् ।

यसबीच श्रीपशुपतिमल्लदेव कैद गरिए ।

ने.सं. ४६७ (वि.सं. १४०४) श्रावण कृष्ण चतुर्थीका दिन, सारा नेपालका अनुमतिले तथा दुवै राजकुलका अनुमतिले श्रीजयराजदेव राजा बनाइए । ... जयराजदेवका बाबु श्रीजयानन्ददेव हुन् । आमा ललितपुर उत्तरविहारका महापात्र राजेन्द्रपालकी छोरी हुन् । जयराजदेवकी पत्नी कर्णाटवंशमा जन्मेकी श्रीरुद्रमदेवी हुन् । यसरी तिनका छोरा (जयार्जुनदेवमा) दुवै राजकुलको एकता भएको थियो ।

ने.सं. ४६४ (वि.सं १४०१) श्रीदेवलदेवीले पशुपतिलाई कोष चढाए । ने.सं.. ४६९ (वि.सं. १४०६) मा श्रीजयराजदेवले श्रीपशुपतिलाई कोष चढाए ।

त्यसपछि पूर्वतिरबाट सुलतान (शमसुद्दीन) आयो । अनि वंशावली लेखिन्छ-

शकसंवत् १०१९ (वि.सं. ११५४) श्रावण शुक्ल द्वितीया शनैश्चरवार स्वातिनक्षत्र रिपुमर्द लग्नमा श्रीनान्यदेव राजाले राज्यस्थापना गरे । राज्यसंस्थापक नान्यदेव भए । त्यसपछि गाङ्गदेव भए । तिनका छोरा नरसिंह भए । त्यसपछि श्रीरामसिंह भए । तिनका छोरा भवसिंहदेव भए । त्यसपछि श्रीकर्मसिंह भए । उनका छोरा कर्णाट राजामा श्रेष्ठ हरसिंहदेव भए । शकसंवत् १२४५ (वि.सं. १३८०) पौष शुक्ल नवमी शनिवार .....

## परिशिष्ट ३

ॐ नमो गणेसाय नमः ॥ ॥ स्वस्ति श्री क्रमेण वर्त्तमाने कलियुगे ग्रास्त भूपाटोल मोलिमालाचरणांवुजस्य रात श्रीमत् पृथिवीश्वर राजहिमवत्-शैलमध्येवनिर्म्मित महातीर्थ भूतमण्डले भृंगेश्वर भट्टारक श्लेष्मातकवने विराजिते स नेवानाम गोपालो वभूव. तस्य कपिला गवी वाग्मती तीलं गत्वा तण्क्षीरधारया सिक्त भूप्रदेशे श्रीमत्पशुपति प्रतिष्ठा कृताः ततः परेण गोपालवंशाना क्रमेण राज्यं भुंजितं ॥ एस्तै युग्मा गोपालहरू राजा भयाका हुन् । नेपालेश्वर वन्दन ताहां । देषि भैआयाको हो. तब ताहां श्रीपतिका कृपाले श्रीपृथिवीका राजा गोठालो राजा भयाको हो ।

| | | |
|---|---|---|
| | | श्रीमतिगुप्त राजा ७ मा ३ दि ७ |
| श्रीभूमांगद राजा | व १ मास ८ दि ८ | श्री जयगु त राजा ९ गा ७ दि १ |
| श्रीजयगुप्त राजा | व ३ मास ४ दि ४ | श्रीमर्मगुप्त राजा २ मा ७ दि ३ |
| श्रीहर्षगुप्त राजा | व ५ मास ६ दि ५ | श्रीपरमगुप्त राजा ५ मा ९ दि १ |

(२)

| | | |
|---|---|---|
| श्रीभीमगुप्त राजा | वर्ष ६ मा ३ दि ८ ॥ | इनि गोपालहरू राजाले रजाई गऱ्याका |
| श्रीविष्णुगुप्त राजा | वर्ष ८ मा ४ दि ६ | वर्ष सह जमा वर्ष ५४९ दि ९ राजाको |
| श्रीवरसिंह राजा | वर्ष १ मा ४ दि ९ | जंमा १२– फेरि इनि राजाहरूले |
| श्रीभवनसिंह राजा | वर्ष ३ मा ४ दि १ | लजाई गल्याका वर्ष ३ मा ३ दि ३ |
| श्रीजयसिंह राजा | वर्ष २ मा २ दि ७ | ॥ ताहां प्रात इनि गोपाललाइ जितिक |

कन किलाति राजा हुन आयाका किलाति राजाहरूका वंश.वर्ल। जना २८ ले रजाई गल्याकाः वर्ष सह जंमा १८९ मास ११

| | | |
|---|---|---|
| | | श्री डस्कर राजा व ७ मा ४ दि १ |
| श्री ऐरेवं राजा | वर्ष १ मा ९ दि ० | श्रीपर्व राजा व १९ मा ५ दि ६ |
| श्रीधस्कर राजा | वर्ष ३ मा ३ दि ७ | श्रीपंव राजा व ११ मा ७ दि १ |
| श्रीहृतिराजा | वर्ष ५ मा ४ दि १ | श्रीधनद राजा व १३ मा ५ दि ५ |

(३)

| | |
|---|---|
| श्रीगिध्रिराजा व १५ मा ६ दि १२ | श्रीथार राजा व १८ मा ७ दि १ |
| श्रीमनवीर राजा व २ मा ७ दि ९ | श्रीपुस्कर राजा व २३ मा ८ दि १ |
| श्रीवरंव राजा व ४ मा ३ दि ७ | श्रीगुरंज राजा व २६ मा ७ दि ९ |
| श्रीहुनपति राजा व ६ मा ५ दि ० | श्रीगरिंज राजा व २८ मा ८ दि ११ |
| श्रीसूर्य्यस्व राजा व ८ मा ३ दि ८ | श्रीसुंगुराजा व २४ मा ७ दि २ |
| श्रीझंके राजा व १७ मा ६ दि १ | श्रीजितश्री राजा व १० मा ७ दि १ |
| श्रीथुंको राजा व १९ मा ८ दि ३ | श्रीकिकि राजा १२ मा ५ दि ६ |
| श्रीगुंज राजा व २१ मा ७ दि २ | श्रीथुंको राजा १४ मा ५ दि ८ |
| श्रीकेश राजा व २३ मा ५ दि ३ | श्रीजने राजा १६ मा ३ दि २ |
| श्रीसंरा राजा व २५ मा ६ दि ३ | |
| श्रीवर्म्मराजा व १८ मा ७ दि २ | |

इति किलाति राजारे रजाई गल्या पछि इति किलाति राजालाई जितिकन सूर्य्यवंशी राजाहरूले रजाई गल्याका सह जमा २७३

(४)

श्रीनिषि राजा १ मा ५ दि ०
श्रीकामवर राजा ३ मा ० दि ६
श्रीभास्वर राजा १ मा ० दि ०
श्रीमतारा राक्षस राजा २ मा ९ दि १
श्रीपशुपुष्प राजा ४ मा ५ दि ६

जमा ५ इनि राजाले श्रीपशुपतिका देवल बनाया । चार वर्ण बसालिकन श्रीपशुपतिका कृपाले प्रसाद पाइकन दक्षिण महोदधि समुद्रसंम राज्ये जिति बहुतै हेला मोति सुवर्ण ल्याइकन श्रीपशुपतिमा चधाया । तब सुवर्णपुरि ब्वलायाको हो । ताहांपछि इनका छोराहरूको वंशले रजाई गल्याको सह जंमा ५४३ मा ११ दि १८

| | |
|---|---|
| | श्रीज्येष्ठवर्म्म राजा व ७ मा ४ दि ८ |
| श्रीभूमिवर्म्म राजा व १ मास ४ दि १ | श्रीहरिहरवर्म्म राजा व २१ मा १० दि ३ |
| श्रीजयवर्म्म राजा व ३ मा ६ दि २ | श्रीहरदत्तवर्म्म राजा व २१ मा २ दि ५ |

श्रीसर्ववर्म्म राजा व ५ मा ९ दि ६

श्रीचन्द्रवर्म्म राजा व २ मा ५ दि १

श्रीवर्चवर्म्म राजा व ४ मा ५ दि १

(५)

श्रीपृथ्वीवर्म्म राजा व ६ मा ५ दि ३
श्रीस्तुषेणवर्म्म राजा व ८ मा ७ दि ५
श्रीसिद्धिवर्म्म राजा व १० मा ६ दि १

इन राजाका पारामा श्रीचागुनारायण इचंगुनारायण सिखरनारायण विसंखुनारायण इति चार नारायणका देग्वर बनाइ गूठचह्लाया ११ राजा

मृत्यु भयापछि इनि राजाहरूको वंशले लजाई गल्याका सह जंमा वर्ष ३२० मा ८

श्रीविष्णुवर्म्म राजा व १ मा ३ दि ३
श्रीशिववृद्धि राजा व ३ मा २ दि ७
श्रीशिवदेउवर्म्म राजा व ५ मा ५ दि ७
श्रीपतिवर्म्म राजा व २ मा ३ दि ५
श्रीवसन्तदेववर्म्म राजा व ४ मा ६ दि १
श्रीवृषभदेओवर्म्म राजा व ६ मा ५ दि ८

इनि राजाले चाबहीरमा बौद्ध स्थापना गरि देवर बनाया फेरि श्रीपशुपतिमा लोहाको त्रिशुल चधायाको हो इन राजालाइ जिति धपाइकन फेरि सूर्य्यवंशी राजा भया. इन सूर्य्यवंसीले रजाई गल्याका जंमा वर्ष १६ मा ३ ञाहासंमका सूर्य्यवंसीको रजाइ भयाका हो

(६)

इनै राजाका पालामा वाग्मतिमा, थुरो पथेर कुंधिकन रामचन्द्र ल(व)हरि कुशहरि समेत बनाइकन देवराजा हुन आयाका हुन् ञायां प्रांत देवराजाका वंशहरूरे रजाइ गल्याका वर्ष जंमा १९२ मा ९

श्रीशिवदेव राजा व १ मा ४ दि १
श्रीकृष्नवर्म्म राजा व ३ मा ४ दि ३
श्रीनरेन्द्रदेव राजा व ६ मा १ दि ९
श्रीनरेन्द्रदेव राजा व ७ मा २ दि २
श्रीअशुवर्म्म राजा व २ मा ४ दि ३

श्रीभीमार्ज्जुन राजा व ४ मा ३ दि ७
श्रीवीरदेव राजा १६ दि १३

इनै राजाका पारामा सिंगोर द्वीपदेषि मछिन्द्रनाथ पातनमा ल्याया हुन् ताहादेषि मछिन्द्रनाथ्को यात्रा भयाको हो. इतिक वर्षे वुस्वादु मुनिरसाग्नयः ॥ ३६७६ नेपाल विजयी श्रीमानायावलोकितेश्वर कलि संवत् ३६७६ एति कलियुगका वर्ष जांदा श्रीमछिन्द्रनाथ नेपाल

(७)

आयाका हुन् ञाहां प्रात पनि देव राजा रजाया जंमा वर्ष २२५ मा १० दि ७ ॥

श्रीबलदेव राजा व १ मा १ दि ७
श्रीवर्द्धमानदेव राजा व ३ मा १ दि ६
श्रीजयदेव राजा व ५ मा ४ दि २
श्रीविक्रमादित राजा व ७ मा १ दि ४ मृत्यु
श्रीशंकरदेव राजा व ३ मा १ दि २
श्रीवलिदेव राजा व ४ मा ७ दि ७
श्रीवारार्ज्जुन राजा व ६ मा ६ दि ६

एहि राजाले वासुकि छानामा, तावाको छाना बनाई सुनको धारा बनायाको हो. कोटिधन श्रीपतिमा चधाया कोटि होम गऱ्या. ञाहां प्रांत भोज देव राजा रजाई गर्ण आया इनका वंशले रजाई गल्याका वर्ष सह जंमा ५० ॥

श्रीभोजदेव राजा व १ मा ९ दि ०
श्रीजयदेव राजा व ३ मा ० दि २०
श्रीलक्ष्मिकामदेव राजा व २ मा ० दि २१
श्रीभास्करदेव राजा व १ मा ७ दि १४
श्रीपद्मदेव राजा व ३ मा ६ दि १२
श्रीसंवर देव राजा व ५ मा ० दि १५
इनै राजाले पाटन आधा–

(८)

सहर मारिकन रजाई गऱ्याथ्या. ञाहां प्रांत भास्करदेव राजा हुन् आयाका हुन्. इनका वंशले रजाई गऱ्याका वर्ष जमा ४५।३।१६
श्रीवरदेव राजा व २।०।१२ मृत्यु
श्रीनागार्ज्जुनदेव राजा व ४।३।३ मृत्यु

इनै राजाले नसारमा शंकरेश्वर महादेव स्थापना गरि देग्वर बनाइ श्रीभगवतिका प्रतिस्था गल्याको हो । उप्रांत वामदेव राजा भया इनै राजाका वंशले रजाई गऱ्याका जंमा वर्ष ४६ ॥

श्रीवामदेव राजा व १ मा ३ ।०
श्रीहर्षदेव राजा व २ मा ०।१६
श्रीशिवदेव राजा व ३ मा ०।२७
श्रीभांदे राजा व १ मा ४।८
श्रीनन्ददेव राजा व ३ मा ०।२०
श्रीमित्रदेव राजा व ६ मा ३।०
श्रीअभयमल्ल राजा व ७ मा ४।८
श्रीनरेन्द्रदेव राजा व २।६।०
श्रीरुद्रदेव राजा व ४।८।०
श्रीनिदेव राजा व ६।३।१
श्रीजयमल्ल राजा व ८।२।२
श्रीआनन्दमल्ल राजा व ९।३।२
इनै राजाका पा–

(९)

रामा संवत् ४१४ सालमा तेह्रौत्या ब्राह्मण र षस नेपालमा आयाका हुन्. ताहांप्रांत नन्देन्दुसून्यशशिसंवीतक साक वर्ष १०१९ तच्छ्रावणस्य धवरे मुनितिथ्यधस्तात्. स्वात्यां शनैश्चरदिने रिपुमर्द्दलग्ने श्रीनान्यदेव नृपति विदधीत वास्तु । .....



धनवज्र वज्राचार्य
(वि.सं. १९८८-२०५१)

"Dhanavajra was almost like an oracle for most of us in the university campus. He was consulted and sought by the youth and old alike to discuss various tangled issues of ancient, medieval or modern Nepalese history ... he offered constructive suggestions to his colleagues and young scholars in his field."

– Prayag Raj Sharma
– Kamal Prakash Malla

"...I have just received a copy of your splendid book, Lichhavikalaka Abhilekha.... It is a remarkable work, a land mark in Nepalese studies and an invaluable tool in understanding the cultural history of Nepal.... Nepal must be proud of you for your achievement in the name of your country...."

– Mary S. Slusser, Smithsonian Institute

"Dhanavajra Vajracharya was a great historian of Nepal.... In a larger sense, all those who work on the culture and history of Nepal are in Dhanavajra's debt."

– David N. Gellner, University of Oxford

"मैंले पढाएका शिष्यहरूमध्ये सबैभन्दा योग्य"

- पं. नयराज पन्त, संस्थापक गुरूकुल

"आधिकारिक अनुसन्धानकर्ता, लगनशील विद्वान तथा सहृदय मित्र"

- त्रिरत्न मानन्धर, त्रिभुवन विश्वविद्यालय



**नेपाल र एशियाली अनुसन्धान केन्द्र (सिनास)**
त्रिभुवन विश्वविद्यालय
कीर्तिपुर, पो.ब.नं. ३७५७, काठमाण्डौ, नेपाल
फोनः ९७७-१-४३३२०७८, ४३३१७४०
फ्याक्स: ९७७-१-४३३११८४
ई-मेलः cnastu@mail.com.np
www.cnastu.org.np

